# हिन्दू नेवार संस्कार पद्धति



लेखक

डा. गोपाल धौबन्जार



# हिन्दू नेवार संस्कार पद्धति

लेखक
डा. गोपाल धौबन्जार

प्रकाशकः
रामभक्त धौबञ्जार
प्रभादेवी धौबञ्जार
नयाँबानेश्वर, काठमाडौं ।
फोन नं. ०१-४४८१४६०



प्रथम प्रकाशनः वि.सं. २०६८ चैत्र ३० (विश्वध्वोजत्थान)
(ने.सं. ११३२ चौलागा षष्ठी)

प्रथम प्रकाशनः ५०० प्रति

मूल्य रू. ३००।–

ISBN 978-9937-2-3810-6

मुद्रणः
रोल्वालिङ्ग प्रेस
नयाँ बानेश्वर, काठमाडौं
फोन नं. ९८५११०२२२९

# भूमिका

हिन्दू सम्प्रदायमा संस्कारको चर्चा अतिप्राचीनकालदेखि हुँदैआएको छ । संस्कार मान्ने चलन धेरै पहिलेदेखि भए तापनि यस शब्दको प्रयोग भने गृहसूत्रकालदेखि मात्र हुँदैआएको देखिन्छ । वैदिक साहित्यहरूमा संस्कार शब्दको प्रयोग भएको पाईदैन । हुनत वेदका सूक्तहरूमा संस्कारका केही अनुष्ठानहरूको चर्चा गरिएको छ । ऋग्वेदमा उल्लेख भएका विवाह, गर्भाधान र अन्त्यष्टि सम्वन्धी धार्मिक कार्यहरू र अथर्ववेदमा उल्लेख भएका विवाह, अन्त्येष्टि र गर्भाधानको चर्चा यहाँ उल्लेखनीय छ । गृहसूत्रहरूमा भने संस्कार शब्दको राम्रै विवेचन हुन थाल्यो । त्यसो भए तापनि ती शास्त्रहरूमा संस्कार शब्दको प्रयोग यज्ञ सामग्रीहरूद्वारा पवित्र बनाउने अर्थमा भएको छ । त्यसको भावार्थ व्यक्तिको जीवन शुद्ध र सफा पार्नु भन्ने बुझाउँछ । जीवनलाई आध्यात्मिक रूपमा शुद्ध पारी विद्यमान सामाजिक परम्पराअनुसार व्यक्तिको जीवन सुधार गर्नको निमित्त समुचित तरिकाले गरिने कार्य पद्धति नै संस्कार हो । त्यसकारण संस्कार र मानिसबीच नङ् र मासु जतिकै गाढा सम्बन्ध छ । समाजले संस्कारलाई महत्व दिनुको कारण यसले व्यक्तिलाई धार्मिक क्रियाकलापको माध्यमद्वारा प्रचलित मूल्य र मान्यता अनुरूप पूर्ण रूपमा योग्य सदस्य वनाउन शरीर, मन तथा मस्तिष्कलाई पवित्र वनाउनु हो । हुन पनि व्यक्तिअनुसार गुण र स्वभाव फरक फरक हुन्छन् । व्यक्ति स्वयम्ले आफ्नो, परिवार, समाज र राष्ट्रको निमित्त महत्वपूर्ण योगदान पुऱ्याउने वास्तविकतामा मूर्तिमत हुन सक्दैन । किनभने व्यक्तिको मन, वाणी तथा उसको भौतिक शरीरलाई सामाजिक परम्पराअनुसार परिवर्तन गर्नु पर्दछ । साथै उसमा अन्तरनिहित गुणहरूलाई प्रष्फुटन गराउनु अतिआवश्यक छ । त्यो कार्य संस्कारको माध्यमबाट सम्भव छ भन्ने कुरा हिन्दू सम्प्रदायको मान्यता हो ।

यहाँ उल्लेखित नेवार समाजमा प्रचलित संस्कार र यसका अनुष्ठानहरू परम्परादेखि प्रचलित हुँदैआएको वास्तविकतालाई प्रकाश

पारिएको छ । त्यो परम्परा शास्त्रीय सिद्धान्तमा आधारित रही व्यवहारिकतालाई पनि त्यतिकै महत्व दिएको यथार्थपरक छ । यसको निमित्त नीतिशास्त्रले निर्देशन गरिएका सिद्धान्त, मध्यकालमा प्रचलित परम्परा, त्यस परम्परालाई सहयोग पुऱ्याउन आधुनिककालमा तर्जुमा गरिएका ऐन कानून र हाल प्रचलित संस्कारसम्बन्धी क्रियाकलापलाई प्रस्तुत गरिएको छ । त्यसको निमित्त विभिन्न धर्मग्रन्थ, मध्यकालीन हस्तलिखितग्रन्थ तथा थ्यासफू, विभिन्न विद्वानहरूले रचना गरिएका सम्बन्धित पुस्तक आदिलाई यहाँ स्रोत सामग्रीको रूपमा प्रयोग गरिएको छ ।

संस्कारको सम्पादनले व्यक्तिलाई सभ्य र सुसंस्कृत बनाई जीवनलाई सार्थक बनाउन आवश्यक नीति निर्देशन र नियन्त्रण गर्दछ । मानिसको स्वभाव, मनोवृति र रूची व्यक्तिअनुसार फरक फरक हुन्छन् । सबैलाई आफ्नो स्वभावअनुसार कार्य एवं व्यवहार गर्न स्वतन्त्रता दिएमा समाजभित्र उछृङ्खलता बढ्न सक्ने सम्भावना हुन्छ । तसर्थ परम्परागत सामाजिक व्यवस्थालाई स्थायीत्व दिई व्यक्तिगत व्यवहारलाई नियमित बनाएर अनुशासन कायम राख्नको निमित्त सामाजिक नियन्त्रणको आवश्यकता पर्दछ । सोही अनुरूप मानिसको जीवनमा उमेरअनुसार शारीरिक रूपमा देखापर्ने परिवर्तित अवस्थाका प्रत्येक मोडमा संस्कारका अनुष्ठानहरूको माध्यमद्वारा आवश्यक ज्ञान प्रदान गरी परम्परागत मूल्य र मान्यताअनुसार समाजमा चल्न, बस्न र व्यवहार गर्न संस्कारको प्रतिपादन भएको हो । यसरी संस्कारको माध्यमद्वारा व्यक्तिको नैतिक, चारीत्रिक र बौद्धिक विकास हुने भएकोले प्राचीनकालदेखि समाजमा यसले महत्व पाउँदै आएको हो । यद्यपि सस्कार का अनुष्ठानहरू पूरा गर्नुको आशय के हो भन्ने कुरा मानिसहरुरूले हेक्का राख्न छोडी सकेका छन् । केवल परम्परा धान्नका लागि र मनोरञ्जन तथा खुशियालीको रूपमा मात्र संस्कार मनाउने परम्परा विकास हुँदैआएको छ । त्यसलाई हंटाई संस्कारको वास्तविकता र त्यसको औचित्य प्रष्ट्याउने यस पुस्तकको मूल उद्देश्य हो ।

गोपाल धौबन्जार

# बिषयसूची

पृष्ठ

## परिच्छेद : एक



## परिच्छेद : दुई

### संस्कार पद्वति

## परिच्छेद : तीन



**यो पुस्तक आफ्नो धर्म, संस्कृति र संस्कारको पालनामा प्रतिबद्ध सम्पूर्ण महानुभावहरूमा समर्पण गर्दछु ।**

# परिच्छेद : एक

## नेवार समूदायको सामाजिक स्वरूप

### पृष्ठभूमि

मानिस सामाजिक प्राणी हो । समाजको निमार्ण मानिसको समूहवाट हुन्छ र समाजमा विभिन्न धर्म, वर्ण, जातजाति, र संस्कारका मानिसहरू समाहित भएका हुन्छन् । तिनीहरूमा समानता, अन्योन्याश्रित र सहयोगको भावना रहेको हुन्छ । यस विषयमा परिभाषा दिँदै जे.एल. गिल्लीन र एफ.डब्लु.एच. ब्लाकमारले भनेका छन् कि समाज भनेको कुनैपनि समूहका मानिसहरूको थोरबहुत रूपमा आपसी भावना, आदर्श, परम्परा, रीतिरिवाज, जीवन पद्धतिप्रति आवद्ध भएर त्यसले आफ्नो अधिकार र उद्देश्यको परिभाषित गर्दछ ।[1] वास्तवमा समूहमा बसेका सबै मानिसहरूको आपसी सहयोग, सद्भाव, मित्रताले नै तिनीहरूलाई एकसूत्रमा आवद्ध गर्दछ ।

समाजको आफ्नै मर्यादा हुन्छ । त्यसलाई व्यवस्थित र मर्यादित बनाउन स्थानीय जनसमुदायले आवश्यक नियम कानूनहरूको तर्जुमा गरी राखेका हुन्छन् । त्यस्तो कानूनलाई हामीले सामाजिक नियम भन्दै आउने गरेका छौं । सामाजिक नियम परम्परागत रूपमा विकास भई धर्मले प्रभाव पारेको हुन्छ । साथै व्यवहारिकतालाई पनि त्यतिकै ध्यान दिएको हुन्छ । प्रत्येक व्यक्तिले समाजमा त्यस्तो नीतिनियम र रीतिरिवाजअनुसार चल्नु पर्दछ । त्यो सामाजिक मान्यता हो । समाजलाई व्यवस्थित र मर्यादित रूपमा अगाडि वढाउन प्रत्येक व्यक्ति शारीरिक रूपले सक्षम र मनोवैज्ञानिक रूपले नैतिकवान बन्नु आवश्यक छ । त्यसको निमित्त समाज र सम्बन्धित परिवारले आफ्ना सन्ततीहरूलाई सामाजिक नियम र परम्पराको राम्रो ज्ञान प्रदान गर्नु पर्दछ । व्यक्तिलाई ज्ञान र दीक्षा दिन खोजेर मात्र हुँदैन, त्यसको निमित्त दीक्षा लिने व्यक्ति स्वयम् शारीरिक रूपले पनि सवल हुनु पर्दछ भन्ने मनोवैज्ञानिक मान्यता छ । त्यसैलाई दृष्टिगत गरी हिन्दू सम्प्रदायमा

मानिसको अस्तित्व गर्भमा पदार्पण गराउन र गर्भधारण पश्चात् पनि समय समयमा विभिन्न धार्मिक तथा सांस्कृतिक प्रक्रिया पूरा गर्ने परम्परा रहिआएको छ । शिशुको जन्मपश्चात् उसको बढ्दो उमेरसंगै शारीरिक सबलता तथा मनोवैज्ञानिक विकासको लागि औपचारिक रूपमा परम्परागत सामाजिक रीतिरिवाज र नियम काइदाको ज्ञान प्रदान गर्न धार्मिक तथा सांस्कृतिक कार्य पूरा गर्दै जाने प्रचलन छ । यस्तो प्रक्रिया मानव जीवनको प्रत्येक चरणमा पदार्पण गर्दा सम्पन्न गरिन्छ ।

हिन्दू सम्प्रदायका मानिसहरू आफ्नो जीवनको मूलआधार नीतिशास्त्रलाई मान्छन् । नीतिशास्त्रमा मानव जीवनलाई सार्थक बनाउन जीवनको प्रत्येक चरणमा पूरा गर्नु पर्ने विधि विधानबारे प्रकाश पारी राखिएको छ । समाजका प्रत्येक जिम्मेवार नागरिकले त्यसलाई अवलम्बन गरी आफ्नो र सन्ततिको जीवनलाई सफल बनाउन चाहन्छन् । मानिस गर्भावस्था, बालकाल, युवा र बृद्धा मध्ये जुनसुकै अवस्थामा पनि निश्चित उमेरमा पुगेपछि शास्त्रीय मान्यताअनुसार विधि पूर्वक व्यवहारिक ज्ञान प्रदान गरिने परम्परालाई संस्कार भनिन्छ । यसले मानिसलाई स्थानीय परिवेशअनुसार सामाजिक, नैतिक र सांस्कृतिक नियमहरूको ज्ञान दिलाई समाजमा समायोजन हुनको निमित्त सक्षम बनाउँछ । व्यक्तिको उमेर बढ्दै जाँदा सामान्यतया नवजात, शैशव, बाल्य, यौवन, किशोर हुँदै बृद्धा अवस्थामा पुगेर अन्तमा मृत्यु हुन्छ । ती प्रत्येक चरणहरूमा प्रवेश गर्दा व्यक्तिलाई उसले प्राप्त गर्नु पर्ने निश्चित सामाजिक नीति नियमको पालना गर्नु र गर्न लगाउनु पर्दछ । हिन्दू सम्प्रदायमा गर्भावस्था र जीवनकालमा मात्र होईन मृत्युपश्चात् पनि संस्कार पूरा गर्ने परम्परा छ ।

यस सम्प्रदायका नेवार समुदायको आफ्नै प्राचीन सांस्कृतिक गौरव छ । शताब्दिऔं शताब्दिको अन्तरालबाट यस समुदाय आफ्नो सांस्कृतिक सम्पदाको विकास र विस्तार गर्दै आजको अवस्थामा पुगेको हो । यसै क्रममा परम्परागत शास्त्रीय मान्यताअनुसार संस्कारका अनुष्ठानहरू पूरा गर्दै आइरहेका छन् । हुनत नीतिशास्त्रहरूमा संस्कारका अनुष्ठानहरूको संख्या फरक फरक बताइएको पाइन्छ । यद्यपि नेवार समुदायमा आवश्यक र मुख्य संस्कारहरू मात्र पूरा गर्ने परम्परा छ । जसलाई दशकर्म पद्धति भनिन्छ । संस्कारका असंख्य अनुष्ठानहरूमध्ये व्यावहारिक पक्षलाई दृष्टिगत गरी दशकर्म पद्धति प्रचलनमा ल्याइराखेको देखिन्छ ।



## सामाजिक बनावट

नेपाल उपत्यका, जसलाई हिजोआज काठमाडौं उपत्यका भनिन्छ, को समाज अतिप्राचीनकालदेखि विकास हुँदैआएको हो । यहाँ परम्परादेखि बसोबास गर्दै आएका मानिसहरू नेवार कहलाएका छन् । यस नेवार समाजमा विभिन्न धर्म, वर्ण र जातजातिका मानिसहरू अवद्ध छन् । वंशावलीअनुसार उपत्यकामा आवादी गर्ने पहिलो जाती गोपाल (ग्वाला) हुन् ।[२] व्यवस्थित र सामूहिक बसोबासको साथै शासन व्यवस्थाको प्रारम्भसमेत तिनीहरूले गरेका थिए । पछिल्लो समय अरू विभिन्न वंश तथा जातजातिका मानिसहरूको प्रवेश हुन थाल्यो । नयाँ जातजातिको आगमनले उपत्यकाको समाज विस्तृत र बहुजातिय हुन पुग्यो । लिच्छवि शासनकालमा आई पुग्दा यहाँ किरात, लिच्छवि, वृजिक, मल्ल, शाक्य, कोली, आभिर आदि विभिन्न अठारजातका मानिसहरूको बसोबास भई सकेको थियो ।[३] बाहिरबाट यहाँ बसोबास गर्न आउने क्रम मध्यकालमा पनि जारी रह्यो । हरिसिंहदेव, उनको परिवार तथा सहयोगीहरूलाई यहाँ उदाहरणको रूपमा लिन सकिन्छ । नेपालमण्डलका शासक रूद्रमल्लको शासनकालमा सिम्रौनगढ (डोय) राज्यका शासक हरसिंहदेव दिल्लीका शासक गयासुद्दिनबाट पराजित भई सुरक्षाको लागि आफ्ना परिवारलगायत सहयोगीहरूका साथ उपत्यकातिर हिंडेका थिए । त्यसै बेला हरसिंहदेवको बीच बाटोमा नै मृत्यु भयो । यद्यपि उनकी रानी देवलदेवी, छोरा जगतसिंह तथा अन्य सहयोगीहरू उपत्यकामा आएर बसे । राजा रूद्रमल्लले देवलदेवी र जगतसिंहलाई आफ्नो दरबारमा शरण दिएर राखे ।[४] यसरी उपत्यकाभित्र नयाँ जातजातिहरूको आगमन भई रहेको हुँदा यहाँको समाज प्राचीनकालको तुलनामा अझै विस्तृत बन्न पुग्यो । उपत्यकाको भूबनावट र बातावरणले यहाँ बसोबास गरेका सबै जातजाती र रीतिरिवाजका मानिसहरूबीच आपसी सहयोग र मित्रताको भावना विकास गराई एउटा अलग पहिचान सहितको समाज निर्माण भयो । त्यसरी काठमाडौं उपत्यकाभित्र पहिलेदेखि बसोबास गर्दै अलग पहिचान कायम गरी आएका मानिसहरूलाई नेपाली समाजमा नेवार भन्ने गरिएको छ ।

नेवार समुदाय धार्मिक दृष्टिकोणबाट हिन्दू र बौद्ध दुई सम्प्रदायमा विभाजित छन् । नेपाल उपत्यकाभित्र यी दुवै सम्प्रदायको पहिचान प्राचीनकालदेखि रहँदै आएको छ । दुबै सम्प्रदायको सामाजिक स्वरूप एकै प्रकारको भए तापनि आआफ्नै सांस्कृतिक र धार्मिक विशेषताहरू छन् ।

हिन्दू नेवार समुदाय वर्ण व्यवस्थामा आधारित समाज हो । यस समाजमा ब्राह्मण, क्षेत्री, वैश्य र शूद्र चारै वर्णका मानिसहरू छन् । साथै प्रत्येक वर्णअन्तर्गत विभिन्न जातजाती छन् । वर्ण व्यवस्था हिन्दू सामाजिक संरचनाको मूल आधार हो । यो व्यवस्था धार्मिक सिद्धान्तवाट प्रभावित छ । शास्त्रीय कथनअनुसार भगवान ब्रह्माले लोकको वृद्धि गर्न आफ्नो शरीरको चार अङ्गहरू मुख, पाखुरा, कम्मर र पैतलावाट क्रमशः ब्राह्मण, क्षेत्री, वैश्य र शूद्र उत्पन्न गरेको भनिन्छ ।[५] हुनत यस भनाइमा वैज्ञानिक दृष्टिकोणबाट कुनै किसिमको सत्यता रहेको देखिन्दैन । तर यस व्यवस्थाले प्रत्येक वर्णको कर्तव्य निर्धारण गरी समाजलाई धर्म र कर्म दुवै तरिकाबाट व्यवस्थित गर्न खोजिएको देखिन्छ । तत्कालीन समाजमा शास्त्रीय मान्यताअनुसार सबैले आआफ्नो कर्तव्य पालन गर्नु पर्दथ्यो । त्यसो नगरिएमा समाज अगाडि वढ्न नसक्ने भएकोले यस व्यवस्थाको माध्यमद्वारा मानिसको पेशागत कार्यलाई अगाडि ल्याएको बुझिन्छ ।

काठमाडौं उपत्यकामा वर्ण व्यवस्था लिच्छविकालदेखि नै प्रचलित थियो । तत्कालीन अभिलेखमा "ब्राह्मणलगायत चाण्डालसम्म" भन्ने वाक्य उल्लेख भएको पाइन्छ ।[६] यसले लिच्छविकालमा चारैवर्णका मानिसहरू थिए भन्ने बुझाउँछ । वंशावलीमा लिच्छविवंशका शासक सुपुष्पले यो व्यवस्था प्रचलनमा ल्याएको बताइएको छ ।[७] तत्कालीन शासकहरू वर्ण व्यवस्थालाई प्रभावकारी ढङ्गवाट लागु गर्न तत्पर थिए । किनभने कुनै वर्णले आफ्नो कर्म नगरेमा "धर्मसंकर" उत्पन्न हुनसक्थ्यो । यसप्रति शासक तथा जनता सबै सचेत थिए । तत्कालीन शासक शिवदेव द्वितीयले बलम्वुको अभिलेखमा वर्ण व्यवस्थालाई उचित तरीकावाट लागु गरेको कुरा उल्लेख गरेका छन् ।[८] तत्कालीन परिस्थितिलाई मूल्याङ्कन गर्दै इतिहासकारहरूले लिच्छविकालमा वर्ण व्यवस्थाप्रति कुनै किसिमको आघात नपुगेको विचार व्यक्त गरेका छन् ।[९] त्यतिवेला आफ्नो कर्तव्य पालन नगरेमा त्यससम्वन्धी मुद्दा हेर्नको निमित्त भट्टाधिकरण नामको छुट्टै केन्द्रीय कार्यालयको व्यवस्था गरिएको थियो । यसले लिच्छविकालीन समाजमा वर्णव्यवस्थाको ठूलो महत्व रहेको तथ्यलाई प्रकाश पार्दछ ।

मध्यकालीन नेवार समुदायका हिन्दूहरूको सामाजिक बनावट पनि प्राचीनकालमा जस्तै वर्ण व्यवस्थामा आधारित थियो । तत्कालीन समाजमा ब्राह्मण, क्षेत्री, वैश्य र शूद्र चारै वर्णका मानिसहरू थिए । जयस्थिति



मल्लले देशमा सामाजिक सुधार गरी विभिन्न थिति बाँधी दिएका थिए । यसै क्रममा राजाको मृत्यु हुँदा अग्नी संस्कारमा चारै वर्णका मानिसहरू घाटमा उपस्थित हुनु पर्ने नियम लागु गर्नु यसको उदाहरण हो ।[१०] त्यस बाहेक चारै वर्णका मानिसहरूको गृह निमार्णमा "वस्तु प्रकरण" तथा "अष्टवर्ग" को नियम अपनाउनु पर्ने समेत व्यवस्था गरी दिइएका थिए ।[११] जसअनुसार घरको जग हाल्दा ब्राह्मण र क्षेत्रीको सोही वर्णका मानिसहरूले र वैश्य तथा शूद्रको दैवज्ञले पूजा गर्ने नियम बसाली दिए । यस्तैगरी भक्तपुर दरवार क्षेत्रमा अवस्थित स्वर्णद्वार संगैको भित्तामा रहेको ने सं. ५७३ (१४५२ ई.) को यक्षमल्लको अभिलेखमा ब्राह्मण, क्षेत्री, वैश्य र शूद्रवर्णका सबै जनताले प्रशस्त ढुङ्गा काठपात बोकेर ठूलो कष्ट तथा धेरै पैसा खर्च गरी चारैतिर खाडल, ठूलठूला पर्खाल र ढोकासहितको नयाँ गढ निमार्ण गरेको चर्चा गरिएको छ ।[१२] यस अभिलेखबाट पनि मध्यकालमा उपत्यकाको हिन्दू नेवार समाज वर्ण व्यवस्थामा आधारित थियो भन्ने कुरा पुष्टि हुन्छ । परम्परादेखि यसरी प्रचलित हुँदैआएको वर्ण व्यवस्था नेवार समुदायमा अद्यापि प्रचलित छ ।

## ब्राह्मण

वर्ण व्यवस्थाअनुसार ब्राह्मणलाई समाजको सबभन्दा माथिल्लो वर्ण मानिन्छ । नेवार समुदायमा यस वर्णका मानिसहरूको महत्पूर्ण स्थान रहिआएको छ । मनुस्मृतिमा ब्राह्मणको प्रमुख कार्य शास्त्रको अध्ययन गर्नु र गराउनु, यज्ञ गर्नु र गराउनु तथा दान दिनु र लिनु बताइएको छ ।[१३] कौटिल्यले पनि यी ६ प्रकारका कार्यहरूलाई ब्राह्मणको प्रमुख कर्म मानिएको छ ।[१४] त्यसकारण ब्राह्मणलाई सबैले ठूलो प्रतिष्ठा र मान राख्न गर्दै आएका हुन् । लिच्छविकालीन समाजमा पनि ब्राह्मण थिए । तत्कालीन अभिलेखहरूको अध्ययनबाट यो कुरा थाहा हुन्छ ।[१५] मध्यकालमा नेवार समाजभित्र ब्राह्मणहरू रहेको पुष्टि हुन्छ । पूर्वमध्यकालीन शासक श्रीविजयकामदेवको शासनकालमा ब्राह्मण श्रीजयब्रम्ह शर्माले ने. सं. ३१५ (११९४ ई.) मा ब्रह्मोक्त संहिताग्रन्थ लेखेका थिए ।[१६] जयस्थिति मल्लले गरेको सामाजिक विभाजनमा स्पष्ट रूपमा ब्राह्मणलाई पंचगौड, पंचद्रविड र जैशी गरी तीनभागमा विभाजन गरिएको थियो ।[१७] पंचगौड र पंचद्रविडद्वारा धार्मिक, सामाजिक, सांस्कृतिक तथा शैक्षिक कार्यहरू संचालन गराउने चलन थियो । ललितपुरको कुंम्भेश्वर क्षेत्रमा बंशगोपाल मन्दिर

बनाई देवमूर्ति प्रतिष्ठा गर्दा ब्राह्मणले धार्मिक कार्य पूरा गरेको उदाहरण पाइन्छ ।[१८] त्यसबेला दोलाशिखरमा महादेवको पूजारी शिवनारायण भट्टलाई वंशानुगत पूजारीको काम जिम्मा लगाइएको थियो ।[१९] यी तथ्यहरूबाट समाजमा ब्रह्मणले परम्परागत रूपमा विशेषस्थान राख्दै आएको थाहा हुन्छ । समाजको उच्चवर्ग भएको हुँदा ब्राह्मणलाई राजा र राज्यले समेत विशेष सुविधा उपलब्ध गराइएको थियो । सिद्धिनरसिंह मल्लले बनाएको ललितपुर भण्डारखालको पोखरीको भूगोल बगैंचामा सफासुघर र शुद्ध राख्ने उद्देश्यले त्यहाँको धारामा अरू कसैले नुहाउन र महिला वर्गले प्रवेशसमेत गर्न नपाउने गरी प्रतिवन्ध लगाएका थिए । त्यस्तो ठाउँमा ब्राह्मणलाई नुहाउन र ब्राह्मणीलाई भित्र प्रवेश गर्न छुट दिइएको थियो । त्यस बाहेक समाजले परम्परादेखि ब्रम्हहत्यालाई महापाप सम्झिएको पाइन्छ । यसले तत्कालीन समाजमा ब्राह्मण वर्गले विशेष सुविधा उपभोग गर्दैआएको कुरा प्रष्ट हुन्छ ।

वर्तमान हिन्दू नेवार समाजभित्र उल्लेख्य मात्रामा ब्राह्मणहरू छन् । तिनीहरूलाई विभिन्न धार्मिक तथा सांस्कृतिक कार्य गर्दा दान दिने र भोजन गराउने चलन छ । यस वर्गका मानिसद्वारा पूरा गरिएको प्रत्येक धार्मिक र सांस्कृतिक कार्यको अन्तमा उनलाई भोजन गराएपछि सो कार्य सुसम्पन्न भएको मानिन्छ । तत्कालीन संस्कार तथा पूजासम्बन्धी विधिवारे लेखिएका ग्रन्थहरूमा ब्राह्मण भोजन पश्चात् संचालन गरिएको कार्य पूरा हुने कुरा उल्लेख भएको छ ।[२०] यसबाट पनि नेवार समाजमा ब्राह्मण वर्गले परम्परादेखि उच्चस्थान कायम गर्दैआएको थाहा हुन्छ ।

### क्षेत्री

वर्ण व्यवस्थाअन्तर्गत क्षेत्री दोस्रो तहमा पर्दछ । मनुस्मृतिमा प्रजाको रक्षा गर्नु, दान दिनु, यज्ञ गर्नु, वेद पढ्नु यस वर्णको कर्तव्य बताइएको छ ।[२१] तिनीहरूको कार्य अध्ययन गर्ने, यज्ञ गर्ने तथा दान दिने भए पनि मूल कर्तव्य राज्य तथा जनताको सुरक्षा गर्नु हो भन्ने मान्यता प्रचलित हुँदैआएको छ । कौटिल्यले क्षेत्रीको कर्तव्य अध्ययन गर्नु, यज्ञ गर्नु, दान दिनु, शस्त्र संचालनलाई जीवन निर्वाहको आधार बनाउनु र त्यसको सहयोगबाट प्राणीको रक्षा गर्नु भनेका छन् ।[२२] यसरी क्षेत्री वर्णलाई शिक्षित बनी आफ्नो बाहुवलद्वारा देश र जनताको रक्षा गर्न भनिएको पाइन्छ । त्यसकारण रक्षा गर्ने कर्मलाई क्षेत्री धर्म भनिन्छ । भाषिक अर्थमा क्षेत्रीको



अर्थ कुनै एउटा क्षेत्रको अधिपति भन्ने जनाउँछ । परम्परागत रूपमा क्षेत्राधिपति भनेको तत्कालीन राजालाई मान्ने चलन थियो । अतः आफ्नो क्षेत्राधिकार भित्र जनताको रक्षा गर्नु राजाको कर्तव्य भन्ने जनाउँछ ।

काठमाडौं उपत्यकामा क्षेत्रीवर्णको अस्तित्व प्राचीनकालदेखि रहिआएको छ । लिच्छवि शासकहरू क्षेत्री वर्णका थिए । मानदेवले आफूलाई गर्वसाथ क्षेत्रिय भनी उल्लेख गरिएको छ ।[२३] अंशुवर्मा पनि यसै वंशका थिए । चिनीया यात्री ह्यान साङ्ले उनलाई क्षेत्रिय भनि उल्लेख गरिएको छ ।[२४] त्यस्तैगरी मध्यकालीन उपत्यकाका मल्लशासकहरू पनि क्षेत्री थिए । तिनीहरूले आफूलाई थाकुल (ठाकुर) लेख्ने गर्दथे । इतिहासकारहरूले मल्ल ठकुरीहरूलाई क्षेत्री वंशका भन्ने विचार प्रस्तुत गरिएको छ ।[२५]

वर्तमान नेवार समुदायमा केही जातीका मानिसहरूमा आफूलाई "छथरी" र "पाँचथरी" भन्ने परम्परा छ । "छथरी" को सम्बोधन क्षेत्री भन्ने अर्थमा भएको देखिन्छ । तत्कालीन मानिसहरूले क्षेत्रिय शब्दको स्पष्ट उच्चारण गर्न नसकेको हुँदा क्षेत्रीलाई छत्रीय भन्ने गरिन्थ्यो । त्यसमा पनि अपभ्रम्स भई छथरीय हुन गयो । त्यही शव्दबाट कालान्तरमा छथरीमात्र भन्न थालेको देखिन्छ । व्यक्ति विशेषसित संरक्षणमा रहेको एउटा हस्तलिखितग्रन्थमा जयस्थिति मल्लको जाती विभाजनअनुसार "छथरी" का जातिहरू क्रमशः ठाकुर बा थकुरी (ठकुरी), जोशी, भारो, श्रेष्ठ, अमात्य, कायस्थ, पत्रवंश, कथुट, गुभाजुचार्य, कर्माचार्य, शिवाचार्य र पिठाचार्यलाई सङ्केत गरेको पाइन्छ ।[२६] अर्का विद्वान्को भनाइअनुसार नेवारहरूको "छथरी"का जात भनेको अमात्य, प्रधान, मास्के, भण्डिल, जोशी र आचार्य हुन् ।[२७] जयस्थिति मल्लको जाती व्यवस्थामा ती जातहरूको नाम उल्लेख भएको पाइन्छ । त्यतिबेला राजनैतिक र सामाजिक दृष्टिकोणले समाजमा छथरीका मानिसहरूको ठूलो प्रतिष्ठा थियो । तत्कालीन समय राजपरिवार तथा उच्च पदस्थ कर्मचारीहरू आफूलाई क्षेत्री कहलाउँथे ।[२८] नेवार समाजमा अहिले पनि माथि उल्लेखित जात (थर) का मानिसहरू यथेष्ट छन् । तिनीहरू आफूलाई नेवार भित्रको उच्चवर्ग सम्झिन्छन् ।[२९]

### वैश्य

वर्ण व्यवस्थाअनुसार तेस्रो तहमा रहेको वैश्य वर्णको परम्परागत कार्य आर्थिक क्रियाकलापसित सम्बन्धित छ । वर्तमान नेवार समुदायमा वैश्य वर्णको राम्रो उपस्थिति रहेको पाइन्छ । पशुपाल गर्नु, दान दिनु, यज्ञ

गर्नु, वेद पढ्नु, वाणिज्य व्यापार गर्नु, व्याज लिनु र खेती गर्नु वैश्य वर्णको धर्म हो ।[३०] कौटिल्यले यस वर्णको मूल कार्य अध्ययन गर्नु, यज्ञ गर्नु, दान दिनु तथा व्यापार गर्नु र पशुपालन गर्नु भनिएको छ ।[३१] नेपाली समाजमा वैश्य वर्णको अस्तित्व लिच्छविकालदेखि रहदै आएको पाइन्छ । हुनत तत्कालीन स्रोतहरूमा वैश्य वर्णको स्पष्ट उल्लेख भएको छैन । तर यस वर्णका मानिसहरूले गर्ने कामको भने उल्लेख भएको छ । लिच्छवि शासक मानदेव प्रथमको शासनकालमा रत्नसंघ नामका धनी व्यक्ति थिए । उनलाई सार्थवाहु भनिएको छ । तत्कालीन व्यापारीहरूको समूहलाई सार्थ र त्यसको नाईकेलाई सार्थवाह भन्ने चलन थियो ।[३२] जुन वैश्यको क्रियाकलापसित सम्वन्धित रहेको मानिन्छ । लिच्छवि शासकहरूले देशको वाणिज्य व्यापार विकास गर्न आवश्यक सुविधा दिएको हुँदा राज्यमा व्यापारीहरूको संख्या वृद्धि हुँदै गएको थियो । त्यसवेला उत्तरमा तिब्वत र दक्षिणमा भारतसित व्यापार हुन्थ्यो । प्राचीनकालका चीनीया यात्री ह्यानसाङ्गले यहाँ कृषक भन्दा व्यापारी धेरै भएको उल्लेख गरेका छन् ।[३३] व्यापार व्यवसाय वैश्य वर्णको काम भएको हुँदा तत्कालीन समाजमा त्यस्तो कार्य गर्ने मानिसहरूको उपस्थितिले लिच्छविकालमा वैश्य वर्ण रहेको तथ्यलाई पुष्टि गर्दछ ।

एवंप्रकार मध्यकालीन काठमाडौं उपत्यकाको समाजमा वैश्यवर्णका मानिसहरू भएको स्पष्ट जानकारी हुन्छ । गोपालराजवंशावलीमा जयसिंहरामवर्द्धनको नाम धेरै ठाउँमा उल्लेख भएको छ । यिनी तत्कालीन महामन्त्री थिए ।[३४] काठमाडौं इटुंबहालको अशोक चैत्यनिर स्थापना गरिएको अभिलेखमा यिनले आफूलाई गौरवसाथ वैश्य भनि उल्लेख गरेका छन् ।[३५] नेपाल उपत्यकाको राजनैतिक विभाजन हुनु भन्दा अगाडि कान्तिपुरका स्थानीय सामन्तहरूले नेपालमण्डलको केन्द्रीय शासनको अधिनमा रही लामो समय शासन चलाएका थिए । ती सामन्तहरू पनि वैश्य वर्णका थिए ।[३६] ललितपुरका सप्तकुटुम्वजहरूको विषयमा पनि यहाँ उल्लेख गर्न सकिन्छ । त्यसमध्येका प्रभावशाली सामन्त शासक विष्णुसिंह थिए । उनले उपत्यकाको तत्कालीन राजनैतिक कमजोरीवाट फाईदा उठाई ललितपुर राज्यको स्वतन्त्र राजासमेत भए । राजा भइसकेपछि पनि उनले आफूलाई वैश्यकुल भन्न रूचाएका थिए ।[३७] कान्तिपुरका शासक पार्थिवेन्द्र मल्लको ने.सं. ७९९ (१६७८ ई.) को पशुपति अभिलेखमा पनि वैश्य वर्णको उल्लेख भएको छ ।[३८]



वर्तमान नेवार समाज प्राचीन र मध्यकालबाट क्रमिक रुपमा विकास र विस्तार हुँदैआएको हो । त्यस कारण अहिले पनि यस समुदायमा वैश्य वर्णका मानिसहरू यथेष्ट छन् ।

## शूद्र

वर्ण व्यवस्थाअनुसार चौथो अर्थात् सबभन्दा तल्लो वर्ण शूद्र हो । मनुस्मृतिमा शूद्रको कर्तव्य ब्राह्मण, क्षेत्रिय र वैश्य यी तीनै वर्णको सेवा गर्नु भनिएको छ ।[३९] द्विजवर्णका मानिसहरूको सेवा गराउनका लागि नै ब्रह्माले यस वर्णको उत्पन्न गरेको भनिन्छ । नेपालमा शूद्र वर्णका मानिसहरू प्राचीनकालदेखि थिए । लिच्छवि शासक नरेन्द्रदेवको अनन्तलिङ्गेश्वर अभिलेखमा शूद्रवर्णका जातिलाई सङ्केत गर्ने चाण्डाल शब्द उल्लेख भएको छ ।[४०] गरूड पुराणमा विभिन्न १६ जातहरू रजक, चर्मकार, नट, वुरूड, कैवर्त, भिल्ल, स्वर्णकार, सौविक, कारूक, लोहार, शिलाभेदी, नापित, तपाक, तिलयन्त्री, सुनश्चक्री, ध्वजीलाई "षोडश चाण्डाल" को संज्ञा दिएको छ ।[४१] यसबाट चाण्डाल भन्नाले शूद्र भन्ने बुझिन्छ । लिच्छविकालीन अभिलेखमा सम्बोधन भएको चाण्डाल शब्दले उल्लिखित ती नीच जातीमध्ये कुनैलाई सङ्केत गरेको देखिन्छ ।

मध्यकालीन उपत्यकाको समाजमा शूद्रवर्णको चर्चा धेरै ठाउँमा भएका छन् । भक्तपुरका शासक जितामित्र मल्लकालीन थर पौ:मा नापित, नकर्मी, माली, कसाई, जोगी, कुलु आदि जातहरू उल्लेख गरिएको छ ।[४२] ललितपुर वुङ्मती गाउँको यताटोलमा रहेको ने. सं. ७९६ (१६७५ ई.) का मत्स्येन्द्रवहालको अभिलेखमा स्थानीय क्षेत्रमा एक महिनासम्म संचालन हुने "मास उपासन" व्रतबारे उल्लेख भएको छ । सो अभिलेखमा जुगि (जोगी), धोवी र कसाई जाती अछुत भएको हुँदा ती जातका महिलाहरूलाई सो व्रतमा नराख्नु भन्ने आदेश दिइएको थियो ।[४३] यी उल्लिखित तथ्यहरूले मध्यकालीन उपत्यकाको नेवार समाजमा शूद्रवर्णका जातजातिको अस्तित्वलाई मात्र देखाएको नभई तिनीहरूको सामाजिक मर्यादालाई समेत प्रकाश पार्दछ ।

नेवार समाजको सामाजिक तथा सांस्कृतिक कार्यहरू पूरा गर्नमा आज पनि ती जातका मानिसहरूको महत्वपूर्ण भूमिका रहिआएको छ । भीमसेन थापाल वि.सं. १८८८ मा नेवार समुदायको संस्कारसम्वन्धी कार्यमा शूद्रवर्णका मानिसहरूलाई तिनीहरूको जातअनुसार काम लगाउँदा दिनुपर्ने पारिश्रमिकलाई व्यवस्थित गर्न नियम बाँधी दिएका थिए ।[४४]

वास्तवमा परम्परागत रूपमा प्रचलित वर्ण व्यवस्था बौद्धिक दृष्टिकोणबाट पिछडिएका वर्गलाई दवाएर ठूला वर्गले आफूलाई सामाजिक विशेषधिकार समूहमा प्रतिस्थापित गर्न सृजना गरिएको हो । तत्कालीन मानिसहरूले त्यस प्रथालाई परम्परागत रूपमा लागु गराउन धार्मिक रङ्ग दिई चारै वर्णको उत्पत्ति भगवान ब्रह्माबाट भएको भन्ने भनाइ अगाडि सारी त्यसलाई ऐश्वर्य देनको रूपमा चित्रण गर्दै आएको छ । तर वर्ण व्यवस्था मानव निर्मित प्रथा हो । मानिस जुनसुकै वर्णका भएपनि मूलत एकै जातिका हुन् । प्राकृतिक नियमअनुसार वर्ण विभाजनमा कुनै वैज्ञानिक आधार पाईदैन । मानिसमा हुने बुद्धि, विशेष प्रतिभा, क्षमता, मनोवृति, व्यक्तित्व, विशेष लक्षण आदि प्रकृति प्रदत्त र परिस्थिति जन्य हुन् । ती गुणहरू वंशानुगत हुँदैन । परिवारको एउटा व्यक्तिमा रहेको उल्लेखित गुण सोही परिवारको अर्को सदस्यमा पनि हुन्छ भन्ने छैत । जुन वातावरणमा मानिस हुर्किन्छ त्यसको स्वभाव, क्षमता, प्रतिभा आदि सोहीअनुसार विकास हुन्छ । त्यसकारण वर्ण व्यवस्था सामाजिक असमानताको द्योतक हो भन्न सकिन्छ ।

### जाती व्यवस्था

नेवार समाजमा प्रत्येक वर्णभित्र विभिन्न जात (थर) का मानिसहरू छन् । नेपालमा जातिप्रथा प्राचीनकालदेखि प्रचलित हुँदैआएको हो । लिच्छविकालमा अठार जातका मानिसहरू थिए । मध्यकालमा आएर अझ विस्तृत भयो । समय समयमा वाहिरवाट नयाँ जातिका मानिसहरू आगमन भइरहनु र तल्लो तथा माथिल्लो जातिका स्त्रीपुरुषको संसर्गबाट वर्णसंकर भई जन्मिएका मानिसहरूको संख्यासमेत बढ्दै गएको कारणले मध्यकालीन समाजमा जातीय व्यवस्थामा विकृती देखा पर्न थाल्यो । साथै परम्परागत नीतिनियमहरू पनि अपर्याप्त देखिए । त्यसलाई व्यवस्थित गर्न जयस्थिति मल्लले दक्षिण भारतका पाँच जना पण्डितहरूको सहयोग लिई सिङ्गो नेवार समुदायलाई पेशाको आधारमा विभिन्न जातजातिमा विभाजन गरी सामाजिक सुधार गरेका थिए ।

यस समुदायमा विद्यमान जाती विभाजनलाई कर्कपेट्रिकले प्राचीन हिन्दू परम्पराअनुसार व्यापार र व्यवसायको आधारमा विभाजन भएको मानेका छन् ।[४५] पेशाको आधारमा जातजातिको व्यवस्था गर्ने परम्परा समाजको व्यावहारिक प्रक्रिया हो । त्यस्तो प्रक्रियालाई समाजशास्त्री किङ्स्लेले पनि स्वीकार गरेका छन् । उनले समाजमा जातको सृजना



जन्मबाट नभई सांस्कृतिक रूपान्तरणद्वारा मानव सामाज आफैले गर्छ भनेका छन् । किनभने परंम्परागत सीपले मानिसलाई विशिष्ट प्रकारको काममा तालिम दिलाउँछ ।[४६]

वर्तमान नेवार समाजमा विद्यमान जातीप्रथा मध्यकालीन जाती व्यवस्थाको निरन्तरता हो । धेरै मानिसहरूले आफ्ना पूर्वजहरूले प्रयोग गर्दै आएका तत्कालीन जात (थर) लाई अहिले पनि व्यवहारमा प्रयोग गर्दै आइरहेका छन् । पृथ्वीनारायण शाहले उपत्यकामाथि कब्जा जमाई शासन गर्न थालेपछि यस समुदायको जाती व्यवस्थामा केही विचलन आएको थियो । उनले कीर्तिपुर जिती सकेपछि त्यहाँका जनतामा प्रतिशोधको भावनाले स्थानीय वासिन्दाको नाक र ओठ काट्न लगाएको घटना इतिहासमा ताजै छ । तत्कालीन समय नेपाल आएका फादर जोसेफले आफ्नो बृतान्तमा यस घटनालाई प्रकाश पारेका छन् ।[४७] यस्तैगरी गोर्खालीले कान्तिपुरका धनदत्यालाई पत्री दास बनाएका थिए ।[४८] एवंप्रकार ललितपुर राज्य माथि कब्जा जमाएपछि त्यहाँका प्रधानहरूलाई मृत्यु दण्ड दिइएको थियो ।[४९] गोर्खालीहरूको यस किसिमको व्यवहारवाट त्रसित भएका तत्कालीन उपत्यकावासी खासगरी राजनैतिक बृत्तका धेरै नेवारहरुले गोर्खालीहरूबाट हुनसक्ने राजनैतिक प्रतिशोधबाट वच्न आफ्नो परम्परागत जात (थर) लाई लुकाई अर्को नयाँ थर खासगरी कृषिजन्य र पशुपंक्षीसित सम्बन्धित थरहरू अवलम्वन गरेका थिए । यस्ता कार्य विशेषगरी भक्तपुर र ललितपुरमा वढि प्रचलित रह्यो ।

### नेवार समुदाय

नेवार समुदायका मानिसहरू वर्तमान काठमाडौं उपत्यकाको विभिन्न ऐतिहासिक बस्ती तथा उपत्यका वरपरका अन्य इलाकाहरूमा प्राचीनकालदेखि बस्दै आएको कुरा इतिहासले प्रमाणित गर्दै आएको छ । हुनत हिजोआज नेवारहरू नेपालको सबैजसो जिल्लाका मुख्य बजार वस्तीहरूमा पनि वसोबास गर्दैआएको पाइन्छ । यद्यपि तिनीहरू विभिन्न समयमा आफ्नो ऐतिहासिक थलो छाडेर देशका विभिन्न भागमा छरिएका थिए । कोही आफ्नो सीप र दक्षताको कारणले विभिन्न ठाउँमा स्थानीय क्षेत्रको निमार्णको सिलसिलामा पुगेका थिए भने कतिपय नेवारहरू वाणिज्य व्यापारको कारणले आफ्नो थलो छोडी देशका विभिन्न भागमा छरिएका पाइन्छ । किनकी पृथ्वीनारायण शाहले नेपाल उपत्यकामा आफ्नो आधिपत्य जमाई सकेपछि नेवारहरूलाई सैनिक र प्रशासकिय सेवामा

सहभागी हुने मौकाबाट बंचित गरिएको थियो । फलस्वरूप सवैजासे नेवारहरू व्यापार व्यवसाय र कृषि क्षेत्रमा लाग्नु पर्‍यो ।[४०] त्यसकारण व्यापार व्यवसायका निमित्त नेवार समुदाय देशका विभिन्न भागमा छर्न बाध्य भए । कसैलाई भने उपत्यकामा शाहवंशले शासन गर्न थालेपछि तत्कालीन राजनैतिक दवाव र सामाजिक परिस्थितिले उपत्यका छोड्न बाध्य तुल्याइएको थियो ।

नेपाली समाजमा नेवारहरूको उत्पत्तिबारे विभिन्न भनाईहरू प्रचलित रहेको पाइन्छ । कसैले यस समुदायलाई दक्षिण भारतको नायर प्रदेशका व्रम्हपुत्र क्षेत्रियहरू हुन् भनेका छन् ।[४१] जसअनुसार त्यस प्रदेशका राजा नान्यदेवले नेपाल उपत्यकामा आक्रमण गरी यहाँका मल्लशासकहरूलाई पराजित गरेर आफ्नो शासन स्थापना गरेको भनिन्छ । त्यसबेला उनको सेनामा अरू जातजातिका मानिसहरूको अलावा नायरहरू पनि थिए । ती नायरहरू उपत्यकामा बसोवास गरेको हुँदा तिनीहरू नै नेवार कहलाएको भनिन्छ ।[४२] यस भनाइलाई समर्थन गर्ने विद्वान्हरूले नेपाल उपत्यकामा विकास भएको पेगोडाशैलीलाई आधार मानेका छन् । स्मीथ महोदयले पनि यहाँ विकास भएको पेगोडाशैलीको मन्दिरहरू दक्षिण भारतको कनड प्रदेशका केही जैन मन्दिरको शैलीसित मिल्दोजुल्दो भएको हुँदा नेवारहरू नायर प्रदेशवाट नै आएका हुन सक्ने अनुमान गरिएको छ ।[४३] तर त्यस भनाइलाई स्वीकार गर्ने कुनै आधार देखिँदैन । पहिलो कुरा नान्यदेवले नेपाल उपत्यकामा विजय गरी आफ्नो शासन स्थापना गरेको भनाइ कुनै ऐतिहासिक स्रोतहरूवाट पनि पुष्टि भएको छैन । अर्कोतिर यहाँका मल्लशासकहरू तिरहुततिर विस्थापित भए भन्ने कुरा पनि वास्तविकता भन्दा धेरै टाढाको कुरा हो । मल्ल शासकहरूले इशाको तेन्हौं शताब्दिदेखि सन् १७६८ सम्म नेपालमण्डलमा निरन्तर शासन चलाएको कुरा इतिहास साक्षी छ । त्यसकारण नेवारलाई नायरसित जोडेर हेर्नु इतिहासलाई तोडमोड गर्नु बाहेक अरू केही होईन भन्न सकिन्छ । नायरहरूको कुरा गर्ने हो भने तिनीहरू केवल एउटा जाती मात्र हो । तर नेवार कुनै एउटा जातिमा मात्र सिमित छैन् । सिङ्गो नेवार समाज विविध प्रजाति, धर्म र नश्लको मिश्रणवाट बनेको बहुजातीय समुदाय हो ।

हुनत नेवार समुदायका कतिपय पूर्वजहरू विभिन्न कालखण्डमा अन्य ठाउँवाट यहाँ आई बसोवास गरेका थिए । तिनीहरू उत्तरतिरका हिमाल



र दक्षिणतिरको चारकोशे झाडी तथा औलोको प्रकोप र उपत्यका चारैतिर डाँडाले घेरिएको भूवनावटले गर्दा एउटा घेरावन्दीमा आवद्ध थिए । परिणाम स्वरूप यहाँ बसोवास गरेका सवै मानिसहरू एकसूत्रमा आवद्ध भए । तिनीहरूको आआफ्नो पूर्व थलोको संस्कृति, परम्परा र व्यवहारको समिश्रणवाट उपत्यकामा एउटा मिश्रित संस्कृतीको विकास गरी एउटा समुदायको रूपमा रहन थाले । विद्वान् रोवर्ट लीले समुदायको परिभाषा दिँदै भनेका छन् "समुदाय भनेको एउटा स्थानीय क्षेत्रका मानिसहरू हुन्, जसले एउटै भाषा बोल्छन्, समान परम्पराहरू पालन गर्छन्, थोरवहुत रूपमा समान भावना राख्छन्, साथै समान प्रवृतिअनुसारका कार्यहरू गर्छन्" ।[४४] उनको यस भनाइले नेपाल उपत्यकाका बासिन्दाहरू एउटा समुदायमा विकास भएको तथ्यलाई जनाउँछ । यहाँको विभिन्न बसोबास क्षेत्रहरूमा बस्दैआएका तत्कालीन मानिसहरूको भाषा, रीतिरिवाज, चालचलन पहिलेदेखि समान रहिआएको छ । तसर्थ नेपाल उपत्यकामा तत्कालीन समय विकास भएको भाषा, संस्कृति र सभ्यतालाई अंगिकार गरेका सवै वंशज एवं जातिका मानव समूहको सामूहिक रूप नै वर्तमान नेवार समुदाय हो ।[४५]

अर्कोतिर नेवार शब्द जाती वाचक नभई स्थान विशेषका वासिन्दा भन्ने अर्थमा प्रयोग भएको छ । यसको उच्चारण नेपाल शब्दवाट उत्पत्ति भएको मानिन्छ । डा. सुनीतिकुमार चटर्जीले नेपाल र नेपार दुवै शब्दलाई एकै मानेका छन् । उनकाअनुसार "प" र "ल" को ठाउँमा "व" र "र" उच्चारण भएर नेवार शब्द सृजना भएको हो ।[४६] नेवारभाषामा "ल" र "र" बीच खास भिन्नता मानिन्दैन । "ल" को सट्टा "र" तथा "र" को सट्टा "ल" लेख्ने परम्परा पहिलेदेखि चल्दैआएको छ । यसको लागि मध्यकालीन विभिन्न अभिलेखहरूलाई उदाहरणको रूपमा लिन सकिन्छ । तत्कालीन अभिलेखहरूमा ठाकुरलाई "ठाकूल", परमेश्वरलाई "पलमेश्वर" लेखिए जस्तै नेपाललाई पनि "नेपार" लेख्ने र भन्ने गरिन्थ्यो ।[४७] तसर्थ नेपाल र नेपार दुई अलग शब्दहरू देखिए पनि त्यसको अर्थ एउटै हुन्छ । मध्यकालीन ऐतिहासिक स्रोतहरूमा शाब्दिक अशुद्ध भएका उदाहरणहरू धेरै पाइन्छन् । नेपाललाई नैपाल तथा नैपार, पुण्य भूमि को सट्टा पूने भूमौ, विजय राज्यलाई विजय राजे, ज्येष्ठलाई जयेष्ठ लेखिएका उदाहरणहरू यहाँ उल्लेखनीय छ ।[४८] वास्तवमा यी सवै अपभ्रम्श भएका शब्दहरू हुन् । नेवार शब्दको उत्पत्ति पनि त्यसरी नै भएको छ । ललितपुर सुल्मिटोल इनारमुनि पाटीको ने. सं. ८३४ (१७१३ ई.) को शिलालेखमा

स्पष्टरूपले "नेवार भाखा" लेखिएको छ ।[५९] परम्परागत रूपमा नेपाल उपत्यकाभित्र बोलिने देशभाषालाई नेपाल भाषा वा नेपार भाषा उल्लेख हुँदै आएकोमा त्यस अभिलेखमा "नेवार भाखा" प्रयोग भएको छ । त्यसरी नै नेवार शब्दको प्रयोग "नेपाल" बाट भएको थाहा हुन्छ ।

प्रचलित मान्यताअनुसार मानिस जुन देश वा स्थानमा बसोवास गर्छ उसलाई सोही ठाउँको नामले सम्बोधन गर्ने प्रचलन छ । भारत, चीन, बंगाल, भोजपुरमा बस्नेलाई क्रमशः भारतीय, चीनीया, बंगाली, भोजपुरी भन्ने परम्परागत मान्यता हो । सोही अनुरूप तत्कालीन नेपाल (वर्तमान काठमाडौं उपत्यका) का बासिन्दालाई नेपालवासी भन्ने अर्थमा नेपाल, नेपार भन्दै अन्तमा नेवार भन्ने गर्न थालेको स्पष्ट हुन्छ ।

यस उपत्यकामा प्राचीनकालदेखि विविध जातीले बसोबास गर्दैआएको कुरा माथि उल्लेख भई सकेको छ । यहाँ विभिन्न राजवंशका शासकहरूले शासन चलाए । समयको गतिअनुसार एउटा राजवंशको पत्तन र अर्को राजवंशको उत्थान सबैजसो देश वा राज्यहरूमा भएका छन् । त्यसक्रममा पराजित राजवंश तथा त्यहाँका जनतासमेत देश छोडेर अन्त भाग्नु परेका घटनाहरू इतिहासमा पढ्न पाइन्छ । भारतमा मगध साम्राज्यको उदयले त्यस क्षेत्रका अनेक गणराज्यहरूबाट शासक तथा जनता आफ्नो राज्य छोडी पलायन हुनु परेको थियो ।[६०] दिल्लीका शासक गयासुद्दिनवाट डोय राज्यका शासक हरिसिंहदेव परिजित भई उपत्यकातिर लागेको घटना पनि माथि उल्लेख भई सकेको छ । तर नेपालको इतिहासमा राजनैतिक, धार्मिक, सामाजिक तथा सांस्कृतिक कुनै पनि कारणबाट यहाँका मानिसहरू विस्थापित हुनु पर्ने गरी कुनै नराम्रो घटना घटेको देखिंदैन । एउटा बंशको शासन समाप्त भएर अर्को बंशको शासन प्रारम्भ हुंदा पनि पुरानो वंशका शासकवर्ग र जनता सबै यहींको समाजमा समायोजित भएर बसेका थिए । हुनत वंशावलीमा उल्लेख भएअनुसार प्राचीनकालमा लिच्छविवंशको शासन स्थापना भएपछि किरातहरू पूर्वी क्षेत्र तामाकोशी र अरूणकोशीतिर लाग्नु परेको बताईछ ।[६१] यसलाई नेपालको इतिहासमा अपवादको रूपमा लिन सकिन्छ । तर किरातीहरू पूर्वतिर लागेको भए तापनि सबैले उपत्यका छाडेका थिएनन् । तिनीहरूमध्ये कतिपय यहीं बसेको देखिन्छ । तिनीहरू पनि पछि यहाँकै समाजमा विलय भएर गए । त्यसरी नयाँ बंशको शासन सुरु हुंदा पनि उपत्यकामा प्राचीनकालदेखि बसोबास गर्दै आएका सबै वंश तथा जातजातिका मानिसहरू कहीं नगई बसेका थिए ।



काठमाडौं उपत्यकावासीलाई "नेवार" भनी सम्वोधन गर्ने प्रचलन खासगरी मध्यकालदेखि मात्र प्रचलनमा आएको देखिन्छ । कान्तिपुरका शासक प्रताप मल्लले हनुमानढोका दरवारको प्राङ्गणमा पन्ध्रभाषामा लेखी स्थापना गरेको जलद्रोणी अभिलेखमा सो शब्दको प्रयोग भएको छ । त्यस अभिलेखमा अन्य भाषाका नामहरूको अलावा "नेवार आखर" (नेवार अक्षर) भन्ने उल्लेख गरिएको छ ।[६२] उनले नेवार अक्षर भनेर परम्परादेखि नेपाल उपत्यकाका वासिन्दाहरूको भाषा भन्ने अर्थमा सम्वोधन गरेको थाहा हुन्छ । मध्यकालीन एउटा थ्यासफुमा पनि "नेवार" शब्द प्रयोग भएको छ ।[६३] त्यसमा "लुभ्या छम्ह नेवार" अर्थात् लुभुको एकजना नेवार भनि उल्लेख गरिएको छ । यी तथ्यले नेपाल उपत्यकामा नेवारको अस्तित्वलाई स्पष्ट रूपमा प्रकाश पारेको छ । तर त्यो सम्वोधन यहाँका शासक तथा उच्चवर्गका कुलिनहरूले स्थानीय जनतालाई गरेको हो । किनभने तत्कालीन शासक तथा उच्चकुलीनहरूमा भारतीय उत्पत्तिको मानसिकताको गहीरो छाप पारेको थियो । मल्लशासकहरू आफूलाई भारतका कर्नाटवंशीको पुर्खा भन्न रुचाउँथे । प्रताप मल्लले आफुलाई रामचन्द्र तथा नान्यदेवको वंश बताएका छन् ।[६४] त्यस्तै गरी भक्तपुरका शासक जितामित्र मल्ल र कान्तिपुरका अन्तिम शासक जयप्रकाश मल्लले आफूलाई रघुवंशी वताएका छन् ।[६५] एवंप्रकार नेवार समुदाय भित्रको ६ थरीका जातिहरू आफूलाई जयस्थिति मल्लसंगै नेपाल पस्ने पुर्खाका सन्तान वताउँछन् ।[६६] तसर्थ मध्यकालमा ती उच्च कुलिनवर्गका मानिसहरूले यहाँ प्राचीनकालदेखि बसोवास गर्दै आएका मानिसहरूलाई नेपालका वासिन्दा भन्ने अर्थमा नेवार सम्वोधन गर्ने गरेको देखिन्छ ।

आधुनिककालको प्रारम्भसंगै नेवार भन्ने चलन व्यापक रूपमा चल्न थाल्यो । उपत्यका बाहिरका मानिसहरूले तत्कालीन उपत्यकावासीलाई "नेवार" भन्ने गर्दथे । कान्तिपुरका राजा जयप्रकाश मल्लका भारदारहरू मध्ये तौढिककाजि पनि एक थिए । पृथ्वीनारायण शाहले उनलाई नेवार भनि सम्बोधन गरेको थियो ।[६७] एकीकरणको समयमा कान्तिपुर राज्यका धनदत्या भन्ने व्यक्तिलाई गोर्खालीहरूले पक्री दास वनाइएको थियो । पृथ्वीनारायण शाहले पछि उनलाई मुक्त गरी दिए । त्यसरी दास मुक्त गरी दिएको कागजपत्रमा धनदत्यालाई नेवार भनिएको छ ।[६८] एकीकरण पश्चात् उपत्यकाको व्यक्ति वा जातिको समूहलाई मात्र नभई यहाँको सामूहिक संस्कृतिलाई परम्परादेखि अपनाउँदै आएका जातजातिहरूको सिङ्गो समुदायलाई नेवार भन्न थाले । पृथ्वीनारायण शाहको दिव्यउपदेशवाट

यो कुरा स्पष्ट हुन्छ । उनले मनोरञ्जनका लागि सबैले उपत्यकाका नेवारहरूको नाच झिकाई हेर्नु भन्ने अर्ति दिएका थिए ।[६९] मध्यकालीन शासक तथा भारदारहरू सबैले परम्परादेखि यहांको संस्कृति र भाषालाई अबलम्बन गर्दै आएको थियो । उपत्यकामाथि गोर्खालीहरूले अधिकार जमाएपछि यहाँका मध्यकालीन शासक र भारदारहरू सबै सामान्य प्रजा सरह भए । तत्पश्चात् गोर्खालीहरूले तिनीहरूलाई समस्तिगत रूपमा नेवार भन्न थालेको हो ।

नेवार समुदाय प्राचीनकालदेखि उपत्यकाभित्रका अलग अलग स्थानहरूमा बसोवास गर्दै आइरहेका छन् । तर जहाँजता बसिएको भए पनि हिन्दू सम्प्रदायका नेवारहरूले आफ्नो सनात्तन धर्मलाई जीवनको मूल आधार मान्दै आएका छन् । त्यसकारण तिनीहरूको प्रत्येक सामाजिक तथा सांस्कृतिक जीवनलाई आफ्नो धर्मको नीतिशास्त्रअनुसार डोऱ्याउँदै ल्याएको छ । यद्यपि सिङ्गो समाज वर्ण व्यवस्थामा आधारित भएको हुँदा समाजमा परम्परादेखि चल्दै आएको उचनीचको भावना अद्यापि देख्न पाइन्छ । त्यसकारण संस्कार विधि र प्रक्रियाहरूमा वर्णअनुसार केही भिन्नता रहेको पाइन्छ । खासगरी नीतिशास्त्रका रचयिता विद्वान्हरूले संस्कारका अनुष्ठानहरू निर्धारण गर्दा समाजका उच्चवर्ग र पुरुषहरूको लागि मात्र लक्षित गरिएको थियो । त्यसकारण कन्यालाई अन्नप्राशन पश्चात् र विवाहभन्दा अगाडि कुनै संस्कार पूरा गर्ने प्रावधान छैन । यस्तैगरी शूद्र वर्णलाई संस्कार मनाउने कुनै अधिकार दिएको छैन । यद्यपि नेवार समुदायले कन्याहरूको निमित्त छुट्टै संस्कारका मौलिक अनुष्ठानहरू विकास गरी शूद्र वर्णका मानिसहरूको निमित्त पनि व्यवहारिक अनुष्ठान पूरा गर्ने चलन चलाउँदै आएको छ ।

## पादटिप्पणी

१) जोन लिविज गिल्लीन र क्लारेन्स जी. दिट्टमर, *सोसियल प्रोब्लेम्स,* बम्बई: दि टाइम्स अफ इण्डिया, १९६८ ई., पृ. ९ ।

२) धनवज्र वज्राचार्य र कमल प्रकाश मल्ल, *गोपालराजवंशावली,* काठमाडौं: नेपाल रिसर्च सेण्टर पब्लिकेशनस्, १९८५ ई., पत्र संख्या १७ ।

३) धनवज्र वज्राचार्य, *लिच्छविकालका अभिलेख,* काठमाडौं: नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रि.वि.वि., वि.सं. २०५३ (१९९६ ई.), पृ. १७२ र १७३ ।



४) टि.आर. वैद्य, "देवलदेवी: दि वाईफ अफ हरसिंहदेव", *नेपाल: ए स्टडी अफ सोसियो इकोनोमिक एण्ड पोलिटिकल चेन्जेज,* न्यू दिल्ली: अनमोल पब्लिकेशनस् प्रा.ली, १९९३ ई., पृ. १९ देखि २३ ।

५) मनुस्मृति १.३१, हरगोविन्द शास्त्री (हिन्दी टिकाकार), बाराणसी: चौखम्वा संस्कृत सीरिज अफिस, १९६५ ई. ।

*"लोकानां तु विवृद्धयर्थं मुखबाहुरूपादतः ।*
*ब्राह्मणं क्षत्रियं वैश्यं शूद्रं च निरवर्त्तयत् ।"*

६) वज्राचार्य, *पूर्ववत्,* पादटिप्पणी संख्या ३, पृ. ४८७ ।

७) वज्राचार्य र मल्ल, *पूर्ववत्,* पादटिप्पणी संख्या २, पत्र संख्या १९ ।

८) वज्राचार्य, *पूर्ववत्,* पादटिप्पणी संख्या ३, पृ. ५३० र ५३२ ।

९) टि.आर.वैद्य, त्रिरत्न मानन्धर र शंकरलाल जोशी, *सोसियल हिष्ट्री अफ नेपाल,* न्यू दिल्ली: अनमोल पब्लिकेशनस् प्रा.ली, १९९३ ई.,पृ. २३ ।

१०) डानियल राईट (सं.), *हिष्ट्री अफ नेपाल,* कलकत्ता: रञ्जनगुप्ता, १९६६ ई., पृ. १२३ र १२४ ।

११) *ऐजन,* (राईट), पृ. १२५ ।

१२) धनवज्र वज्राचार्य, "मल्लकालमा देशरक्षाको व्यवस्था र त्यसप्रति प्रजाको कर्तव्य" *पूर्णिमा,* पूर्णाङ्क २, काठमाडौं: संशोधन मण्डल, वि.सं. २०२१ (१९६४ ई.), पृ. २४ र २५ ।

१३) मनुस्मृति, १.८८, *पूर्ववत्,* पादटिप्पणी संख्या ५ ।

१४) *कौटलीय अर्थशास्त्र,* १.३.१.५, उदयवीर शास्त्री, (अनुवादक), लाहौर: मेहरचन्द्र लक्ष्मण दास, १९२५ ई., (प्रथमावृत्ति) ।

*"स्वधर्मो ब्राह्मणस्याध्ययनमध्यापनं यजनं*
*याजनं दानं प्रतिग्रहश्चेति ॥"*

१५) वज्राचार्य, *पूर्ववत्,* पादटिप्पणी संख्या ३, पृ. १६, ९३ र १३९ ।

१६) लुसियानो पेटेक, *मेडिभल हिष्ट्री अफ नेपाल,* रोम: इन्स्टिच्यूटो इटालियानो पर इल मेडिओ इड इस्ट्रेमो ओरियन्टे, १९५८ ई., पृ. ७५ ।

१७) राईट, *पूर्ववत्,* पादटिप्पणी संख्या १०, पृ. १२६ ।

१८) रामजी तेवारी र अरू (सं.), अभिलेख संग्रह, छैठौं भाग, काठमाडौं: इतिहास संशोधन मण्डल, २०१९ वि.सं. (१९६२ ई.), पृ. १७ ।

१९) मोहन प्रसाद खनाल, अभिलेख सङ्कलन, काठमाडौं: साझा प्रशासन, वि.सं. २०२८ (१९७१ ई.), पृ. ३७ ।

२०) हस्तलिखितग्रन्थ, दशकर्म पद्धति, राष्ट्रिय अभिलेखालयमा रहेको माईक्रोफिल्म संख्या बी ३६८।१८ पत्र संख्या ५६ ।

*"ब्राह्मण भोजन ॥ इति चूडाकरण कर्म ॥"*

२१) मनुस्मृति १.८९, *पूर्ववत,* पादटिप्पणी संख्या ५ ।

*"प्रजानां रक्षणं दानमिज्या॑ध्ययनमेव च ।*
*विषयेष्वप्रशक्तिश्च क्षत्रियस्य समासतः॥"*

२२) *कौटलीय अर्थशास्त्र,* १.३.१.६, पूर्ववत, पादटिप्पणी संख्या १४ ।

*"क्षत्रियस्याध्ययनं यजनं दानं शस्त्राजीवो भूतरक्षणं च ।"*

२३) वज्राचार्य, *पूर्ववत,* पादटिप्पणी संख्या ३, पृ. १२ र १५ ।

२४) वैद्य, मानन्धर र जोशी, *पूर्ववत,* पादटिप्पणी संख्या ९, पृ. २६ मा उल्लेखित ।

२५) *ऐजन,* पृ. ३० ।

२६) गोपालसिं नेपाली, *दि नेवास,* बम्बई: यूनाइटेड एशिया पब्लिकेशनस, १९६५ ई, पृ. १५९ र १६० ।

२७) भैरव बहादुर प्रधान, *मध्यकालीन नेपाल,* काठमाडौं:कृष्ण बहादुर प्रधान, वि.सं. २०१० (१९५३ ई.), पृ. ६७ ।

२८) डि.आर.रेग्मी, *मेडिभल नेपाल,* भाग दुई, कलकत्ता: फर्मा के.एल. मुखोपाध्याय, १९६६ ई., पृ. ७४६ मा उल्लिखित ।

२९) डोरबहादुर बिष्ट, *पिपुल अफ नेपाल,* काठमाडौं: रत्नपुस्तक भण्डार, १९९६ ई., छैठौं संस्करण, पृ. २० ।

३०) *मनुस्मृति* १.९०, पूर्ववत, पादटिप्पणी संख्या ५ ।

*"पशुनां रक्षणं दानमिज्याध्यायनमेव च ।*
*वाणिक्पथं कूसीदं च वैश्यस्य कृषिरेव च ॥"*

३१) *कौटलीय अर्थशास्त्र,* १.३.१.७, पूर्ववत, पादटिप्पणी संख्या १४ ।

*"वैश्यस्याध्ययनं यजनं दानं कृषिपाशुपाल्ये वाणिज्या च ।"*

३२) वज्राचार्य, पूर्ववत, पादटिप्पणी संख्या ३, पृ. ५१, ५२ र ५६ ।

३३) वैद्य, मानन्धर र जोशी, पूर्ववत, पादटिप्पणी संख्या ९, पृ. २७ ।

३४) वज्राचार्य र मल्ल, पूर्ववत, पादटिप्पणी संख्या २, पत्र संख्या ६३ ।

३५) शङ्करमान राजबंशी, कान्तिपुर शिलालेख सूची, काठमाडौं: राष्ट्रिय अभिलेखालय, वि.सं. २०२७ (१९७० ई.), पृ. ३८ र ३९ ।

३६) धनवज्र वज्राचार्य र अरू, इतिहास संशोधनको प्रमाण प्रमेय, पहिलो भाग, ललितपुर: जगदम्बा प्रकाशन, वि.सं. २०१९ (१९६२ ई.), मूलभाग पृ. १३६ ।



३७) धनवज्र वज्राचार्य, मध्यकालका अभिलेख, काठमाडौं: त्रि.वि.वि.,नेपाल र एशियाली अनुसन्धान केन्द्र, कीर्तिपुर, वि.सं. २०५६ (१९९९ ई.), पृ. १२ र १५ ।

३८) डि.आर.रेग्मी, *मेडिभल नेपाल,* भाग चार, पटना: दि अथर, १९६६ ई., पृ. १८२ ।

*"... वैश्यासंहृत्उ शस्योपचयपरिचयान्याप्त*
*राज्याधिकारान्कान्ती कान्त्युग्र वर्णाश्रम समुपचिता ..."*

३९) मनुस्मृति १.९१, पूर्ववत, पादटिप्पणी संख्या ५ ।

*"एकमेव तु शूद्रस्य प्रभूः कर्म समादिशत् ।*
*एतेषामेव वर्णानां सूश्रुषा मनसूयया ॥"*

४०) वज्राचार्य, *पूर्ववत,* पादटिप्पणी संख्या ३, पृ. ४८६ र ४८७ ।

४१) हरिराम जोशी, *अभिनव संस्कृति कोष,* ललितपुर: जोशी रिसर्च इन्स्टिच्यूट, वि.सं. २०५८ (२००१ ई.), पृ. ३५५ मा उल्लेखित ।

४२) चुन्दा वज्राचार्य, जितामित्र मल्लकालीन थर:पौ, काठमाडौं: त्रि.वि.वि., ने.ए.अ.केन्द्र, वि.सं. २०५३ (१९९६ ई.), पृ. १८ ।

४३) वज्राचार्य, *पूर्ववत,* पादटिप्पणी संख्या ३७, पृ. १९१ र १९२ ।

४४) चित्तरञ्जन नेपाली, *जनरल भीमसेन थापा र तत्कालीन नेपाल,* काठमाडौं: रत्न पुस्तक भण्डार, २०२० वि.सं. (१९९३ ई.), पृ. ३२२ देखि ३२५ ।

४५) विलियम कर्कपेट्रिक, *आन एकाउण्ट अफ दि किङडम अफ नेपूल,* न्यू दिल्ली: एशियन पब्लिकेशन सर्भिस, १९७५ ई., पृ. १८४ ।

४६) किङ्स्ले डेभिस, *ह्युम्यान सोसाईटी,* न्यूयोर्क: दि माकमिलन कम्पनी, १९५४ ई., पृ. ४४ ।

४७) डी.आर.रेग्मी, *मोड्न नेपाल,* कलकत्ता: फर्मा के. एल. मुखोपाध्याय, सन् १९६१, पृ. ७८-७९ ।

४८) धनवज्र वज्राचार्य र ज्ञानमणि नेपाल (सं.), *ऐतिहासिक पत्र संग्रह,* पहिलो भाग, काठमाडौं: नेपाल संस्कृति परिषद, वि. सं. २०१४ (१९५७ ई.), पृ. २७ ।

४९) राईट, *पूर्ववत,* पादटिप्पणी संख्या १०, पृ. १७१ ।

५०) तुल्सी नारायण श्रेष्ठ, *नेपालका नेवारहरू : पहिचान र पृष्ठभूमि,* काठमाडौं: अनुसन्धान तथा विकास संस्था, वि.सं. २०६६, पृ. १२ ।

५१) राईट, *पूर्ववत,* पादटिप्पणी संख्या १०, पृ. १०३ ।

५२) देवी प्रसाद लम्साल (सं.), *भाषावंशावली,* भाग २, काठमाडौं: पुरातत्व विभाग, नेपाल राष्ट्रिय पुस्तकालय, २०२३ वि.सं. (१९६६ ई.), पृ. २६ ।

५३) जनकलाल शर्मा, *हाम्रो समाज एक अध्ययन,* काठमाडौं: साझा प्रकाशन, वि.सं. २०४९ (१९९२ ई.), पृ. ३३९ मा उल्लेखित ।
५४) रोवर्ट ली सदरल्याण्ड, *इन्ट्रोडक्टरी सोसियोलोजी,* कलकत्ता: अक्सफोर्ड एण्ड आई बी एम, १९६१ ई., पृ. ३१६ ।
५५) श्रेष्ठ, *पूर्ववत,* पादटिप्पणी संख्या ५०, पृ. १९ ।
५६) सुनीति कुमार चटर्जी, *किरात जन कृति,* कलकत्ता: रायल एशियाटिक सोसाइटी अफ बेंगाल, १९५१ ई., पृ. १८३ ।
५७) (क) डि.आर. रेग्मी, *मेडिभल नेपाल,* भाग तीन, कलकत्ता: फर्मा के.एल.मुखोपाध्याय, १९६६ ई., पृ. ७२, अभिलेख परिशिष्ट
(ख) रेग्मी, *पूर्ववत,* पादटिप्पणी संख्या ३८, पृ. ४२ र ६८ ।
५८) (क) रेग्मी, *पूर्ववत,* पादटिप्पणी संख्या ३८, पृ. ६, ४२, ६२ र ६८ ।
(ख) वज्राचार्य, *पूर्ववत,* पादटिप्पणी संख्या ३७, पृ. ३६ र २३० ।
५९) वज्राचार्य, *पूर्ववत,* पादटिप्पणी संख्या ३७, पृ. ३९४ ।
६०) सत्यकेतु विद्यालङ्कार, *भारतका प्राचीन इतिहास,* मौसुरी: सररस्वती सदन, १९६० ई., पृ. २५६ ।
६१) वज्राचार्य र मल्ल, *पूर्ववत,* पादटिप्पणी संख्या २, पत्र संख्या १८ ।
६२) रेग्मी, *पूर्ववत,* पादटिप्पणी संख्या ५४ (क), पृ. ९० र ९१ ।
६३) *ऐजन,* पृ. ८०, थ्यासफु परिशिष्ट ।
६४) गौतमवज्र वज्राचार्य, *हनुमानढोका राजदरवार,* काठमाडौं: ने.ए.अ.संस्थान, त्रि.वि.वि., २०३३ वि.सं. (१९७६ ई.), पृ. २०३ ।
६५) राजवंशी, *पूर्ववत,* पादटिप्पणी संख्या ३५, पृ. १६७ ।
६६) प्रयागराज शर्मा, *कूल, भूमि र राज्य, नेपाल उपत्यकाको पूर्व मध्यकालिक सामाजिक अध्ययन,* काठमाण्डौ: ने.ए.अ.केन्द्र, त्रि.वि.वि. वि.सं. २०५४ (१९९७ ई.), पृ. ४२ ।
६७) वज्राचार्य र ज्ञानमणि नेपाल (सं.), *पूर्ववत,* पादटिप्पणी संख्या ४८ पृ. २६ ।
६८) *ऐजन,* पृ. २७ ।
६९) *श्री ५ वडामहाराजाधिराज पृथ्वीनारायण शाहको दिव्य उपदेश,* काठमाडौं: पुरातत्व विभाग, २०५४ वि.सं. (१९९७ ई.), पृ. २८ ।

***



# परिच्छेद : दुई

## संस्कार पद्वति

### परिचय

हिन्दू नेवार समुदायको सामाजिक जीवनका विविध पक्षहरूमध्ये संस्कार एउटा महत्वपूर्ण पक्ष हो । व्यक्तिको अस्तित्व गर्भमा पदार्पण गराउन अर्थात् गर्भाधानबाट मानिसको संस्कारका अनुष्ठान मनाउने कार्य प्रारम्भ हुन्छ । गर्भावस्थालगायत देहकालका विभिन्न चरणमा संस्कारका अनुष्ठानहरू क्रमशः पूरा गर्नु पर्दछ । मृत्यु हुंदासमेत अन्त्यष्ठि संस्कार मनाउने चलन छ । गर्भावस्थामा होस वा जीवनकालमा शारीरिक बृद्धिसंगै मानसिक विकाससमेत हुने हुँदा उसको स्वभावमा परिवर्तन आउन थाल्दछ । त्यस्तो प्रत्येक परिवर्तित स्वभाव प्रारम्भ हुने वेला सोहीअनुसारसंस्कारका अनुष्ठानहरू पूरा गर्नु पर्दछ । अर्थात् व्यक्तिलाई उसले निर्धारित उमेरमा पदार्पण गर्ने वेला तोकिएको संस्कार पूरा गरिन्छ । संस्कार मनाउनुको अभिप्राय धार्मिक तथा वैदिक क्रियाद्वारा व्यक्तिको मानसिक र वौद्धिक विकास गरी सुसंस्कृत बनाउनु हो । मानिस जन्मिदा उसले केही जानेको हुँदैन । अवोध शिशुको उमेर बढ्दै जाँदा उसलाई आवश्यकताअनुसार सामाजिक, सांस्कृतिक, धार्मिक तथा नैतिक ज्ञान दिँदै जानु पर्दछ । यसले व्यक्तिको जीवनलाई सुसंस्कृत वनाउनुका साथै उसको व्यक्तित्वसमेत विकास गर्दछ । संस्कारमा अनेक किसिमका प्रारम्भिक ज्ञान, धार्मिक विधि विधान, यसअन्तर्गतका नियम तथा अनुष्ठानहरूसमेत समावेश भएको हुन्छ । यसले केवल औपचारिक रूपमा शारीरिक संस्कारहरू मात्र पूरा गर्ने नभई व्यक्तिलाई सुसंस्कृत बनाई सम्पूर्ण व्यक्तित्वको परिष्कृतता, शुद्धि तथा पूर्णता पनि प्रदान गर्दछ ।[१] संस्कारको कार्यन्वयन गर्ने क्रममा विभिन्न देवीदेवताको स्मरण गर्दै पूजापाठ, होम, मन्त्र उच्चारणसमेत गरी धार्मिक तथा सांस्कृतिक विधि विधान पूरा गर्ने परम्परा छ । व्यक्तिलाई परिशुद्धि गर्ने शुभकार्यमा उत्पन्न हुनसक्ने दुपप्रभाव निराकरण गर्ने उद्देश्यले त्यस्तो धार्मिक विधि पूरा गर्ने गरेको देखिन्छ । यससन्दर्भमा कौटिल्यले राक्षश वा

दुष्टको भय उत्पन्न भएमा त्यसको नाश गर्ने कर्मको अनुष्ठान सम्पन्न गर्नु भनिएको छ ।[२] मानिसको व्यक्तित्व तथा सामाजिक विकास होस र उसको शारीरिक तथा भौतिक जीवन सुव्यवस्थित ढङ्गले उन्नति होस भनि संस्कारका कार्यहरू पूरा गर्छन् ।[३] मानिसको जन्म त्यतिकै सरल तरिकाबाट प्राप्त हुँदैन । जीवात्माले अनेकौ पाशविक योनिहरू पार गरेपछि मात्र मनुष्य योनिमा आउँछ भन्ने मान्यता समाजमा प्रचलित हुँदैआएको छ । यस्तो अवस्थामा थुप्रै पाशविक वृत्तिहरू, अनेक दोष र कमजोरीहरू रहेका हुन्छन् । त्यसलाई समाप्त पारी विशुद्ध मानव, अझ दिव्य मानव बनाउने उद्देश्यले मानिसका निमित्त गर्भावस्थादेखि नै विभिन्न संस्कारको व्यवस्था गरिएको हो ।[४] वास्तवमा संस्कार र मानव जीवनबीच अन्योन्याश्रित सम्बन्ध रहिआएको छ । त्यसकारण हिन्दू नेवार समुदायले सनातनकाल देखि धार्मिक सिद्धान्त र सामाजिक परम्परालाई सर्वोपरी मान्यता दिई संस्कारका अनुष्ठानहरू पूरा गर्ने प्रचलन विकास गर्दैआएको हो । सोही परम्परालाई हालसम्म निरन्तता दिदै आएको छ ।

**संस्कारको संख्या**

मानव जीवनमा पूरा गरिने संस्कारका विभिन्न अनुष्ठानहरू छन् । यसको प्रचलन वैद्दिककालदेखि नै हुँदैआएको छ ।[५] गृह्यसूत्र, स्मृति आदि धर्मग्रन्थहरूमा संस्कारका अनुष्ठानहरूको स्पष्ट रूपमा उल्लेख भएको छ । तर त्यसको संख्यामा भने एकरूपता रहेको पाईदैन । धर्मशास्त्रअनुसार संस्कारहरूको संख्या पनि फरक फरक उल्लेख भएको छ । बैखानस गृह्यसूत्रमा निम्न अठार प्रकारका अनुष्ठानबारे चर्चा गरिएको छ ।[६]

| | | |
|---|---|---|
| १) ऋतुसङ्गमन, | २) गर्भाधान, | ३) सिमन्त, |
| ४) विष्णुवलि, | ५) जातकर्म, | ६) उत्थान, |
| ७) नामकरण, | ८) अन्नप्राशन, | ९) प्रवसागमन, |
| १०) पिण्डवर्धन, | ११) चौलक, | १२) उपनयन, |
| १३) पारायण, | १४) व्रतवन्धविसर्ग, | १५) उपाकर्म, |
| १६) उत्सर्जन, | १७) समावर्तन, | १८)पाणिग्रहण |

अन्य गृह्यसूत्रहरूमा पनि संस्कारका संख्याहरू उल्लेख भएका छन् । जसमध्ये पारस्कर, बौधायन तथा वाराह गृह्यसूत्रमा १३ संस्कार र आश्वलायन गृह्यसूत्रमा ११ संस्कार उल्लेख गरिएका छन् ।[७]



तत्कालीन विद्वान्हरूले मानिसलाई अरू बढी आध्यात्मिक बनाउने तर्फ जोड दिन थाले । त्यसकारण स्मृतिकालमा आएर यसको संख्या अरू पनि थपिएको पाइन्छ । गौतमस्मृतिमा निम्न लिखित ४० (चालीस) संस्कारका नामहरू उल्लेख भएका छन् ।[८]

| | |
|---|---|
| १) गर्भाधान, | २) पुंसवन, |
| ३) सीमन्तोन्नयन, | ४) जातकर्म, |
| ५) नामकरण, | ६) अन्नप्राशन, |
| ७) चौल (मुण्डन), | ८) उपनयन, |
| ९) ऋगवेदको आरम्भ, | १०) यजुर्वेदको आरम्भ, |
| ११) सामवेदको आरम्भ, | १२) अथर्ववेदको आरम्भ, |
| १३) समावर्त्तनस्नान, | १४) सहधर्मचारिणी, |
| १५) देवयज्ञ, | १६) पितृयज्ञ, |
| १७) मनुष्ययज्ञ, | १८) भूतयज्ञ, |
| १९) ब्रह्मयज्ञ, | २०) अगहन |
| २१) पुस वदी ७ को श्राद्ध, | २२) माघ वदी ८ को श्राद्ध, |
| २३) श्रावणीकर्म, | २४) आग्रहायणीयज्ञ, |
| २५) चैत्रको पूर्णमासीको यज्ञ, | २६) आश्विनको पूर्णमासीको यज्ञ, |
| २७) अग्निको स्थापन, | २८) अग्निहोत्र, |
| २९) दर्शपौर्णमासयज्ञ, | ३०) आग्रयणेष्टिक |
| ३१) चतुर्मासयज्ञ, | ३२) पशुबन्धयज्ञ, |
| ३३) सौत्रामणियज्ञ, | ३४) अग्निष्टोम, |
| ३५) अत्यग्निष्टोम, | ३६) उक्थ्य, |
| ३७) षोडशी, | ३८) वाजपेय, |
| ३९) अतिरात्र र | ४०) अप्तोर्याम । |

यद्यपि अन्य स्मृतिमा भने यति धेरै संस्कारका संख्याहरूको नाम दिएको छैन । व्याසस्मृतिमा निम्न उल्लिखित १६ संस्कारहरू मात्र उल्लेख गरिएको पाइन्छ ।[९]

| | | |
|---|---|---|
| १) गर्भाधान, | २) पुंसवन, | ३) सीमन्त, |
| ४) जातकर्म, | ५) नामकरण, | ६) निष्क्रमण, |
| ७) अन्नप्राशन, | ८) मुण्डन, | ९) कर्णभेद, |

१०) जनेऊ, ११) वेदारम्भ, १२) केशान्त,
१३) ब्रह्मचर्य समाप्तीस्नान (समावर्त्तनस्नान), १४) विवाह,
१५) विवाहको अग्नि ग्रहण र १६) दक्षिणाग्नि ।

हाम्रा पूर्वजहरूले संस्कारको विकासमा धेरै समय बिताएका छन् । संस्कारले व्यक्तिको व्यक्तित्व विकास गरी सामाजिक परम्परा तथा रीतिरिवाजअनुसार रहन, वस्न, व्यवहार गर्न र समाजको उत्थानका लागि योगदान पुऱ्याउन सक्षम बनाउनु पर्ने भएकोले गौतमस्मृतिमा ४० संस्कारका अनुष्ठानहरू पूरा गर्नु पर्ने प्रावधान राखिएको देखिन्छ । तर त्यति धेरै अनुष्ठानहरू सहजै पूरा गर्न सकिने देखिन्दैन । त्यसकारण पछिल्लो समय विद्वान्हरूले उल्लेखित अनुष्ठानहरूलाई घटाइएको पाइन्छ । यसको उदाहरणको रूपमा व्याසस्मृतिमा उल्लेख भएको १६ संस्कारलाई लिन सकिन्छ । यसमा पनि पछि गएर समय सापेक्ष परिस्कृत र परिमार्जित गर्दै जीवनका लागि अतिआवश्यक ठानिएका संस्कारहरू मात्र पूरा गर्ने परम्परा विकास गरिएको थाहा हुन्छ । सोऱ्ह संस्कारका अनुष्ठानहरूको संख्यालाई कम गरी गर्भाधानदेखि विवाहसम्मको दशवटा र मृत्युमा पूरा गर्ने अर्को एक अन्त्येष्टि संस्कारसमेत गरी जम्मा एघार वटा अनुष्ठानहरू व्यवहारमा प्रचलित छन् ।

## हिन्दू नेवार समुदायमा प्रचलित संस्कारहरू

शास्त्रहरूमा संस्कारका अनुष्ठानबारे फरक फरक संख्या बताइएको छ । नेवार समुदायले भने जीवनको निमित्त आवश्यक र अनिवार्य देखिएका संस्कारलाई प्रचलनमा ल्याई राखेको थाहा हुन्छ । यस क्रममा गर्भाधानदेखि विवाहसम्मको दशवटा संस्कारका अनुष्ठानहरू पूरा गरिन्छ । त्यो प्रचलन मध्यकालीन परम्परागत पद्धतिको अवलम्बन हो । तत्कालीन हस्तलिखितग्रन्थ तथा थ्यासफुहरूमा दशकर्म पद्धतिलाई दशक्रिया पनि भन्ने चलन थियो । तत्कालीन ऐतिहासिक स्रोतहरूमा समाजमा प्रचलित संस्कारका अनुष्ठानहरूलाई दशकर्म पद्धति भनिए तापनि पूरा गरिनु पर्ने संस्कारका अनुष्ठानहरूको संख्या भने त्यस भन्दा बढी उल्लेख गरिएको छ । मध्यकालीन संस्कारसम्बन्धी हस्तलिखितग्रन्थहरूमा उल्लिखित दशकर्म पद्धतिअन्तर्गत संस्कारका अनुष्ठानहरू निम्न प्रकार छन् ।[१०]



१) गर्भाधान, २) पुंसवन, ३) सीमन्तोन्नयन,
४) जातकर्म, ५) निष्क्रमण, ६) नामकरण,
७) अन्नप्राशन, ८) चूडाकरण, ९) उपनयन
१०) समावर्त्तन र ११) विवाह

संस्कारसम्बन्धी तत्कालीन हस्तलिखितग्रन्थहरूलाई दशकर्म पद्धति नाम दिइए तापनि संस्कारका अनुष्ठानहरूको संख्या भने एघार उल्लेख भएका छन् । त्यसबाहेक अन्त्येष्टि संस्कारबारे यहाँ उल्लेख गरिएको छैन । त्यसलाई समेत जोड्दा बाऱ्हवटा अनुष्ठानहरू हुन आउँछ । तर वर्तमान हिन्दू नेवार समाज मध्यकालीन दशकर्म पद्धतिअनुसार चलेको पाईदैन । यस समाजमा खासगरी जन्मपूर्वका अनुष्ठानहरू व्यवहारमा देखिन्दैन । प्रचलित परम्पराअनुसार जन्मपछिका निम्न उल्लेखित दशवटा अनुष्ठानहरू चलन चल्तीमा रहेको पाइन्छ ।[११]

१) जातकर्म २) नाभी छेडन ३) छैठी
४) आशौच (न्वारन) ५) नामकरण ६) अन्नप्राशन
७) चूडाकरण ८) व्रतवन्ध ९) विवाह र
१०) अन्त्येष्टि ।

शास्त्रीय मान्यताअनुसार समाजमा माथिल्लो वर्णका अर्थात् द्विजहरूले मात्र संस्कार पूरा गर्ने प्रावधान छ । तर नेवार समाजमा त्यस्तो कठोर नीति अपनाइएको पाईदैन । तल्लो वर्णका मानिसहरूले पनि विभिन्न अनुष्ठानहरू पूरा गर्ने छुट दिइएको छ । यस्तो परम्परा वर्तमान समाजमा मात्र प्रचलित रहेको नभई परम्परादेखि लागु हुँदैआएको छ । यसको प्रत्यक्ष उदाहरणको रूपमा तत्सम्बन्धी हस्तलिखितग्रन्थलाई लिन सकिन्छ । शुद्र वर्णले पूरा गर्नु पर्ने संस्कारका अनुष्ठानहरू उल्लेख भएको हस्तलिखितग्रन्थ प्राप्त भएको छ । यद्यपि सो ग्रन्थ शूद्रवर्णका सबै जातजातिको निमित्त लेखिएको देखिन्दैन । किनभने त्यस ग्रन्थमा संस्कारको कार्य कलश स्थापना गरी ब्राह्मणद्वारा संचालन गर्ने उल्लेख भएको छ ।[१२] तत्कालीन समय पानी नचल्ने जाती कहाँ पुरोहित उपस्थित भई संस्कार कार्यन्वयन गराउने परम्परा रहेको पाईदैन । त्यसैले उल्लिखित ग्रन्थ शूद्रवर्णअन्तर्गतका पानी चल्ने जातिहरूको निमित्त लक्षित गरी लेखिएको बुझिन्छ ।

हुनत शूद्र वर्णअन्तर्गतका कपाली, (कुसले, जोगी, दर्शनधारी), च्याम्हखल (च्यामे), द्योला (पोडे), धोवी (रजक), मधैया, कनौजिया, खड्गी

आदि पानी नचल्ने जातीमा पनि संस्कारका विभिन्न अनुष्ठानहरू जस्तो जातकर्म, नामकरण, ब्रतबन्ध, बान्हा (गुफा राख्ने), विवाह, अन्त्यष्ठी संस्कार मनाउने चलन छ । तर ति जातिले मनाइने संस्कारहरूमा पुरोहित अर्थात् ब्राह्मण हुँदैनन् । साथै त्यहाँ कुनै मन्त्र वा श्लोक पनि वाचन गरिँदैन । त्यसकारण आफ्नो जातिमा संस्कारसम्बन्धी कार्य गर्नको निमित्त आफूहरू मध्ये कसैले गुभाजु (वज्राचार्य) कहाँ संस्कार सम्बन्धी सामान्य विधि र प्रक्रिया सिकेका हुन्छन् । तिनीहरूले नै आफ्नो समाजभित्र पुरोहितको काम गर्ने चलन छ ।[१३]

हिन्दू नेवार समुदायको द्विजहरूमा कुनै पनि संस्कार कार्यन्वयन गर्दा निश्चित विधिहरू पूरा गर्नु पर्ने परम्परा छ । प्रारम्भमा नाऊ (नापित) द्वारा नङ काट्न लगाई पूर्ण शरीर स्नान गर्नु पर्दछ ।[१४] तत्पश्चात्मात्र संस्कारको धार्मिक तथा सांस्कृतिक कार्य सुरु हुन्छ । यसक्रममा कलश स्थापना गरी देवीदेवताको आह्वान गर्छन् । कार्यसिद्धि तथा देवीदेवताको आशिर्वादको निमित्त पूजापाठ र होमसमेत गर्ने चलन छ । सो कार्य पूरा गरी संस्कार पूरा गर्ने व्यक्तिलाई "सेफारती" (धान, चामल, फूल, ज्यामिरको टुक्रा आदि काठको पाथीमा राखी शिरदेखि तीनपटक खन्याउने विधि) तथा "निर्म्मछ्रन" (सर्स्यूँ र रायो आगोमा बाली त्यसको धुँप लगाउने विधि) पूरा गर्नु पर्दछ ।[१५] घरको महिला मूलीले त्यस व्यक्तिलाई जलधारा बगाई भोटेतालाको साँचो समाउन लगाएर विशेष तरीकाबाट मूल पूजास्थल सम्म पुऱ्याए पछि ब्राह्मणले उनलाई स्वागत गरी भित्र्याउँछ । यसरी सेफारती र निर्म्मछ्रनको विधि संस्कार पूरा गर्ने व्यक्तिलाई पूजास्थलमा आगमन गराउनु अगाडि सफा र शुद्ध बनाउनको निमित्त गरिने कार्य हो । संस्कारको अन्तमा त्यस व्यक्तिलाई काँसको थालमा विभिन्न परिकारहरू सजाएर विशेष भोजन गराउने चलन छ । त्यस परम्परालाई "फणीनिनचके" (थायभू नके) भनिन्छ ।[१६] यसप्रकारको विधि नेवार समुदायको आफ्नो मौलिक सांस्कृतिक परम्परा हो ।

## गर्भाधान संस्कार

गर्भाधान संस्कार भनेको प्रजनन् कार्यभन्दा अगाडि सन्तान प्राप्तिको निमित्त विधि विधान पूर्वक देवीदेवताको आह्वान गरी पूजापाठ गर्नु हो । विवाह पश्चात् प्रत्येक नवदम्पती सन्तान प्राप्तीको लागि उत्साहित हुनु मानविय स्वभाव हो । त्यस्तो चाहना राख्नु सामाजिक अपक्षा



पनि हो । त्यसकारण विवाह पश्चात् पतिपत्नीलाई सँगै राखी गर्भाधान संस्कार पूरा गरिन्छ । यो संस्कारको उद्देश्य पत्नीको गर्भ शुद्धभई तत्काल गर्भधारण होस भन्ने कामना गर्नु हो । यो संस्कार पूरा गर्ने विधिबारे शास्त्रहरूमा वर्णन गरिएको छ । याज्ञवल्क्यस्मृतिमा पत्नीको ऋतुकाल (मासिकधर्म प्रारम्भ भएको चार दिनपछि) का दिनहरूमा गर्भाधान गर्नु भनिएको छ ।[१७] नेवार समाजमा शास्त्रीय सिद्धान्त अनुरूप गर्भाधान संस्कार पूरा गर्ने प्रचलन मध्यकालमा पनि थियो । दशकर्म पद्धतिसम्बन्धी तत्कालीन हस्तलिखितग्रन्थमा यसबारे उल्लेख भएको छ ।[१८] ग्रन्थको अलावा अभिलेखमा समेत ठूलो महत्वका साथ गर्भाधानबारे उल्लेख भएको छ । जयज्योतिमल्लकालीन फर्पिङस्थित एउटा अभिलेखमा स्थानीय जैतलक्ष्मीकी बुहारी कीर्तिलक्ष्मी गर्भाधान भएको घटनालाई यहाँ उदाहरणको रूपमा उल्लेख गर्न सकिन्छ ।[१९] गर्भधारण हुनुलाई मध्यकालमा "शरीलस दतनांव अथवा शरीलस दय" भन्ने गरिन्थ्यो । तत्कालीन हस्तलिखितग्रन्थहरूमा गर्भवती महिलाहरूको सन्दर्भमा त्यसरी सम्बोधन गरिएको पाइन्छ ।[२०] गर्भाधान गर्नुको उद्देश्य सन्तान प्राप्त गर्नको निमित्त प्रयत्न गर्नु हो । यो संस्कार मनाउन महिला र पुरुष दुवै शारीरिक रूपमा सक्षम हुनु आवश्यक छ । याज्ञबल्क्यस्मृतिमा संस्कार पूरा गर्ने उचित समय रजस्वला भएको चारौं देखि सोह्रौं दिनसम्म बताइएको छ ।[२१] तर मध्यकालीन ध्यासफुमा पत्नी रजस्वला भएको आठौं दिनमा मात्र यो संस्कार मनाउनु पर्ने कुरालाई उल्लेख गरिएको छ । सो दिन विहान सवैरै पूर्ण शरीर स्नान गरी सूर्य दर्शन पश्चात् यो संस्कार पूरा गरिन्छ ।[२२] यो संस्कार दुई चरणमा पूरा गर्ने परम्परा थियो । पहिलो चरणको कार्य पूजा र होम तथा दोस्रो चरणमा सहवासको कार्य हो । गर्भाधान हुने दिनको विहान पतिपत्नी दुवै जना सँगै वसी होम गर्ने र त्यस क्रममा देश र काललाई स्मरण गरी *"प्रति गर्भ संस्कारा यास्यामुतपत्स्यमाना पत्यवीजगर्भसमुद्भवपापनिवृत्यर्थमिमां धर्म्मपत्नीं गर्भाधानसर्मणं संस्कारिष्यामि"* भन्ने वाक्यको उच्चारण गरी संकल्प गर्नु पर्दछ ।[२३] तत्कालीन संस्कार पद्धतिसम्बन्धी हस्तलिखितग्रन्थमा गर्भाधान संस्कारको समयमा पूरा गर्नु पर्ने यज्ञ विधिबारे उल्लेख भएको छ ।[२४] विधिपूर्वक संस्कार पूरा गरेको राती गर्भ धारणको लागी सहवास गराउने परम्परा छ ।

विवाह भएको लगतै गर्भाधान संस्कार पूरा गरिन्छ । यस संस्कारलाई पहिलो चोटी एक पटकमात्र पूरा गर्ने नियम छ । एकपल्ट संस्कार पूरा

गरिएको सुसंस्कृत क्षेत्रमा जति वटा भर्ग रहे पनि त्यो निर्दोष मानिन्छ ।[२५] दशकर्म पद्धतिको तत्कालीन थ्यासफुमा भने यस विधिलाई पहिलो रजस्वला भएको समयमा पूरा गर्ने बताइएको छ ।[२६] यसबाट सुरुमा एकपटक संस्कार पूरा गरी सकेपछि गर्भाधानको निमित्त निर्देशित गरेको दिनहरूमा कुनै पनि पटकको ऋतुकालमा सहवासको कार्य गर्न सकिने मान्यता रहेको पाइन्छ ।

शास्त्र तथा हस्तलिखितग्रन्थहरूमा विवाहित महिलाको गर्भ पवित्र रहोस र उचित समयमा गर्भधारण होस भन्ने कामना राखी यो संस्कार पूरा गर्ने गरिए तापनि यस परम्पराले निरन्तरता पाएको देखिदैन । किनभने हिजोआज नेवार समुदायमा यो प्रचलन रहेको पाईदैन । यद्यपि ब्राह्मणवर्गमा यस संस्कारको केही सांस्कृतिक अवशेष अहिले पनि देख्न पाइन्छ । गर्भाधान संस्कारका प्रमुख विधिहरूमध्ये गर्भसोधन पनि एउटा हो । मध्यकालीन संस्कारसम्बन्धी हस्तलिखितग्रन्थमा गर्भाधान संस्कारअन्तर्गत गर्भसोधन क्रिया र त्यस क्रममा उच्चारण गर्नु पर्ने मन्त्रहरू उल्लेख गरिएको छ ।[२७] ब्राह्मणवर्गमा विवाह पश्चात् पहिलो पटकको सहवासमा संभोग गर्नु भन्दा अगाडि पतिले पत्नीलाई संगै राखी बायाँ हातमा कुशलिई आफ्नो शरीरको पछाडिबाट घुमाएर पत्नीको पेटमा छुवाउने परम्परा छ । त्यस सांस्कृतिक कार्यलाई गर्भसोधन भनिन्छ ।[२८] विवाहको उद्देश्य आफ्नो कुल (वंश) को विस्तार गर्न सन्तान प्राप्ति गर्नु हो । तसर्थ प्रत्येक नवदम्पति तथा उनका मातापिताले सन्तान प्राप्तीको लागि कामना गर्नु पर्ने हो । सोही उद्देश्य पूरा गर्न समाजमा गर्भाधान संस्कार प्रतिपादन गरी राखेको छ । हुनत गर्भाधान भनेको दम्पत्तिको आपसी शारीरिक सम्बन्धबाट हुने प्राकृतिक क्रिया हो । त्यसोभए तापनि हिन्दू सम्प्रदायमा नवदम्पतिले अपेक्षित रूपमा राम्रो गर्भाधान होस भन्ने कामना गरी सांस्कृतिक कार्य पूरा गर्ने परम्परा विकास भएको हो । महान र पुण्यआत्मालाई आफ्नो गर्भमा आकर्षित गर्न गर्भाधान गर्ने व्यक्तिहरूको आचार विचार शुद्ध र उत्तम हुनु पर्दछ । साथै समय पनि उत्तम हुनु पर्दछ । किनकी उत्तम ठाउँ र उत्तम अवस्थामा गर्भाधान गर्नाले नै उत्तम आत्मा आउँछ ।[२९] त्यसकारण गर्भाधान संस्कारको प्रचलन प्रत्येक नवदम्पतिको निमित्त उसको कूल र त्यस कूलको मर्यादाको निमित्त नितान्त आवश्यक छ । असल गर्भ भएन भने जन्मिने शिशु शारीरिक तथा मानसिक रूपमा विकृति भई कूलकै विनाश हुन सक्ने संभावना हुन्छ । त्यसो हुन नदिन राम्रो गर्भधारण हुनु पर्दछ । गर्भाधानपछि आउने जीवको सुषुप्त अवस्थामा रहने ज्ञान उर्जा



अर्थात् दिव्यज्ञानलाई परिमार्जित गर्न हाम्रा प्राचीन मुनिहरूले गर्भाधान संस्कारको विधान बनाएका हुन् ।[३०]

विवाहपश्चात् कुनै नवदम्पत्तिको यदाकदा गर्भधारण नहुन सक्छ । त्यस्तो अवस्थामा नेवार समुदायले गर्भधारणको निमित्त एउटा बेग्लै विधि अपनाउने गर्दै आएका छन् । त्यसलाई "नयें चायेके विधि" भनिन्छ । यो शब्द नेवारभाषाबाट आएको हो । यस भाषामा "नयें" शब्दले खानपान र "चायेके" शब्दले अरूची भन्ने बुझाउँछ । कुनै पनि महिला गर्भवती भएको लगतै साधारणतया खान मन नलाग्ने र वाकवाकी लाग्ने सक्दछ । सोही भावार्थमा नेवारहरूले महिलालाई गर्भवती बनाउने भन्ने आशयले "नयें चायेके" भन्ने गरिएको हो । विवाह भएको उचित समयमा पनि गर्भधारण नभएमा त्यस्तो दम्पत्तिका आमा बाबुले "नयें चायेके विधि" पूरा गराउने चलन छ । यो विधि सुडेनीको सहयोगमा पूरा गरिन्छ । त्यसको निमित्त आफन्त, नातेदार, छरछिमेक कहाँ सुत्केरी भएको वा हुन लागेको छ भनी खोजी गरिन्छ । कुनै घरमा सुत्केरी भएको पाएमा गर्भधारण हुन नसकेका दम्पत्तिलाई उसका आमा (सासु) ले दिरिअजि (सुडेनी) लाई समेत साथ लिई सुत्केरीको घरमा लगेर "नयें चायेके विधि" पूरा गरिन्छ । यो विधि "जयविलि व्यंकेगु" अर्थात् शिशु जन्मिएर लागेको सूतक चोखिनु भन्दा अगाडि सम्पन्न गर्नु पर्दछ । साथै त्यो विधि कार्यन्वयन गर्नको लागि सुत्केरी र भर्भधारण नभएकी महिलाको चिना जुराउनु आवश्यक छ । त्यसक्रममा सुत्केरीको चिना कडा हुनु पर्ने मान्यता छ । कुनै कारणले गर्भधारण नभएकी महिलाको चिना कडा भएमा त्यसको नकारात्मक असर सुत्केरी र उनको नवजात शिशुलाई पर्छ भन्ने धारणा प्रचलित हुँदैआएको छ । चिना जुरिएपश्चात् सासुले आफ्ना छोरा, बुहारी र सुडेनीलाई सुत्केरी भएको घरमा लगी सुडेनीलाई आवश्यक कार्य गर्न अह्राउँछ । त्यसै क्रममा सुडेनीले गर्भधारण नभएकी दम्पत्तिलाई नवजात शिशुको सामुन्ने बस्न दिन्छन् । साथै एउटा मालभोग केरा र एउटा मानचङ्गी सुपारी (एक जातको सानो सुपारी) मगाई केराको बोक्रा छोडाएर त्यसलाई दुई टुक्रा पारी माथिल्लो आधा भाग केरामा मानचङ्गी सुपारी भित्र दबाउँछ । सुडेनीले सो सुपारीसहितको केरालाई नवजात शिशुको शरीरमा छुवाई उसको सामुन्ने बसेका दम्पत्तिको चाडै गर्भधारण होस भन्ने कामना गरी मन्त्र फुकेर दुलाहालाई दिन्छ । दुलाहाले त्यो केरा आफ्नी दुलहीलाई सेवन गराउनको लागि उनको हातमा राखी

दिन्छ । दुलहीले पनि त्यसलाई दुई हातमा थापेर लिई दाँतले नछुवाई निल्छन् । सो कार्य पूरा गरी दम्पतिले शिशुलाई दक्षिणा चढाउने र सुत्केरीलाई एउटा चोलोको कपडा र सुडेनीलाई पनि दक्षिणा दिई अन्तमा सामान्य मिठाई भोजन गराएर "नयें चायेके विधि" समापन गर्दछ । वास्तवमा यस्तो विधि नवजात शिशु नराखीकन नै विवाहको लगतै नवदम्पत्तिलाई सहवास गराउनु भन्दा पहिले सम्पन्न गराउनु पर्ने हो । तर यहाँ त्यसो नभई अपेक्षित समयमा पनि सन्तान नभएमा मात्र पूरा गराउने परम्परा छ । यद्यपि यो परम्परा गर्भाधान संस्कारको एउटा पक्ष हो ।

## पुंसवन संस्कार

पुंसवन गर्भवती महिलालाई पूरा गरिने संस्कार हो । आश्वलायन गृह्‍यसूत्रमा गर्भमा रहेको भ्रुणलाई पुरुष बनाउन यो संस्कार पूरा गर्नु पर्ने बताइएको छ ।[३१] त्यसकारण पत्नी गर्भवती भएपछि विधि विधान पूर्वक यो संस्कार मनाईछ । यस संस्कारलाई सम्पन्न गर्ने समयावधिबारे शास्त्रहरूमा उल्लेख गरिएको पाइन्छ । तर सबै शास्त्रहरूको भनाइमा एकरूपता भने पाईदैन । व्यासस्मृतिमा गर्भधारण भएको तीनमहिनामा यसलाई मनाउने भनिएको छ ।[३२] यस्तैगरी याज्ञवल्क्यस्मृतिमा गर्भको शिशु तीनमहिना पूरा भएपछि गतिशिल हुनथाल्ने हुँदा त्यस भन्दा अगाडि कार्यन्वयन गरी सक्नुपर्ने निर्देशन दिएको छ ।[३३] यद्यपि आफ्नो अनुकूलतालाई ध्यानमा राखी शिशु जन्मिनु भन्दा अगाडि कुनै पनि महिनामा पूरा गर्न सकिने तर्क पनि पाइन्छ ।[३४] गृह्‍यसूत्र तथा स्मृतिहरूमा उल्लेख भएअनुसार पुंसवन संस्कार मध्यकालीन नेवार समुदायमा पनि मनाउने चलन थियो । तत्कालीन दशकर्म पद्धतिका विभिन्न हस्तलिखितग्रन्थ तथा थ्यासफूहरूमा यसबारे उल्लेख भएको छ । तत्कालीन हस्तलिखितग्रन्थहरूमा उल्लेख भएअनुसार यो संस्कार छैठौं महिनामा मनाउने प्रचलन थियो ।[३५] आफ्नो अनुकूलतालाई दृष्टिगत गरी जुनसुकै महिनामा पनि मनाउन सकिन्छ भन्ने धारणा रहेको हुँदा नेवार समुदायमा यसलाई छैठौं महिनामा मनाउने गरेको देखिन्छ । संस्कार मनाइने क्रममा ज्योतिषीलाई साईत देखाई उनले दिएको शुभ लगनमा यसलाई पूरा गरिन्छ । यस संस्कारको मूल आशय पुत्रप्राप्त गर्नु भएको हुँदा संस्कारको धार्मिक तथा सांस्कृतिक कार्य संचालन गर्दा पुत्र प्राप्ती होस भन्ने कामनासहित पूजापाठ गर्नु पर्दछ ।[३६] मध्यकालमा यो संस्कार मनाउँदा गर्भवती महिलाको माईतवाट सगुण, र



रक्तवस्त्र तथा अन्य सामग्रीहरू पठाउनु पर्ने प्रचलन थियो । ती सबै सामग्रीलाई संस्कारको पूजा क्रममा राखिनु पर्ने प्रावधानबारे तत्कालीन हस्तलिखितग्रन्थमा उल्लेख भएको छ ।[३७]

वैज्ञानिक धारणाअनुसार गर्भधारण हुँदा नै लिङ्ग निर्धारण भइसकेको हुन्छ । वाराहीसंहितामा पनि यही धारणालाई प्रस्तुत गरेको पाइन्छ । त्यसमा गर्भधारणको समय स्त्रीको रज अधिक भएमा कन्या र पुरुषको वीर्य अधिक भए पुत्र हुन्छ तर दुवैको वरावर भएमा नपुंसक शिशु जन्मिन्छ । तसर्थ विर्य वढाउनको निमित्त पुरुषले रसायन सेवन गर्नु पर्ने सुझाव दिइएको छ ।[३८] तर यस धारणा भन्दा फरक तरीकावाट गर्भ रहेको तीन महिनामा शिशुको लिङ्ग निर्धारण हुन्छ भन्ने मान्यता शास्त्रहरूमा उल्लेख गरिएको छ । यस बाहेक पारस्कर गृह्‍यसूत्रमा उल्लेख भएअनुसार सो अवधिभित्र आयुर्वेदिक उपचारद्वारा गर्भको शिशुको लिङ्ग पुरुष बनाउन सकिन्छ ।[३९] सो गृहसूत्रमा संस्कार मनाउँदा धार्मिक तथा सांस्कृतिक कार्य पूरा गरी सकेपछि राती वटवृक्ष (वरको बृक्ष) को छाल (बोक्रा) लाई पिंधेर त्यसको रस गर्भिणी महिलाको दाहिने नाकको प्वालवाट वेदका ऋचाहरूको उच्चारण गरी शरीरमा प्रत्यारोपण गर्ने र "गिलोय" तथा "ब्राम्ही" नामको औषधीलाई सुंठीको दुधमा मिलाई विस्तारै सेवन गराउनु पर्ने बताइएको छ । त्यस किसिमको प्रचलन मध्यकालीन नेवार समाजमा पनि रहेको पाइन्छ । त्यतिवेला यो संस्कार मनाउँदा पूजा क्रममा औषधीलाई पनि पूजा गरी त्यसलाई प्रत्यारोपण गर्ने विधि उल्लेख भएको छ ।[४०] त्यसकारण पुंसवन संस्कार केवल धार्मिक तथा सांस्कृतिक कार्यमात्र नभई आयुर्वेदिक उपचार पनि हो भन्ने वुझिन्छ ।

परम्परादेखि अवलम्वन गर्दै आएको यस संस्कार पद्धतिले नेवार समाज पनि पुरुष प्रधान रहेको देखाउँछ । यस समाजमा पनि छोरा नभई नहुने धारणा प्रचलित रहिआएको छ । मानिसले जन्मने वितिकै तीवटा ऋण अर्थात् ऋषिऋण, देवऋण र पितृऋण बोकेर आएको हुन्छ भन्ने मान्यता छ ।[४१] जीवनको विभिन्न चरणमा निर्धारित विधिहरू पुऱ्याई त्यसवाट मुक्ति पाइने धारणा रहिआएको छ । जसअनुसार ब्रम्हचारी भएर ऋषिऋणवाट, यज्ञ सम्पन्न गरी देवऋणवाट र पुत्रप्राप्त गरी पितृऋणवाट मुक्ती पाइने कुरामा विश्वास गरिन्छ । मानिसले आफू माथि रहेको पितृऋणवाट मुक्त हुनको निमित्त पनि पुत्र जन्माउनु पर्ने बाध्यात्मक प्रावधान छ । यही कारणले आफनी पत्नी गर्भवती भएपछि छोराको कामना गरी पुंसवन

संस्कार पूरा गर्ने परम्परा रहेको देखिन्छ । त्यसकारण पत्नी प्रत्येक पटक गर्भ धारण गर्दा यो संस्कार पूरा गर्नु श्रेयस्कर मानिन्छ ।[४२] तर छोरीको विषयमा यस्तो कुनै प्रावधान छैन ।

आफ्नो वंशको निरन्तरताको निमित्त पनि छोरा नभई हुँदैन भन्ने जनविश्वास छ । केही दशक अगाडि सम्म पनि घरबाहिर र घरमा समेत रेखदेख गर्न र आर्थिक आयमा संलग्न हुने काम परम्परागत रूपमा छोरावाट हुने गर्दथ्यो । छोरा नभएमा मृत्यु पश्चात् स्वर्गको ढोका खुल्दैन भन्ने धारणा त्यतिकै प्रचलित थियो । त्यसकारण मानिसहरू विवाह पश्चात् आफ्नो सन्तान छोरा होस भन्ने चाहना राख्ने गरेको थाहा हुन्छ । मानिसहरू छोरा विनाको जीवन अधुरो र असामान्जस्य महसुस गर्छन् । यद्यपि त्यसबेलाको जस्तो पुंसवन संस्कार मनाउने प्रचलन वर्तमान नेवार समाजमा देखिन्दैन ।

### सिमन्तोनयन संस्कार

गर्भवती महिलालाई पूरा गरिने अर्को संस्कार सिमन्तोनयन हो । गर्भमा रहेको शिशु विभिन्न कारणले पत्तन हुन सक्दछ । त्यस्तो घटनालाई मानिसहरू अदृष्य दुष्टशक्तिवाट भएको ठान्ने चलन छ । त्यसको निराकरणको निमित्त गर्भवती महिलालाई राम्रो स्याहार गरी गर्भको शिशुलाई कुनै किसिमको असर नपारी सुरक्षित वनाउन यो संस्कार मनाउने परम्परा रहिआएको हो । यसलाई मनाउने निश्चित समयबारे नीतिशास्त्रहरूमा एकमत पाइदैन । याज्ञवल्क्यस्मृतिअनुसार गर्भ रहेको छैठौं वा आठौं महिनामा सिमन्तोनयन संस्कार मनाउनु पर्दछ ।[४३] तर लध्वाश्वलायतस्मृतिमा भने गर्भ रहेको चौथो महिनामा नै पूरा गर्नु पर्ने प्रावधानलाई उल्लेख गरि एको छ ।[४४] गर्भवती महिलालाई आफ्नो स्वास्थ्य र गर्भको शिशुको रक्षार्थ पहिले नै उचित ज्ञान दिनु पर्ने हुंदा यसलाई चारौं महिनामा मनाउने भनिएको हुनसक्दछ ।

यो संस्कार मनाउंदाको प्रमुख सांस्कृतिक विधि गर्भवती महिलाको केशलाई उनका पतिले सृङ्गार गर्नु हो । पारस्कर गृहृचसूत्रमा "सिमन्त" को अर्थ "केश" र "उन्नयन" को अर्थ माथि "उठाउनु" भनि वर्णन गरिएको छ ।[४५] त्यसैले यो संस्कारको नाम सिमन्तोन्नयन रहेको हो । प्रत्येक महिलाको निमित्त धेरै नजिकको व्यक्ति उसको पति हुन्छ । पत्नीको समस्या धेरै जसो पतिले वुझ्न सक्छन् । गर्भवती महिलालाई सिमन्तोनयन



संस्कारमा पतीले पत्नीको कपाल कोरी दिने, श्रृङ्गार गराउने आदि कार्य पत्नीप्रति सेवा, रेखदेख तथा स्याहार सुसारमा केन्द्रित गराउनु र पतीको त्यस्तो व्यवहारवाट पत्नीमा आत्मवल वढाउन खोजेको देखिन्छ ।

व्यवहारिक दृष्टिकोणवाट कुनै पनि महिलाले गर्भधारण अवस्थामा असामान्जस्य महसुस गर्नु स्वाभाविक हो । सन्तान प्रतीको वात्सल्यवाट गर्भको भ्रुण पत्तन होला भन्ने मनमा ठूलो डर सबैमा हुन्छ । गर्भवती महिलाले धेरै गाह्रोसाह्रो काम गर्नाले गर्भपतन हुन सक्ने सामाजिक मान्यता प्रचलित हुँदै आएको छ । पहिलेको समाजमा घरको सम्पूर्ण काम बुहारीले गर्नु पर्दथ्यो । वास्तवमा गर्भवती महिलालाई शारीरिक तथा मानसिक आराम दिनुका साथै विशेप सावधानिक अपनाउनु वैज्ञानिक दृष्टिकोणवाट समेत नितान्त आवश्यक छ । तसर्थ संस्कारको समयमा घर परिवारका ठूला सदस्यलगायत अन्य पुत्रवति महिलाहरूले त्यस महिलालाई क्लेश उत्पन्न हुने कुनै पनि कार्य नगर्नु र गर्भको रक्षा गर्नु भन्ने सल्लाह दिनु पर्दछ । शास्त्रीय मान्यता पनि यही रहिआएको छ ।[४६] वास्तवमा यो संस्कार मनोवैज्ञानिक तरीकावाट आत्मवल विकास गराउने उद्देश्यले मनाउने गरिएको देखिन्छ ।

वर्तमान हिन्दू नेवार समाजमा विवाहको भोलिपल्ट सिन्दूरदानको अवसरमा दुलाहाले आफ्नो नवविवाहित पत्नीलाई विधिपूर्वक केश बाँटी जुरो पार्ने, सिन्दूर छाउने, टिका तथा गाजल लगाई श्रृङ्गार गरी दिने चलन छ । यस्तो सांस्कृतिक कार्य खासगरी ब्राहृमण र स्योस्यो (श्रेष्ठ) जातिले मनाउने गर्दै आएका छन् ।[४७] गर्भवतीलाई शारीरिक रूपले सुरक्षित रही गर्भको रक्षासम्बन्धी ज्ञान दिनु सबैका लागि आवश्यक कुरा हो । नेवार समाजमा यो प्रचलन धेरै पहिलदेखि चल्दै आएको छ । यसको प्रचलन मध्यकालमा पनि थियो । यक्षमल्लका छोरा जयराममल्लकी पत्नी अतुलदेवीको सिमन्तोनयन संस्कार वेदोक्तविधि अपनाई भव्य किसिमले मनाइएको उदाहरण पाइन्छ । त्यस अवसरमा देश विदेशका पाहुन वोलाइ मनोर ञ्जनका निमित्त नयाँ नाटकसमेत प्रदर्शन गरेको थियो ।[४८] साधारणतया महिलालाई पहिलो पटकको गर्भधारणमा यससम्बन्धी ज्ञान हुदैन । त्यसकारण यो संस्कार मनाउने गरिएको देखिन्छ । यसलाई कहिले मनाउने भन्ने विषयमा विभिन्न तर्कहरू रहेता पनि नेवार समुदायमा गर्भ रहेको आठमहिनापछि साईत हेरी शुभदिनमा पूरा गर्ने चलन थियो ।[४९]

त्यतिवेला यो संस्कार मनाउँदा गर्भवती महिलालाई विहान पूर्ण शरीर स्नान गराई शुद्ध पारी अष्टमङ्गलको सृङ्गारसहित वस्त्र पहिराउन लगाईछ । तत्पश्चात् पतिले कपाल बाटेर शिर माथि पुऱ्याई श्रृङ्गार गरी दिन्छन् । श्रृङ्गारको कार्य पूरा भएपछि उनलाई यज्ञमण्डपमा आशन ग्रहण गराई पूजा कार्य सम्पन्न गर्ने भनिएको छ ।[४०] यस संस्कारलाई नेवार भाषामा "संप्याके" भनिन्छ । पतिले आफ्नी गर्भवती पत्नीको कपाल कोरी बाटी दिने हुँदा "संप्याके" (कपाल बाट्ने) भनिएको हो । जुन सिमन्तोनयन संस्कारको एउटा महत्वपूर्ण कार्यविधि हो ।[४१] त्यस बाहेक संस्कार कार्यन्वयन गर्ने क्रममा विभिन्न धार्मिक तथा सांस्कृतिक कार्यहरू पूरा गर्नु पर्दछ । मातृपूजा, होम आदि कार्यहरूको साथ संस्कारको कार्य सम्पन्न हुन्छ । यसै क्रममा गर्भवती महिलाकी पतिले उदुम्वर (डुम्री) को कच्चाफलका गुच्छाहरू, दर्भ अथवा कुशको तीनवटा गुच्छा तथा कुनै सेतो चिन्ह भएको तीनवटा काँगियोसमेत राख्नु पर्ने प्रावधान छ ।[४२] यसले दुष्टशक्ति गर्भिणी महिलाबाट टाढा भाग्छन् भन्ने मान्यता रहेको छ ।[४३]

नेवार समुदयमा गर्भवती महिलालाई शिशु जन्मिनु भन्दा अगाडि अर्थात् गर्भ रहेको आठ महिना पूराभई नौं महिना लाग्न सुरु भएपछि दहिच्यूरासहित विशेष भोजन गराउने चलन छ । त्यस परम्परालाई नेवार भाषामा "धौबजी नके" (दही चिउरा खुवाउने) भनिन्छ । गर्भवती महिलाले गर्भधारण गरेको साधारणतया ९ महिनामा बच्चा जन्मिन्छ । त्यसरी शिशु जन्मनु भन्दा अगाडि गर्भवती महिलालाई दही चिउरा खुवाउनु पर्ने मान्यता प्रचलित हुँदैआएको छ । हिजोआज अनिवार्य रूपमा यो परम्परा मनाउने गर्दै आएका छन् । गर्भवती महिलाको लोग्ने र माईती दुवैतिरबाट छुट्टाछुट्टै दही चिउरा खुवाउने चलन रहिआएको छ । सवैभन्दा पहिला आफ्नो लोग्नेको घरबाट ख्वाईछ । त्यसपछि मात्र माइतीतर्फबाट ख्वाउन आउँछन् । दही चिउरा भोजन गराउँदा त्यस वाहेक विशेष रूपले उसिनेर तारेको र तेलमा पकाएको छुट्टाछुट्टै फुल, सुकेको माछा, वारा, केरा, र मिठाई रोटी राखिन्छ । यी उल्लेखित सवै सगुनका सामाग्रीहरू हुन् । त्यसकारण ती परिकारहरू एक एक जोडा राख्ने चलन छ ।

यो सांस्कृतिक कार्य मनाउँदा गर्भवती महिला र उनको दुलाहालाई संगै राखी सुकुण्डा बालेर पूजा कार्य प्रारम्भ गर्छन् । त्यसपछि गर्भवतीबाट पुत्र लाभ होस वा छोरा पाई सकेकाहरूले छोरीको कामनासहित दुबैलाई सगुणका सामग्री अर्पण गरी दही चिउरा खुवाउने सांस्कृतिक पूरा गर्छन् ।



यस्तो विधि छोरा र छोरी दुवैको पालामा एक एक पटक मनाईछ । छोरा प्राप्त नभएमा छोरा नपाएसम्म प्रत्येक पटकको गर्भधारणमा यो विधि पूरा गर्ने परम्परा छ ।

नेवार समाजमा प्रचलित यस परम्पराको आफ्नै विशेषता छ । पहिलाको जमानामा आजको जस्तो आधुनिक उपकरणहरू नभएको कारणले गर्भको शिशु कुन लिङ्गको हो भन्ने कुरा शिशु नजन्मिए सम्म थाहा हुँदैनथ्यो । त्यसकारण गर्भवती महिलाबाट नौ महिनामा "धौबजी नकेगु" विधि पूरा गर्दा पनि छोरा वा छोरीको कामना गर्ने परम्परा रहेको हो । वास्तवमा गर्भमा रहेका शिशुको लिङ्ग निर्धारण गर्भधारण भएकै वेलामा भई सकेको हुन्छ । तसर्थ दही चिउरा ख्वाउने कार्य गर्भवतीबाट छोरा वा छोरी पाउनका लागि व्यवहारमा ल्याइएको परम्परा होईन । वैज्ञानिक दृष्टिकोणबाट हेर्ने हो भने यो विधि गर्भवति महिलाले सरल तरिकाबाट शिशु जन्माउन सकियोस र सुत्केरी हुने बेला कुनै व्यवधान नआवस भन्ने हेतुले पौष्टिकता प्रदान गर्न खोजिएको देखिन्छ । गर्भवति महिलालाई सुत्केरी गराउन शारीरिक ताकत धेरै आवश्यकता पर्दछ । कमजोर गर्भवतीले शिशु जन्माउन निकै कष्ट व्यहोर्नु पर्दछ । कमजोरीता कै कारण गर्भवती महिलाको मृत्युसम्म हुने गर्दछ । तसर्थ सुत्केरी गराउन ताकत प्रदान गरी सजिलो तरिकाबाट शिशु जन्म होस भन्ने मूल उद्देश्यले दहि चिउरा ख्वाउने परम्परा विकास भएको देखिन्छ ।

"धौबजी नकेगु" (दही चिउरा खुवाउने) विधि सम्पन्न भएको केही दिन पछि गर्भवती महिलालाई व्यथा लाग्नु सुरु हुन्छ । शिशु जन्माउनको लागि आजको जस्तो अस्पताल नभएको अवस्थामा सुडेनीको सहयोगमा घर मै प्रशूति गराउँछन् । कुनै महिलाले व्यथा लागेको लगत्तै शिशुलाई जन्म दिन्छन् भने कसैले धेरै पिडा भोग्नु पर्दछ । यद्यपि व्यथा लाग्न सुरु भए पछि आफ्नो कुलदेवताको नाममा चामल र पूर्णपात्र धोगी नवजात शिशुले आमाको गर्भबाट छिटो छुटकारा पाउन् भन्ने कामना सहित भाकल गर्छन् । साथै स्थानीय गणेशमन्दिरमा तेल चढाउन लाने चलन पनि छ । त्यसक्रममा गणेशको शिरमा तेल अभिषेक गरिन्छ । वास्तवमा यो परम्परा व्यथा लागेकी गर्भिणीको अवस्थाबारे पूर्व जानकारी लिने प्रथा हो । त्यसरी अभिषेक गरिएको तेल एकै पटक सल्ल बगेर गएमा शिशु छिटो जन्मिन्छ अन्यथा व्यथा लामो रहने र गणेशको दायाँबाट बगेमा छोरा तथा बायाँबाट बगेमा छोरी हुने जनविश्वास रहिआएको छ । यस परम्परालाई

"चामा बेंकेगु विधि" भनिन्छ । नेवारभाषाको यस शब्दले व्यथा लागेकी गर्भवतीलाई छुटकारा दिलाउनु भन्ने बुझाउँछ । सो भाषाको "चामा" शब्दले जीवन र मरण तथा "बेंकेगु" शब्दले चोख्याउनु अथवा छुटकारा दिलाउनु भन्ने हुन्छ । यसबाट जीवन र मरणको दोसाधमा अल्झि रहेकी गर्भवती र उनको गर्भमा रहेको शिशुलाई छिटो छुटकारा दिनु भनिएको हो । "चामा बेंकेगु विधि" अन्तर्गत छिटो प्रशूति गराउन पौष्टिक आहार ख्वाउने, खप्परमा तेल लगाउने, चरस र स्वर्ण जस्ता धातु घोटेर पिलाउने समेत चलन छ ।

## जातकर्म संस्कार

नवजात शिशु जन्मिएपछि पूरा गर्ने संस्कारलाई जातकर्म भनिन्छ । मनुस्मृतिमा शिशुको सालनाल काट्नुभन्दा अगाडि यो संस्कार मनाउनु पर्ने बताइएको छ ।[५४] तर याज्ञवल्क्यस्मृतिको भनाइ भने केही फरक छ । त्यस स्मृतिमा शिशु जन्मिने वितिकै यो संस्कार मनाउने कुरा उल्लेख भएको छ ।[५५] नवजात शिशु जन्मिएपछि उनलाई अनिष्टकारी प्रभाव पर्न सक्छ भन्ने जनधारणा रहिआएको हुँदा त्यसबाट बचाउन र तिनको उज्ज्वल भविष्यको कामनासहित यस संस्कारको अनुष्ठान पूरा गर्ने परम्परा छ । शिशु जन्मिएपछि विधिपूर्वक जातकर्म संस्कार मनाउनु पर्ने शास्त्रीय हो ।[५६]

नेवार समुदायमा नवजात शिशुको जन्म भएको समयदेखि नाभि छेडनसम्मको सांस्कृतिक कार्यलाई जातकर्म संस्कार मान्ने चलन रहिआएको छ ।[५७] यद्यपि शिशु जन्मिएको लगतै सुत्केरी भएको कोठामा सुत्केरी र नवजात शिशु अगाडि केही सांस्कृतिक कार्य पूरा गर्ने परम्परा पनि छ । सो कार्य दिरिअजि (सुडेनी) द्वारा गरिन्छ । उनले एउटा कुनामा सुकुण्डा बाली त्यसै ठाउँमा देवी देवता क्रमश: "इनाय्" (स्थानीय गणेश), "छ्वास अजिमा" (क्षेत्रपाल देवी) र "अजिमा" (हारती माता) को कामना गरी प्रतिष्ठा गरिन्छ । सो प्रतिष्ठा गरिएको तीनवटै देवदेवी कहाँ एक एकवटा "ब्व" (चिउरा, मासु, गेडागुडी, साग, रक्सी आदी सहितको तयारी खाद्यपदार्थहरूको भाग) लगाई त्यसमा टीका र फूल लगाई पूजा गरेर धुप र दीयो बाली आरती गरिन्छ । त्यसबाहेक नून, अदुवा, ज्वानो, ध्यू, चाकू, मिठाई पनि चढाउनु पर्दछ । पूजा कार्य पूरा भएपछि दिरिअजिले त्यहाँ रहेका सबैलाई नून, अदुवा, ध्यू र चाकू सेवन गर्न दिइन्छन् र आफूले पनि खान्छ । त्यस परम्परालाई "स्युचापालु" भन्ने चलन छ । सुत्केरीलाई



शुद्ध तोरीको तेल पिलाउने पुरानो परम्परा हो । "स्युचापालु" सेवनको कार्य पूरा गरी "छ्वास अजिमा" को नाममा चढाएको भाग दिरिअजिले क्षेत्रपालमा चढाउन पठाउँछ । त्यसपछि सो शिशुको स्थानीय क्षेत्रपालदेवी सित सम्वन्ध रहने र उनलाई सो देवीले रक्षा गर्ने विश्वास गरिन्छ । "इनाय्" र "अजिमा" को अर्को दुई भाग भने उनी आफैले बोकेर लैजान्छन् ।

नवजात शिशु जन्मिएपछि अजिमा (हारती माता) कहाँ सिङ्गो सुपारी र सिन्दूर चढाउन पठाउनु पर्दछ । त्यो चलन पहिलेदेखि चल्दै आएको हो । मध्यकालीन एउटा ऐतिहासिक स्रोतमा पनि यस परम्पराबारे उल्लेख भएको छ ।[५८] अजिमा (हारती माता) लाई बालबालिकाको रक्षकदेवी मानिन्छ । शिशु जन्मिने वितिकै उल्लिखित वस्तुहरू चढाउन लानुको उद्देश्य सो देवीलाई शिशु जन्मिएको जानकारी दिनु र उनको रक्षा गर्न प्रार्थना गर्नु हो । हिजोआज खासगरी शहरी क्षेत्र र यसको वरपरका इलाकाका मानिसहरूले अस्पतालमा प्रशूति गराउने चलन विकास हुँदैआएको हुँदा घरमा दिरिअजि राखी सूतकरी गराउने र तत्सम्बन्धी धार्मिक तथा सांस्कृतिक कार्य निकै थोरै धरपरिवारमा मात्र हुने गरेको छ ।

परम्परागत विधिअनुसार शिशुको जन्मपछि पिताले पूर्ण शरीर स्नान गर्नु पर्ने चलन थियो । त्यसपछि ब्राह्मण राखी नान्दीमुखी श्राद्धसहित यस संस्कारको कार्य सम्पन्न हुन्थ्यो । त्यसवेला शिशुलाई आफ्नो पिताले स्वर्ण धातुद्वारा धिउ र मह प्राशन गराउने परम्परा थियो ।[५९] सो कार्य समयले भ्याए बच्चा जन्मिएकै दिनमा र नभ्याए त्यसको भोली वा पर्सि पल्ट पनि पूरा गर्ने चलन थियो । मध्यकालीन ऐतिहासिक घटनावलीमा छोरा पाएको तीन दिन पछि मात्र ध्यू र मह खुवाउन पाएको घटनाको टिपोट गरिएको छ ।[६०] त्यतिवेला शिशु जन्मिएको लगतै धृत र मह प्राशन गराउने परम्परा भएता पनि वर्तमानमा भने नामकरणको समयमा मात्र सो कार्य पूरा गर्ने चलन रहेको पाइन्छ ।[६१] आधुनिक दृष्टिकोणबाट ध्यू र मह पौष्टिक तत्व मानिन्छ । गर्भबाट भर्खर वायुमण्डलमा पदार्पन गरेका नवजात शिशुलाई यहाँको वातावरण अनुकूल रहन सक्ने वनाउनको लागि ती वस्तुहरू सेवन गराउने गरेको देखिन्छ । किनभने त्यसले शारीरिक तथा मानसिक विकासमा धेरै मद्दत पुऱ्याउँछ । साथै कानमा स्वर्ण वस्तु राखी पवित्र मन्त्र जप्छन् । ध्यू र महको प्राशनपछि पिताले शिशुलाई आमाको दूध खुवाउन आज्ञा दिन्छ ।[६२] जातकर्म संस्कार पूरा गर्दा पुत्र र पुत्री दुवैलाई एकै किसिमको सांस्कृतिक कार्य संचालन गर्ने गरिने भएता पनि पुत्रीको

संस्कार मनाउँदा मन्त्र रहित हुनु पर्ने कुरा लध्वाश्वलायनस्मृतिमा उल्लेख गरिएको छ ।[६३]

सूतकको सुद्विकरण (मचाबू ब्यंके) नभएसम्म सुत्केरीलाई बच्चा जन्माएकै कोठामा राख्छन् । उनीसित सुडेनी र सुत्केरी हेरचाह गर्न बसेका एकजना महिला बाहेक अरू कसैले पनि छ्यासमिस गर्नु हुँदैन । सुत्केरीले प्रयोग गरेका भाडाकुँडासमेत बाहिर ल्याउनु हुँदैन भन्ने मान्यता व्यवहारमा प्रयोग गर्दैआएको छ । त्यस्तो भाडाकुँडा बाहिर ल्याउन परेमा पखाल्न लगाई अनिवार्य रूपमा आगो स्पर्श गराउने चलन छ । सुत्केरीको विकार युक्त रक्तस्राव भइ रहने हुँदा कोठा र घरआगंनसमेत दुषित हुन सक्ने भएकोले उनलाई अलग्गै राखी बस्न र सुत्न परालको ओछ्यान बनाई दिने परम्परा थियो । कपडाको अन्य ओछ्यान लगाई दिंदा धुन गाह्रो हुने भएकोले परालको ओछ्यान लगाई दिने गरेको हो । हुनत यस्तो चलन गाउँघरमा अहिले पनि देख्न सकिन्छ । सूतकको सुद्विकरण पछि मात्र सुत्केरीले घरपरिवारका सदस्यहरूसित संगै बस्न सक्छन् । तर धार्मिक र सांस्कृतिक कार्य गर्न भने उपयुक्त मानिएको हुँदैन । पूर्ण रूपमा चोखो हुन बच्चा जन्माएको एक महिना पछि सुत्केरीले छुट्टै नुहाउनु पर्दछ । त्यसपछि मात्र सुत्केरी र उनका परिवारजनले सबैसित संगै बस्न, खान र धार्मिक तथा सांस्कृतिक कार्य गर्न मान्य हुन्छ ।

## नाता कुटुम्बलाई सूत्केरीको जानकारी

सुत्केरी भएको जानकारी नवजात शिशुको पिताका दाजुभाई र नातेदारलगायत सुत्केरीको माईतीमा पनि दिने चलन छ । त्यस्तो जानकारी दिनुलाई कुनै जातिमा "सिन्ह कंके छोय" (सिन्दूरको जानकारी पठाउने) ।[६४] र कुनै जातिमा "चिपालु क्यंके छवय्" (नुन र अदुवा देखाउन पठाउने) भन्ने चलन छ ।[६५] "सिन्ह कंके छोय" भनेर सुत्केरी भएको जानकारी दिन भुयूसिन्ह (सिन्दूर) को पोका पठाउँछन् ।[६६] त्यसको साथै सुपारी, चाकू, नुन, अदुवा र ज्वानो समेत राखी पठाउने चलन छ । त्यसरी पठाउने वस्तुहरूको परिमाण सधै एउटै किसिमको हुँदैन । जन्मिएका शिशुको लिङ्गअनुसार वस्तुहरूको परिमाण पनि फरक हुन्छ । जसबाट नवजात शिशुको लिङ्गबारे जानकारी पाउन सकिन्छ । छोरा जन्मिएको भए भुयूसिन्ह को अलावा शिङ्गो सुपारी, चाकू एक डल्लो, नुन, अदुवा र ज्वानो (इमु) पठाउने र छोरी भए आधा सुपारी, आधा डल्लो चाकू, नुन, अदुवा र ज्वानो पठाउने परम्परा छ ।[६७]



सुत्केरीको माइतीमा त्यस्तो जानकारी पाएपछि त्यसमा रहेको सिन्दूर, नून, अदुवा, ज्वानोलगायत अरू सामग्रीहरू पनि केही निकाली आफ्नो घरमा राख्छन् । त्यसलाई पूजा कोठामा लगी देवी देवतालाई चढाउनुको साथै आफ्नो परिवारका सदस्यहरू सबैले अलिअलि जुठो हाल्छन् । छोरीको घरबाट पठाएको सामग्रीहरूबाट जति निकालीएको छ त्यसको दोब्बर थपी पुनः फिर्ता पठाउने चलन छ । आफूले निकाली राखेको केही भाग आफन्तहरू कहाँ पनि पठाउँछन् । त्यसरी दाजुभाईलगायत आफन्त कहाँ माथि उल्लेखित सामग्री पठाउनु भनेको सुत्केरीको जानकारी दिनु हो । यस्तो आफन्त र नाताकुटुम्ब सबैलाई अनिवार्य रूपमा "सिन्ह कंके छवय" अर्थात् सुत्केरीको सूचना दिनु पर्दछ । यदि त्यसो गरिएन भने आफन्त तथा नाताकुतुम्बको सम्बन्धसमेत विच्छेद हुनजान्छ ।

## नाभि छेडन

शिशु जन्मिसकेपछि त्यसको सालनाल विधिपूर्वक काट्ने परम्परा छ । त्यसको सूचना आफन्तहरूलाई औपचारिक रूपमा दिनु पर्दछ । सूचना दिंदा सिन्दूर र सुपारी राखी पठाउने गर्छन् । समाजमा प्रचलित परम्पराअनुसार चौथो दिन सालनाल काटिन्छ । तथापि परिस्थितिअनुसार सो कार्यलाई अघि पछि सार्ने गरेको छ । मध्यकालीन एउटा घटना टिपोटमा पूजा कार्य रोकिएको हुँदा शिशु जन्मिएको भोलिपल्ट नै नाभि छेडन गरेको कुरा उल्लेख छ ।[६८] यस्तैगरी तत्कालीन समय अहल्या नाम गरेकी महिला सुत्केरीभई अष्टमी व्रतपूजा समेत रोकिएको थियो ।[६९] सुत्केरी हुँदा आफ्नो घरमा सूतक लाग्छ । नाताकुटुम्ब वा आफन्तहरूलाई भने सालनाल काटेपछि मात्र सूतक लाग्ने परम्परा छ । सूतकको समयमा कुनै पनि शुभ काम गर्न नहुने हुँदा आफ्नो अनुकूल पारी सालनाल काट्ने गरिएको देखिन्छ ।

शिशुको सालनाल काट्ने कार्य "कटा" (नाभिछेडी) जातीले गर्छन् । यस जातिलाई सो कार्य गर्न दक्ष मानिन्छ । तिनीहरूद्वारा सांस्कृतिक विधि पूरा गरी सालनाल काट्नु पर्दछ । त्यसरी काटेको सालनाललाई एउटा भेगोटमा राखी बेलुका क्षेत्रपालमा चढाउन पठाउँछ । जातिगत रूपमा सो कार्य गर्ने अधिकार पाएको हुँदा सो काम गराए बापत तत्कालीन समय पाँचकुरुवा च्यूरा र पाँचकुरुवा चामल दिने प्रचलन रहेको कुरा भाषा वंशावलीमा उल्लेख गरिएको छ ।[७०] नाभि छेदन गर्ने परम्परा शूद्रवर्णमा पनि

छ । तिनीहरूले पनि सांस्कृतिक विधि पूरा गरी नाभि छेदन गर्दै आइरहेको कुरा एउटा हस्तलिखितग्रन्थबाट ज्ञात हुन्छ ।[७१] यसरी परम्परागत रूपमा सांस्कृतिक विधि पूरा गरी नाभि छेदन गर्ने चलन नेवार समुदायमा र हिआएको छ । हिजोआज मानिसहरूले अस्पतालमा आधुनिक तरिकाबाट शिशु जन्माउने परम्परा विकास भएको छ । अस्पतालमा भने शिशु जन्मिएको आधा घण्टाभित्र सालनाल काटी सक्ने प्रावधान छ । त्यसकारण घरमा यस सम्बन्धी अलग्गै सांस्कृतिक कार्य पूरा गर्ने आवश्यकता बिस्तारै हराउँदै गएको छ ।

## षष्ठी पूजा

नवजात शिशु जन्मिएको छैठौं दिन षष्ठी पूजा गर्ने चलन छ । यसलाई स्थानीय भाषामा "प्युचा न्ह्याके विधि" भनिन्छ । सानो बच्चाको हातमा लगाउने सुनको बालालाई "प्युचा" र त्यसलाई लगाउने कार्यलाई "न्ह्याके" भनिन्छ । छैठीको दिन मनाइने विभिन्न सांस्कृतिक कार्यहरूमध्ये शिशुलाई "प्युचा" लगाई दिने महत्वपूर्ण कार्य पनि हो । त्यसैबाट छैठीलाई "प्युचा न्ह्याके" भनिएको हो । सो सांस्कृतिक कार्य षष्ठीदेवीलाई विधिपूर्वक पूजा गरी मनाईछ । शिशु जन्मिएको छैठौं दिनमा षष्ठी देवीको पूजा गर्ने प्रचलन पौराणिककालदेखि चल्दैआएको पाइन्छ । देवीभागवतमा सो देवी बालकलाई दिर्धायु बनाउने, भरणपोषण तथा रक्षा गर्ने भनि वर्णन गरिएको छ ।[७२] शास्त्रीय कथनअनुसार नवजात शिशु र षष्ठीदेवीबीच अन्योन्याश्रित सम्बन्ध छ । त्यसैले यस देवीलाई प्रसवगृहमा छैठौं दिनको अलावा एक्काईसौं र अन्नप्राशनको शुभ अवसरमा समेत पूजा गरिन्छ ।[७३] यस दिन चित्रगुप्तले बालकको "भाग्य" लेखेर जान्छन् भन्ने किंवदन्ती पाइन्छ ।[७४] त्यसैले नेवारहरू यो कर्मलाई महत्वका साथ पूरा गर्छन् ।

छैठीको दिन नवजात शिशुलाई "प्युचा" लगाउनको निमित्त सुत्केरीको माइतीबाट अन्य सामग्रीहरूको अलावा आफ्नो गच्छेअनुसार सुन वा सुन जडित बाला र हातमा लगाई दिन औंठी पठाई दिन्छ । छैठी पूजा बेलुका मनाइने सांस्कृतिक कार्य हो । छैठी पूजामा शिशुको फुपूले महत्वपूर्ण भूमिका निभाउँछ । त्यसको लागि शिशु जन्मिएकै कोठाको छेउमा गोबरले भुँई लिपेर भित्तामा गोबरकै एउटा षष्ठिकादेवीको आकृति बनाईछ । लिपेको ठाउँमा एउटा सानो सुकुल वा अन्य चकटी लगाई त्यसमा फुपूले आशण ग्रहण गरी शिशुलाई काखमा लिएर छैठी कर्म



प्रारम्भ गर्छन् । आफू बसेको चारैतिर चोखो पानीले ६, ८, १० वा १२ वटा ससाना मण्डलहरू बनाएर त्यसमा "बाकीजाकी" (आधाभाग धान मिसिएको चामल) राखी त्यसको माथि माटाका प्यालाहरूमा दीयो बाल्छन् ।[७५] यसैबेला शिशुलाई तेल लगाई श्रृङ्गार गर्ने र "प्युचा" लगाई पूजापाठ पनि गरिन्छ । षष्ठी पूजाको क्रममा गाजल बनाउनको निमित्त मोहनी (कालो टीका) थाप्ने परम्परा छ ।[७६] सो दिनदेखि सुत्केरी र शिशु दुवैले गाजल लगाउन सुरु गर्छन् । छैठी कर्ममा सुत्केरी र शिशुलगायत फुपू तथा त्यहाँ उपस्थित अन्य महिलाले पनि सोही गाजल लगाउँछन् । परम्परादेखि चल्दै आएको छैठी कर्मको सांस्कृतिक कार्यबारे मध्यकालीन संस्कारसम्बन्धी हस्तलिखितग्रन्थमा पनि उल्लेख भएको छ । त्यसमा विष्णुलाई जागरण गरी दीप प्रज्वलन तथा शान्तिको कामना गर्ने बताइएको छ ।[७७]

## सुतकको शुद्धीकरण

शिशु जन्मिएर लागेको सूतकलाई चोख्याउनु पर्दछ । यसलाई नेवारभाषामा "जय्बिलि व्यंकेगु" भन्ने चलन छ । यस भाषामा "जय्बिलि" शब्दले सूतक र "व्यंकेगु" भन्नाले शुद्ध पार्नेलाई बुझाउँछ । मध्यकालमा पनि यसरी नै सम्बोधन गरिने कुरा तत्कालीन ऐतिहासिक स्रोतबाट थाहा हुन्छ ।[७८] यसको प्रचलन नेवार समुदायका सबै जातीमा भए तापनि सूतक बार्नु पर्ने दिन संख्या जातिअनुसार फरक छ । खासगरी मुल्मी, श्रेष्ठ, वैद्य, कर्माचार्य, कायष्ठ, अमात्य, जोशी आदि जातीले १० दिने बार्ने परम्परा छ ।[७९] तर उच्च घरानाका मानिसहरूले पूरा १२ दिन बार्ने गरेको पाइन्छ । मध्यकालमा शिशु जन्मिएको बाऱ्हौं दिनमा "जयबिलि" (सूतकको) सुद्धिकरण गरिएको घटनालाई टिपोट गरिएको छ ।[८०] यस्तैगरी ज्यापू, नापित, तण्डुकार, लोहकार, मालाकार (गठ), चित्रकार, राजबाहक, कसाई, कुसले आदिले ६ दिनमा बार्ने चलन छ ।[८१] डि. आर. रेग्मीले शुद्धीकरणको यो जातकर्म संस्कारलाई नवजात शिशु जन्मेको उत्सव बताएका छन् ।[८२] नवजात शिशुको जन्मले बाबु, आमालगायत परिवार तथा आफन्त सबैलाई खुशी तुल्याउनु स्वाभाविक हो । तर माथि उल्लेखित जातकर्म संस्कार सम्पन्न गर्ने विभिन्न विधिहरू खुशियाली उत्सवभन्दा पनि शिशुलाई बातावरण अनुरूप सक्षम बनाउन र शिशु जन्मिएर सुत्केरीबाट भएको मलिन बातावरणलाई सामान्य अवस्थामा ल्याउन गरिएको शुद्धीकरण कार्य भन्ने बुझिन्छ ।

जातकर्म संस्कार पूरा गर्ने क्रममा नेवार समुदायले आफ्नो बेग्लै सांस्कृतिक विधि अपनाउने प्रचलन छ । सूतक शुद्धीकरण गर्दा अघिल्लो दिनमै सूतक लागेका दाजुभाई आफन्त सबैलाई शुद्धीकरणको लागि निम्तो पठाउँछ । शुद्धीकरणको दिन बिहान सबै सुत्केरीको घरआगनमा जम्मा भई नाऊनीबाट खुट्टाको नङ काट्न लगाउँछन् । नाऊलाई पुरुषहरूको कपाल खौरीन लगाउँछ । त्यसपछि सबैले स्नान गर्छन् । सुत्केरी र शिशुलाई पनि नुहाई दिन्छ । सिङ्गो घर लिप्ने र सुत्केरी तथा उनको घरपरिवारका सदस्यहरूले प्रयोग गरेका सबै लत्ताकपडा अनिवार्य रूपमा धुनु पर्दछ । केही दशक अगाडि सम्म सूतकको शुद्धीकरण नभएसम्म सुत्केरीलाई परालमा बस्ने र सुताउने चलन थियो । हिजोआज अस्पतालमा प्रसूति गराउने चलन रहेको हुँदा त्यहाँबाट फर्केपछि घरमा ल्याएर बिछ्याउनामा नै राख्ने चलन विकास भएको छ । यद्यपि कतिपय गाउँघरमा अहिले पनि सुत्केरीलाई परालमा सुताउने चलन छँदैछ । त्यसरी प्रयोग गरिएको पराल शुद्धीकरणकै बेला सबै बाली दिन्छ ।

सूतकको शुद्धीकरणको लागि सुत्केरीको माईतीबाट बिहान सुत्केरी र शिशुको निमित्त नयाँ लुगासहित पूजा तथा भोजको लागि आवश्यक सामग्रीहरू पुऱ्याई दिने चलन छ । त्यस दिनको अर्को महत्वपूर्ण कार्य पूजाविधि हो । सो कार्य दिरिअजिले गर्छन् । सुत्केरी र शिशुलाई नुहाई दिएपछि उनको माईतीबाट पठाएको नयाँ लुगा लगाउन दिई गोबर राखी लिपेको शुद्ध कोठामा तिनीहरूलाई बसाली इनाय, छ्वासअजिमा र अजिमालाई आह्वान गरी पूजा गर्ने तथा ती देवदेवीलाई "व्व" (भोज्य पदार्थहरू राखी तयार पारिएको भाग) चढाउँछ । त्यस्तो "व्व" मा अन्य खाद्य पदार्थहरूको अलावा भिजाएको सानो केराउ पिँधेर बनाएको "कधासा" तथा चामलको पिठो, पिँधेको तिल, खिचाभ्यात: (एकप्रकारको साग) र मासुको झोल मिसाएर बनाएको "ईदाया" अनिवार्य रूपमा राख्नु पर्दछ ।[८३] पूजा सम्पन्न गरी सकेपछि सबैलाई टीका लगाई प्रसादको रूपमा एउटा-एउटा "व्व" भाग बाडी दिन्छन् । यस अवसरमा सबैलाई बेलुका भोज खुवाउँने चलन छ । नेवार समुदायमा जात विशेषअनुसार निर्धारित दिनमा सूतकको शुद्धीकरण गर्ने भनिएको भए तापनि कहिले काँही निर्धारित दिनभन्दा पहिले नै शुद्धीकरणको कार्य सम्पन्न गर्ने परम्परा पनि छ । एउटै दाजुभाई खलकभित्र एकैपटक दुई जनाको सूतक पर्नु हुँदैन भन्ने मान्यता प्रचलित हुँदैआएको छ । यदि त्यस्तो पर्न गएमा त्यसलाई अशुभ



घटना मानिन्छ । तसर्थ एउटा सुत्केरीको सूतक शुद्ध नभई अर्को सुत्केरी हुने अवस्था सृजना भएमा बाधा अड्चन फुकाउने प्रावधान राखिएको छ । जसअनुसार अघिल्लो सूतकलाई निर्धारित दिनभन्दा अगाडि नै शुद्धीकरण गरिन्छ । अरू संस्कार वा धार्मिक कार्य पूरा गर्नु पर्ने विशेष परिस्थिति आई परेमा पनि अगाडि नै शुद्धीकरण गर्ने प्रचलन रहिआएको छ । यस्तैगरी महिला सुत्केरी हुनुभन्दा पहिले अघिल्लो सुत्केरीलाई अर्को घरमा राख्न लगेर पनि बाधा अड्चन फुकाउने गरेको पाइन्छ । एउटा परिवारमा अघिल्लो दिन छोरी जन्मिएर भोली पल्ट परिवारका सदस्यमध्ये अर्कोले छोरा जन्मनएको हुँदा एउटै घरमा दुई सूतक परेकोले पछिल्लो पटक सुत्केरी भएकी महिलालाई उनको नवजात शिशुसहित तत्काल माईत पठाई ती दुई सुत्केरी महिलाहरूको बेग्लाबेग्लै स्थानहरूमा सूतकको शुद्धि कार्य तथा नामकरण संस्कार पूरा गरेको घटना मध्यकालीन घटनावलीमा उल्लेख गरिएको छ ।[८४] वास्तवमा सो कार्य विद्यमान बाधा अड्चन फुकाउनका निमित्त गरिएको हो ।

## निष्क्रमण संस्कार

नवजात शिशुलाई पहिलो पटक घर बाहिर लिएर जाँदा पूरा गरिने संस्कारलाई निष्क्रमण भनिन्छ । नवजात शिशुलाई घर बाहिर र हुँदा अदृष्य शक्ति (बाह्य कुतत्व) ले असर पार्न सक्छ भन्ने धारणा रहिआएको छ । त्यस्तो हुन नदिन यो संस्कार मनाइन्छ । मनुस्मृतिमा शिशु चारमहिनाको भएपछि यो संस्कार सम्पन्न गर्ने बताइएको छ ।[८५] संस्कार मनाउँदा धार्मिक विधि विधानअनुसार सूर्य दर्शन गराउनु पर्दछ ।[८६] शिशुलाई सूतकको शुद्धि कार्य नसकिएसम्म सूर्य दर्शन गराएको हुँदैन । नौ महिनासम्म आमाको गर्भमा रही जन्मिएका नवजात शिशुको निमित्त तत्काल बाहिरी वातावरण अनुकूल हुँदैन । उनलाई बढी न्यानो आवश्यकता पर्दछ । त्यसकारण सुत्केरी र शिशुलाई चिसो हावा नलाग्ने कोठामा राख्ने चलन छ । सधैं भरी बाहिर नल्याई कोठामा मात्र राख्नु पनि सम्भव छैन । अर्कोतिर यस भन्दा अगाडि सूर्यको किरण अनुभव नगरेका शिशुलाई पहिलो पटक घाममा ल्याउँदा आँखामा प्रतीकूल असर पर्न सक्दछ । त्यसैले कुनै किसिमको शारीरिक व्यवधान नहोस भन्ने कामनासहित धार्मिक विधि पूरा गरी सूर्यको किरण दर्शन गराउने गरेको देखिन्छ । यो संस्कार पूरा गरी सकेपछि मात्र मानिसहरूले आफ्नो शिशुलाई घर बाहिर लान्छन् ।

संस्कार पूरा गर्ने क्रममा ब्राह्मणद्वारा विधि विधान पूर्वक होम, आवश्यक पूजापाठ तथा शिशुलाई सूर्य दर्शन गराउने र पूजापाठको क्रममा ब्राह्मणले वेदको "स्वस्ति नो मिमीताम्" भन्ने सूक्तलाई जप गर्ने र सूर्य दर्शन गराउँदा "तच्चक्षुः" मन्त्रको उच्चारण गर्नु पर्दछ । साथै ब्राह्मणको आज्ञा लिएर शिशुलाई पिताले घर बाहिर सूर्य दर्शन गराउन "आशु:शिशान" मन्त्र जप गरी ससुराली घर वा अरू कसैको घरमा लगि पुन: फिर्ता ल्याउनु पर्छ भनिएको छ ।[८७] नेवार समाजमा संस्कार कार्यन्वयन गर्दा आमा र शिशु दुवैलाई संगै राखी ब्राह्मणले कलश स्थापना तथा वशुंधराको आह्वान गरी पाठपूजा गर्ने र स्वस्ति वाचनको विधि पूरा गरेर शिशुलाई स्थानीय क्षेत्रपाल तथा गणेश मन्दिर पुऱ्याई घरमा फर्काउने तथा अन्तमा आर्शिवाद दिएर सम्पन्न गर्ने परम्परा छ ।[८८] मध्यकालमा सबै जातजातीमा यो संस्कार मनाउने प्रचलन थियो । शूद्र जातिका मानिसहरूले समेत यसलाई पूरा गर्ने चलन थियो । यस वर्णका जातिले पूरा गर्ने संस्कारसम्बन्धी हस्तलिखितग्रन्थमा यसको कार्यविधिबारे उल्लेख भएको छ ।[८९] त्यसकारण तत्कालीन समयमा निष्क्रमण संस्कार नेवार समुदायको सबै जातजातीहरूमा प्रचलित रहेको प्रष्ट हुन्छ ।

स्मृतिमा शिशु चारमहिनाको भए पछि मात्र यो संस्कार मनाउने भनिए तापनि नेवार समाजमा जन्मिएको बाऱ्हौं दिनमा पूरा गर्ने परम्परा रहेको पाइन्छ । स्थानीय क्षेत्रको हावापानीको कारणले यस्तो अन्तर ल्याएको देखिन्छ । स्मृतिमा उल्लिखित समय भारतीय भूमिको हावापानीलाई दृष्टिगत गरी लेखिएको हुनसक्दछ । त्यहाँको हावापानी गर्मी भएको हुँदा चार महिनासम्म शिशुलाई बाहिर नल्याएपनि खास फरक पर्ने देखिन्दैन । तर नेपाल उपत्यकाको हावापानी धेरै ठण्डा हुने हुंदा त्यति लामो समयसम्म शिशुलाई सूर्य दर्शन नगराई घरभित्र राख्नु गाऱ्हो हुन्छ । नेवारहरू सूतकको शुद्धीकरण पश्चात् शिशुलाई घाममा राखी तेल लगाई दिने चलन छ । अर्कोतिर सुत्केरी भएको एक्काईस दिनमा नवजात शिशुसहित सुत्केरीलाई आराम र स्याहार सुसार गराउन माईतमा लान्छन् ।[९०] त्यस प्रचलनलाई स्थानीय भाषामा "मचा वु लहिक यंकेगु" (सुत्केरी पाल्न लाने) भनिन्छ । माईतमा लानु भन्दा अगाडि नै यो संस्कार पूरा गर्नु आवश्यक छ । त्यसैले स्मृतिमा उल्लेख भएको समय भन्दा पहिले यो संस्कार पूरा गर्ने प्रचलन रहिआएको हो ।



नेवार समाजमा यस संस्कारलाई समय परिस्थितिअनुसार सरलीकरण गर्दै ल्याएको छ । संस्कारसम्बन्धी मध्यकालीन स्रोतहरूमा बाऱ्ह दिनमा यो संस्कार पूरा गर्ने भनिएको छ । यद्यपि व्यवहारमा "नुवारान" कै दिन बालकलाई आँगनमा निकालेर सूर्यको दर्शन गराई निष्क्रमणको विधि पूरा गर्ने गरेको देखिन्छ ।[९१] ब्राह्मण तथा क्षेत्री वर्णका नेवारहरूमा बाऱ्हौं दिन र बैश्यवर्णमा दशौं दिन सूतकको सुद्धिकरण गर्ने परम्परा रहेको विषयमा माथि उल्लेख भई सकेको छ । शुद्धीकरण गर्ने सिलसिलामा घरपरिवार, आफन्तलगायत सुत्केरी तथा नवजात शिशुलाई स्नान गर्न बाहिर ल्याउनु पर्दछ । सोही समयमा सूर्य दर्शन गराउने चलन छ ।[९२] त्यसकारण यो संस्कार पछि छुट्टै मनाउने गरेको पाइदैन । यद्यपि नवजात शिशुलाई पहिलो पटक घर बाहिर लैजाँदा "किसली" (माटोको सानो प्यालामा चामल, सिङ्गो सुपारी र मुद्रा राखेको पूर्णपात्र) ढोक्न लगाई, कनिका वा च्यूराको धूलोले चारै दिशामा छर्केर आफ्नो पाईतालको टीका लगाई दिएर मात्र बाहिर लान्छन् । वर्तमान समाजमा धार्मिक कार्यसहित संस्कारलाई पूरा गर्ने प्रचलन नभए तापनि शिशुलाई बाहिर लान ढोगाएको "किसली" अजिमा द्यो: कहाँ चढाउन लागिन्छ । त्यसबाहेक आजको आधुनिक युगमा गर्भवतीलाई अधिकांशले अस्पतालमा लगेर शिशु जन्माउने चलन छ । सुरक्षित र व्यवस्थित तरिकाबाट प्रशूति गराउन पनि सबैले अस्पतालमा लैजानु आवश्यक छ । अस्पतालमा शिशु जन्माएपछि त्यसको दुई तीन दिनमा नै घर फिर्ता पठाउँछ । त्यतिवेला शिशुले स्वत: सूर्य दर्शन गरी सकेका हुन्छन् ।

शिशु जन्मिएको दुईहप्ता पछि सुत्केरीको माइतबाट उसको घर परिवारलगायत आफन्तहरू सबै जम्मा भई सुत्केरी र शिशुलाई हेर्न जाने चलन छ । त्यसलाई "मचाबु स्वबने" भनिन्छ । त्यसरी सुत्केरी हेर्न गएकाहरू घरमा पुगी भलाकुसारी गरी सबैले सुत्केरी र नवजात शिशुलाई पालैपालो दक्षिणा चढाउँछन् । त्यहाँ पुगेका महिलाहरूले भने शिशुको लागि दक्षिणाबाहेक एक-एक टुक्रा थाङ्नो पनि दिने चलन छ । बास्तवमा माईती पक्षबाट सुत्केरी हेर्न जानु भनेको शिशु जन्मिएको उपलक्षमा छोरी र ज्वाईलाई औपचारिक शुभकामना र बधाई दिनु हो । यसले दुवै सम्धी पक्षबीचको सम्वन्धलाई सुदृढ पार्न सहयोग पुऱ्याउँछ ।

## नामकरण संस्कार

नवजात शिशुलाई धार्मिक तथा सांस्कृतिक विधि विधान पूरा गरी उनको नाम राख्ने संस्कारलाई नामकरण भनिन्छ । मनुस्मृतिमा शिशु जन्मिएको दशौं वा बाह्रौं दिनको शुभ साईतमा नामकरण संस्कार पूरा गन भनिएको छ ।[९३] याज्ञवल्क्यस्मृतिमा भने एघारौं दिनमा यसलाई पूरा गर्नु पर्ने उल्लेख छ ।[९४] यस सम्बन्धमा उदार धारणा पनि पाइन्छ । जसअनुसार बालक जन्मेको एघारौं, बाह्रौं वा सोह्रौं दिनमध्ये आफ्नो अनुकूल दिनमा विधिपूर्वक नामकरण संस्कार गर्न सकिन्छ ।[९५] यद्यपि नामकरणको निमित्त दशौं अथवा बाह्रौं दिन सबैका लागि उपयुक्त मानिन्छ । ती दिनहरूमा तिथि, नक्षत्र तथा मुहुर्त शुभ नभएको अवस्थामा राम्रो साईत जुरेको अर्को दिन पनि उपयुक्त हुने भएको हुँदा सोह्रौं दिन पनि तय गरिएको देखिन्छ ।

मध्यकालीन नेवार समुदायअन्तर्गत ब्राह्मण तथा राजपूतको बाह्रौं दिनमा र अरू जातको दशौं दिनमा नामकरण संस्कार पूरा गर्ने चलन थियो ।[९६] संस्कार मनाउने क्रममा शुभ मानिएको दिन विभिन्न देवीदेवताको आह्वान गरी पूजापाठ, स्वस्तिवाचन गरिन्थ्यो । तत्कालीन परम्पराअनुसार पूजा गर्ने क्रममा शिशुको निमित्त ज्योतिषीले दिएको नाम पानको पातमा पहेंलो टीका (गोलचन) ले लेखी आमाको हातमा राखी दिइन्थ्यो ।[९७] पिताले शिशुको कानमा सोही नाम सुनाउनु पर्दथ्यो । यस क्रममा शिशु छोरा भए दायाँ कानमा र छोरी भए बायाँ कानमा नाम श्रवण गराउने परम्परा थियो ।[९८] यसरी राखेको नाम गोप्य राख्नु पर्दथ्यो । त्यसलाई चिनाको नाम भन्ने चलन छ । साथै जातकर्म संस्कारको समयमा धृत र मह प्राशन नगराएको भए सो कार्यसमेत यसै समयमा गराउने परम्परा छ ।

हिन्दू समाज वर्ण व्यवस्थामा आधारित भएको हुँदा व्यक्तिको नाम पनि सोहीअनुसार राख्ने चलन छ । ब्राह्मणको मङ्गल सूचक, क्षेत्रीको बल सूचक, वैश्यको धन सूचक र शूद्रको नरदास सूचक हुनु पर्ने बताइएको छ ।[९९] त्यसो भएमा नामको उच्चारणबाट व्यक्तिको वर्णसमेत जान्न सकिन्छ । यस परम्पराले वर्ण व्यवस्थाको मर्यादालाई समेत स्थायित्व प्रदान गर्न खोजिएको देखिन्छ । व्यक्तिको नाम दुईटा राख्ने परम्परा छ । तीमध्ये एउटा बोलीचालीको प्रचलित नाम र अर्को जन्मनाम हो । जन्म नाम अरू कसैलाई थाहा नदिई गोप्य राखिएको हुन्छ भने बोलीचालीको नाम सबैले थाहा पाउन सकिन्छ । समाजमा व्यक्तिको परिचय बोलीचालीको प्रचलित



नामबाट हुन्छ । तीमध्ये गोप्य नाम शिशु जन्मिदाको नक्षत्रअनुसार चयन गरिन्छ ।[१००] यद्यपि यस समुदायमा नामको चयन ज्योतिषिले गरिन्छ । व्यक्तिको नाम चयन गर्दा खासगरी देवीदेवताको नामबाट लिने परम्परा छ । देवी देवताको नाम विधिसम्मत राखिएको हुँदा सोही नामलाई अनुकरण गरी राख्ने गरिएको हो । अन्य संस्कारहरूमा झैं शिशुको नामकरणमा पनि आधुनिकताको प्रभाव परेको छ । कतिपयले पाश्चात्य् ढाँचाको नाम राख्ने गरेका छन् भने कतिले आमा बाबुको नामका अक्षरहरू झारेर नौलो किसिमको नाम राख्ने गरेको पाइन्छ ।

नेवार समुदायको शूद्रवर्णमा पनि यो संस्कार पूरा गर्ने परम्परा छ । मध्यकालीन शूद्र संस्कार पद्धतिको हस्तलिखितग्रन्थमा नामकरण संस्कारको उल्लेख भएको छ । जसमा कलशर्याचन विधिद्वारा पूजापाठसहित यो संस्कार पूरा गर्ने बताइएको छ ।[१०१]

शिशुको जन्म समय र उनको लागि राखिने नामबीच गहिरो सम्बन्ध रहिआएको छ । किनकी शिशुको नाम जन्म समयको आधारमा राखिन्छ । उसको भाग्य पनि नामसित जोडिएर आउने विश्वास गरिन्छ । त्यसकारण ज्योतिषीलाई शिशु जन्मिएको सही समय दिनु पर्दछ । पहिलाको जमानामा घडी नभएको र घडीको चलन आइसकेको भए तापनि सामान्य मानिसको पहुँचभन्दा टाढा रहेको अवस्थामा जन्म समय किटान गर्न गाह्रो थियो । त्यसकारण नेवार समाजमा ज्योतिषी विधाको आधारमा सही समय किटान गरी नाम र राशी तोक्ने चलन थियो । त्यसको लागि शिशु जन्मिएको समय एकाबिहान, बिहान, दिउँसो, सन्ध्याकाल, बेलुका, मध्यरात मध्ये कुन समय हो ?, सुत्केरी हुँदा आमा कुन दिशातिर फर्केको थियो ?, सुत्केरी कोठामा कतिजना महिलाहरू थिए ?, तिनीहरू कुन कुन दिशातिर फर्केर बसेका थिए ? भन्ने कुराहरूलाई आधार मानेर ज्योतिषीले शिशु जन्मिएको समय निर्धारण गर्ने चलन थियो । हिजो आज घडी हेर्ने राम्रो सुविधा भएकोले उल्लेखित परम्पराको खास महत्व रहेन ।

समाजमा शिशुको कर्णछेड (कान प्वाल पार्ने) नामकरणकै समयमा गर्ने चलन चल्दै आएको छ । यो कार्य दिरिअजिले सम्पन्न गर्छन् । उनले सीयोलाई आगोमा पोलेर त्यसमा कपासको धागो राखी शिशुको कान छेडी दिन्छ । त्यसपछि सो धागो कानमै राखी त्यसमा बेसार मिसाएको तेल लगाई दिन्छ । यसबाट छेडेको कान पाक्दैन भन्ने मान्यता रहिआएको छ ।[१०२]

## अन्नप्राशन संस्कार

नवजात शिशुको प्रारम्भिक भोजन आमाको स्तनपानबाट हुन्छ । शिशुको शारीरिक विकाससंगै उसलाई ठोस भोजनको पनि आवश्यकता पर्न थाल्दछ । यसैक्रममा शिशुलाई पहिलो पटक ठोस वस्तु भोजन गराउँदा संस्कार पूरा गर्ने प्रचलन छ । यद्यपि बालक र बालिकाको निमित्त यो संस्कार मनाउने समय छुट्टाछुट्टै किटान गरिएको छ । मनुस्मृतिअनुसार बालक ६ महिनाको भएपछि यो संस्कार मनाउनु पर्दछ ।[१०३] त्यतिबेला नसकिए आठौं महिनामा पूरा गर्न सकिन्छ । कारणवस उल्लिखित दुवै समयमा पनि मनाउन नसकिए नवौं, दशौं वा बाह्रौं महिनामा भए पनि पूरा गर्न सकिने कुरा नारद बहीमा उल्लेख भएको छ ।[१०४] मध्यकालमा ६ महिनाको बालकलाई अन्नप्राशन संस्कार पूरा गरी ठोस खाद्यपदार्थ खुवाउन प्रारम्भ गरेको घटना टिपोट गरिएको छ ।[१०५] बालिकालाई भने त्यस भन्दा अगाडि नै अर्थात् पाँच महिनाको हुँदा यो संस्कार पूरा गर्नु पर्दछ । खासगरी छोरालाई जोर महिनामा र छोरीलाई बिजोर महिनामा कार्यन्वयन गर्ने परम्परा छ । छोरीलाई पाँच, सात वा नौ महिनामा अन्नप्राशन गराउन सक्ने कुरा पारस्कर गृह्यसूत्रका टिप्पणीकारले उल्लेख गरेका छन् ।[१०६] ज्योतिषिहरूले पनि बालकलाई छ अथवा आठ महिनामा र बालिकालाई पाँच अथवा सात महिनामा अन्नप्राशन गराउनु उपयुक्त हुने बताइएको छ ।[१०७] यो संस्कार पूरा नगरी कसैले पनि आफ्नो शिशुलाई ठोस भोज्य पदार्थ खुवाउँदैनन् ।

यसरी छोरा र छोरीलाई भिन्नाभिन्नै समयमा अन्नप्राशन गराउने प्रचलन बालक र बालिकामा हुने शारीरिक विकासको अन्तरलाई मान्न सकिन्छ । छोरीको शारीरिक विकास चाँडै हुन्छ । छोराको तुलनामा छोरीमा छिट्टै चन्चलेपन देखापर्ने र छिटो बोल्न थाल्दछ । तिनीहरूमा बाह्र वर्षको हुँदा नहुँदै महिनावारी हुन थाल्दछ । त्यसको अर्थ उनी गर्भधारण गर्न सक्ने क्षमताकी भईन् । यही तथ्यलाई दृष्टिगत गरी विवाहमा समेत पुरुषले आफू भन्दा कम उमेरकी कन्यासित विवाह गर्ने गर्दै आएका छन् । यसरी छोरीको शारीरिक विकास चाँडै हुने भएकोले उनलाई पाँचौं महिनामा र छोरालाई छैठौं महिनामा मात्र अन्नप्राशन गराउने गरेको परम्परा विकास भएको देखिन्छ ।

यो संस्कार जुन महिनामा मनाए पनि शुभ् साइतमा धार्मिक तथा



सांस्कृतिक विधि पूरा गरी सम्पन्न गर्ने चलन रहिआएको छ । ठोस खाद्यवस्तु भोजन गर्ने बानी नपरेका शिशुलाई पहिलो पटक विभिन्न परिकारसहित नुनिलो स्वादमा भोजन गराउँदा शारीरिक रूपमा नराम्रो असर पर्न सक्दछ । त्यस्तो कुनै नकारात्मक प्रभाव नपरोस भन्ने उद्देश्यले शुभ साईतमा धार्मिक विधिअनुसार अन्नप्राशन संस्कार सम्पन्न गर्ने चलन रहेको थाहा हुन्छ ।

आधुनिक धारणाअनुसार शिशुको उमेर तीनमहिना पूरा नभई कुनै किसिमको ठोस पदार्थ खुवाउनु हुँदैन । जन्मिएको तीन महिनासम्म शिशुमा ठोस वस्तु पचाउन सक्ने पाचन शक्ति राम्रो विकास नहुने हुँदा त्यो अवधिमा उनलाई आमाको दुधमात्र दिइन्छ । जन्मिएको दिन मह र नामकरण वा तीन महिनापछि ध्यू सेवन गराउने चलन छ । मह सेवन गराउनुलाई मधुप्राशन र ध्यू सेवन गराउनुलाई घृतप्राशन भनिन्छ । त्यसपछि फलप्राशन अनि मात्र अन्नप्राशन गराउंछन् । फलप्राशन गराउँदा प्रारम्भमा फलफूलको रस र पछि नरम फलफूलका ससाना टुक्रा ख्वाउँने चलन छ । ती प्रक्रियाहरू पूरा गरी शिशुलाई माथि उल्लेखित उमेरमा प्रवेश गरेपछि ठोस वस्तु खुवाउन सांस्कृतिक विधि पूरा गर्ने कार्य हुन्छ । तर फलप्राशन संस्कारलाई छुट्टै रूपमा नमनाइएको अवस्थामा अन्नप्राशन कै बेला फलप्राशनलाई पनि संगै पूरा गर्ने परम्परा छ । संस्कारसम्बन्धी तत्कालीन ग्रन्थमा फलप्राशन+अन्नप्राशन भनेर लेखिएको पाइन्छ ।[१०८] यो संस्कार मनाउँदा प्रारम्भिक पूजापाठपछि सुरुमा फलप्राशन गराउने र सो कार्य पूरा भएपछि पुनः अर्को पाठपूजाको विधि संचालन गरी अन्नप्राशन गराईछ ।[१०९] मध्यकालमा समेत फलप्राशन संस्कार छुट्टै पूरा गरेको उदाहरण पाइन्छ । भक्तपुरका राजा जितामित्रमल्लका थाकुर (ठाकुर) अर्थात् युवराजलाई ने. सं. ७९४ (१६७३ ई.) मा फलप्राशन गराइएको थियो ।[११०]

नेवार समुदायमा अन्नप्राशन संस्कारलाई "मचाजंको" भनिन्छ । "मचाजंको" अर्थात् अन्नप्राशन गराउने दिन बालक (बालिका) लाई विहान नुहाई दिएर स्थानीय गणेश मन्दिरमा लगेर गणेशको दर्शन गराई घर फर्काईछ । प्रारम्भमा ब्राह्मणद्वारा पाठपूजा गराई ज्योतिषीले दिएको साईतमा घरमुलीले बालक (बालिका) लाई सगुण दिएर अन्नप्राशनको सांस्कृतिक कार्यलाई अगाडि बढाउँछ ।[१११] संस्कार कार्यन्वयन गर्ने सिलसिलामा शिशुलाई सेवन गराउने भोजन सामग्री राखिएको थाल ब्राह्मणद्वारा संकल्प

गरिन्छ । त्यसक्रममा "अन्नपतेन्नस्य" भन्ने मन्त्र वाचन गर्नु पर्दछ ।[११२] भोजन सामग्रीमा भात, दहि, तस्मै अलावा अन्य परिकारहरू समेत हुन्छन् । मासुका परिकारहरू खासगरी भारद्वाज पन्छीको मासु र माछा राख्नु पर्छ भन्ने मान्यता रहिआएको छ । भारद्वाज पंक्षीको मासुले शिशुको वाणीलाई राम्रो बनाउने र माछाको परिकारले शरीरलाई कोमल बनाउन सहयोग पुऱ्याउँछ ।[११३] यस्तैगरी मध्यकालीन दशकर्म पद्धतिको हस्तलिखितग्रन्थमा भोजनको सामग्रीमा हाँसको टाउको हुनु पर्ने बताइएको छ । अन्नप्राशन गराउनुभन्दा अगाडि हाँसको टाउकोले शिशुको मुखमा स्पर्श गराए पछि मात्र अन्नप्राशन गराउने प्रचलन रहेको पाइन्छ ।[११४] भारद्वाज पंक्षीको मासु सजिलै प्राप्त नहुने हुँदा हाँसको टाउको र मासु राख्ने गरेको देखिन्छ । अन्नप्राशनमा मूलरूपले भोजन गराउने वस्तु भात हो । तर हिजोआज भातको ठाउँमा तस्मै ख्वाउने परम्परा विकास भएको छ । बालकलाई भातभन्दा तस्मै दिन सजिलो भएकोले तस्मै खुवाउने परम्परा विकास भएको देखिन्छ । यद्यपि अन्नप्राशनमा तस्मैको अलावा अन्य परिकारहरू पनि सजाउने चलन छ ।[११५] अन्नप्राशनको सामग्री राखिएको थाल ब्राह्मणबाट संकल्प गरी सकेपछि त्यसमा रहेको तस्मै घरमूलीले बालकलाई सेवन गराई अन्नप्राशनको कार्य शुभारम्भ गर्छन् । तत्पश्चात् परिवारका अन्य सदस्यलगायत बालकको मामा र फुपुहरूले क्रमैसित त्यो क्रमलाई दोहऱ्याउँछ । तस्मै सेवन गराउन परिवारको गच्छेअनुसार भएसम्म सुनको असर्फी, त्यो नभए चाँदीको मोहर र त्यो पनि नभए समान्य मोहर प्रयोग गरिन्छ । थालमा राखिएका सबै परिकारहरू बालकलाई साङ्केतिक रूपमा जुठो हाल्न लगाउँछ । त्यसकारण यस संस्कारलाई नेवारभाषामा "मचा चिपं थिके" वा "जा चिपं थिके" अर्थात् शिशुलाई भात जुठो हाल्न लगाउने भनिन्छ । पहिलो पटक नुनिलो स्वाद भएको ठोस वस्तुको अनुभव गर्दा शिशुले अनौठो र असजिलो महसुस गर्न सक्छन् । यद्यपि नेवार समाजमा अन्नप्राशन गराउँदा शिशु रुनुलाई राम्रो लक्षण मान्ने चलन छ ।[११६]

यस सांस्कृतिक कार्यको लागि बालकको मामाघरबाट आफ्नो औकातअनुसार सगुणका सामग्रीहरू लगायत बालकको निमित्त खुट्टामा लगाई दिन चाँदीको बाला र कानमा लगाउन मुन्द्री तथा छोरी ज्वाईको लागि लुगासमेत पठाउने चलन छ ।

यस समाजमा अन्नप्राशन संस्कार मनाउँदा बालकले भावी जीवनमा अपनाइने पेशाको अनुमान गर्न "तिलहिल" दिने चलन छ । जसअनुसार



एउटा किस्ति (ठूलो र फराकिलो थाल) मा माटो, ईंटा, कपी, किताव, कलम, गहना आदि वस्तुहरू राखी बालकलाई देखाईछ । जुन वस्तुमा बालकले पहिला हात राख्यो भविष्यमा उनी त्यसै वस्तुसित सम्बन्धित कार्यमा ढल्किन्छ भन्ने जनविश्वास रहिआएको छ ।[११७]

अन्नप्राशन संस्कार शूद्रवर्णमा पनि मनाइने चलन छ ।[११८] तत्कालीन शूद्र संस्कार पद्धतिमा अन्नप्राशन तथा यसको कार्यविधिबारे चर्चा गरिएको हुँदा यस कुराको ज्ञात हुन्छ ।

## चूडाकरण

बालकलाई जन्मदेखि लिएर आएको शिरको केश पहिलो पटक खौरिन्दा संस्कार पूरा गर्ने परम्परा छ । केश खौरिन्दा शिरको मध्यभागमा केही केश बाकी राख्नु पर्ने मान्यता छ । त्यसलाई "चुडा" (टुपी) भनिन्छ । विधिपूर्वक क्षौर अर्थात् कपाल खौरेर "चुडा" राखिने हुनाले यस संस्कारलाई चूडाकरण (चुडाकर्म) भनिएको हो ।[११९] बालक निश्चित उमेरको भएपछि यो संस्कार पूरा गरिन्छ । मनुस्मृतिमा बालकको उमेर एकदेखि तीनबर्ष भित्रमा यो संस्कार पूरा गर्नु पर्ने बताइएको छ ।[१२०] तर याज्ञवल्क्यस्मृतिमा भने त्यस्तो कुनै उमेर किटान गरिएको पाईदैन । जसअनुसार आफ्नो कुल र परम्पराअनुसार पूरा गर्न सकिन्छ ।[१२१]

नेवार समाजमा यो संस्कारलाई "बुर्स खाय्" र "वसुका" भन्ने चलन छ । हिजोआज "बुर्स खाय्" लाई "भुसाखाय" भन्ने गर्छन् । जुन "बुर्स खाय्" बाट अपभ्रंश भएर आएको हो । नेवारभाषाको "बुर्स खाय्" शब्दले जन्मदेखि लिएर आएको कपाल खौरने भन्ने बुझाउँछ । "भुसाखाय" भन्ने भक्तपुरमा र "बसुका" भन्ने चलन कान्तिपुर तथा ललितपुरको समाजमा चलेको पाइन्छ । यद्यपि "भुसाखाय" र "बसुका" यी दुवैको आशय चूडाकरण संस्कारलाई इङ्गित गर्दछ । मध्यकालीनमा पनि चूडाकरण संस्कारलाई "बुर्स खाय्" (भुसाखाय) भनिन्थ्यो ।[१२२] भक्तपुरका शासक जगतप्रकाश मल्लका भतिजाको ने. सं. ७८६ (१६६५ ई.) मा "भुसाखाय" गरिएको थियो ।[१२३] यो संस्कार पूरा नभएसम्म बालकको कपाल खौरनु र काट्नु हुँदैन । लामो भएमा त्यसलाई बाटेर राखिन्छ । यस्तो परम्परा यदाकदा अहिले पनि देख्न पाइन्छ ।

चूडाकरण जीवनको महत्वपूर्ण संस्कार हो । बालकले जन्मदेखि लिएर आएको कपाल यसैबेला खौरिन्छ । यस अवसरमा कर्णभेद (कान

छेड्ने) संस्कार पनि पूरा गरिन्छ । केश खौरन "लुं खोचा" (सुनको छुरा), "ओह खोचा" (चादीको छुरा) र कान छेड्न "लुं मूलु" (सुनको सियो), र "ओह मूलु" (चादीको सियो) प्रयोग गर्ने परम्परा छ ।[१२४] बालकको जीवनमा पहिलो पटक धारिलो हतियार लगाएर शिरको केश खौरने र कान छेड्ने हुँदा पवित्र धातुको हतियार लगाउने परम्पराको विकास भएको देखिन्छ । यस संस्कारलाई मनाउँदा ज्योतिषीले दिएको शुभ साईतमा पुरोहितद्वारा पूरा गरिन्छ ।[१२५] नेपाल उपत्यकाको समाजमा कान छेड्ने परम्परा मध्यकालमा मात्र नभई लिच्छविकालदेखि थियो । त्यतिबेला मानिसहरू दुवै कान छेडेर त्यसमा बांस वा जीवजन्तुको हाडका सिनका राख्ने परम्परा रहेको कुरा चीनीया ताङ्गवंशमा उल्लेख छ ।[१२६]

चुडाकरण संस्कार मनाउने दिनको अघिल्लो राती बालकका मामाले सामान्य पूजा विधिसहित कपाल खौरिंदा "चुडा" (टुपी) राखीने भाग छुट्याई त्यसलाई सुनको औंठीसहित सचिका (कपालमा बाध्ने रातो धागो) ल बाँधी दिने चलन छ । त्यसै अवसरमा घरको थकाली महिलाले दहीको सगुण दिन्छ । संस्कारको महत्वपूर्ण दिन भोलीपल्ट हो । सो दिन पुरोहितले विभिन्न देवीदेवताको आह्वानगरेर कलश स्थापना गरी पूजा सम्पन्न गर्छन् । सोही समय सुन र चादीका छुरा र सियो तथा नाऊको छुरालाई पनि पूजा गर्ने परम्परा छ । त्यसपछि बालकको केश खौरिन अनुमति दिन्छ । प्रारम्भमा बालकका मामाले पुरोहितले दिएको सुन र चांदीको छुराले बालकको कपाल खौरने र सियोबाट कान छेड्ने कार्य हुन्छ । तर त्यो कार्य साङकेतिक रूपमा मात्र पूरा गरिन्छ । त्यसको लगतै पुरोहितबाट नाऊलाई केश खौरिन अनुमति दिन्छ । केश खौरी सकेपछि बालकलाई पिना राखेर नुहाउन लगाई शुद्ध भएपश्चात् टीका लगाई श्रीखण्ड घोटेर शिरमा लगाई दिन्छन् । तत्पश्चात् पुन: पूजा कार्य थालनी गरी अन्तमा बालक र त्यहाँ उपस्थित सबैलाई टीका र फूल दिई कलशको जल छर्केर अभिशेष गरिन्छ । यसरी टिका, फूल र कलशको जल छर्किनुलाई पुरोहितवर्गले पूजाको समयमा आह्वान गरी स्थापना गरेका देवदेवीको आशिषको प्रतीक मानी आएको छ ।[१२७] संस्कारको धार्मिक तथा सांस्कृतिक कार्य पूरा भए लगतै घरपरिवारलगायत आफन्तहरू सबैबाट बालकलाई सफलता पूर्वक संस्कार कार्य सम्पन्न भएको अवसरमा सगुण दिने र लिने गर्छन् । एवंप्रकार संस्कारमनाएको खुशियालीमा आफ्ना नाताकुटुम्ब, आफन्त, इष्टमित्र सबैलाई बोलाई भोज खुवाउने चलन छ ।



## मामा र फुपूको भूमिका

चूडाकरण संस्कारमा बालकको मामा र फुपू दुवैको महत्वपूर्ण भूमिका हुन्छ । मामाले केश खौरने र कान छेड्ने चलन रहिआएको छ ।[१२८] यो चुडाकरण संस्कारको विशेषता हो । उनले सुन र चाँदीको छुराबाट केश खौरेको र सुन र चांदीकै सियोबाट कानमा प्वाल छेडेको साङ्केतिक भाव देखाए पछि त्यस सम्बन्धी सबै काम नाऊले पूरा गर्छन् । चुडाकर्ममा खौरिएको केशलाई भूईमा पार्नु हुँदैन भन्ने मान्यता छ । त्यसकारण खौरिएको कपाल फुपूले थालमा थाप्छ ।[१२९] यसरी नेवार समाजमा चुडाकरण संस्कार मनाउँदा बालकको मामा र फुपूलाई सहभागी गराउने प्रचलन रहिआएको छ । बालक र उनका मामा तथा फुपूबीच अगाढ मायाभाव रहन्छ । त्यसकारण शरीरमा पहिलो चोटी हतियार लगाई केश खौरिने र कान छेड्दा डर र पिडा उत्पन्न नहोस भन्ने मनसायले बालकको भावनात्मक उपचार हेतु यस संस्कारमा तिनीहरूलाई सहभागी गराएको देखिन्छ ।

## इही संस्कार

चूडाकरण अर्थात् "बुर्स खाय्" छोरालाई पूरा गर्ने संस्कार हो । सैद्धान्तिक रूपमा छोरीलाई यो संस्कार मनाउने कुनै प्रावधान छैन । यद्यपि नेवार समाजले छोरीलाई पनि सोही प्रकृतिको आफनै किसिमले अलग्गै संस्कार मनाउने परम्परा विकास गरेको छ । त्यसलाई "इही" संस्कार भनिन्छ ।[१३०] छोरीको पहिलो रजस्वला हुनु भन्दा अगाडि अनिवार्य रूपमा यो संस्कार पूरा गरी सक्नु पर्ने प्रावधान छ । चूडाकरण संस्कार मा जस्तै सबै द्विजका कन्यालाई आफ्नो वर्ण तथा जातिअनुसार सामाजिक अधिकार दिलाउन इही संस्कार पूरा गरिन्छ ।

नेवार समाजका कपाली, (कुसले), च्याम्हखल (च्यामे), द्योला (पोडे), धोबी जातीमा भने "इही" संस्कार मनाउने चलन छैन ।[१३१] खासगरी यो संस्कार द्विजहरूमा सामूहिक समारोह गरी मनाईछ । तत्कालीन समाजमा उल्लेखित जातहरू पानी नचल्ने हुंदा तिनीहरूले सामूहित समारोहमा समावेश हुन पाउने अधिकार थिएन । त्यसकारण ती जातीमा यो संस्कार मनाउने चलन नरहेको देखिन्छ ।

यो संस्कार पूरा गरिने बालिकाको मामाघरमा यसको जानकारी पाएपछि भान्जिलाई "इही" गर्नु एकदिन अगाडि बोलाएर विशेष भोजन गराउने चलन छ । त्यसक्रममा बालिकालाई सामान्य पूजा गरी सगुणसमेत

दिई भोजन गराईछ । त्यस्तो भोजनलाई "इहींजा" (इही गर्ने कन्यालाई खुवाउने भात) भन्ने चलन छ । इही संस्कारसम्बन्धी धार्मिक तथा सांस्कृतिक कार्य लगातार दुई दिनसम्म चल्छ । पहिलो दिनलाई दुस्व (पूर्वाङ्ग) भनिन्छ । त्यस दिन कन्यालाई विधिपूर्वक इही कार्यमा सम्मिलित गराउने कार्य हुन्छ । त्यस भन्दा अगाडि पिठ (पीगं) पूजा र चापूजा (तान्त्रिक विद्याअनुसार राती गरिने विशेष पूजा) पठाउनु पर्दछ । संस्कारको कार्यमा कलश स्थापना गरी विभिन्न देवीदेवताको आह्वान गर्दै पूजा गरिन्छ ।

यस संस्कारको महत्वपूर्ण कार्य दोस्रो दिनमा हुन्छ । सो दिन प्रारम्भमा नाऊद्वारा बालिकाको नङ्ग काट्न लगाउँछ ।[१३२] त्यसरी काटेको नङ्गलाई भूँईमा नपर्ने गरी बालिकाको फुपूले थालमा थाप्छन् । सो कार्य पूरा गरी बालिकालाई होम र पूजास्थलमा आशन ग्रहण गराउनु अगाडि पुरोहितले सर्स्यू र रायो आगोमा बाली त्यसको धुँवा लिन लगाईछ । तत्पश्चात् पूजा, होमलगायत सिन्दूरदान, कन्यादान, पानको पातहरू राखी सातपाईला टेक्न लगाएर मास पिध्न लगाउने आदि महत्वपूर्ण सांस्कृतिक कार्यहरू पूरा गर्ने प्रचलन छ । अन्तमा कलशको जलले अभिशेष दिई संस्कारको कार्य पूरा गर्छन् । यस प्रकार इहीसम्बन्धी विधिवत सबै कार्य सकिए पछि बालिकालाई विशेष प्रकारले "थायभू" (चरसको फराकिलो थाल) मा सगुणका पंचतत्व फुल, माछा, मासु, वारा, रक्सीलगायत चिउरा, सागसब्जी, दही, गेडागुडी आदि विभिन्न परिकारहरू सजाएर भोजन गराउनु पर्दछ । "थायभू" मा भोजन गराउनु भनेको संस्कार पूरा भएको उपलक्षमा बालिकालाई सगुण प्रदान गरिएको हो । इही संस्कार मनाइएको बर्षमा सम्बन्धित परिवारले विशेष प्रकार देवाली पूजा गर्नु पर्ने परम्परा छ । यस्तो परम्परा मध्यकालमा पनि रहेको तथ्य तत्कालीन हस्तलिखितग्रन्थमा उल्लेख भएको छ ।[१३३]

समाजमा परम्परादेखि बालविवाह चल्दै आएको छ । नीतिशास्त्रले समेत यस परम्परालाई बढावा दिएको पाइन्छ । छोरीको पहिलो रजस्वला हुनु भन्दा अगाडि उसको विवाह गरी दिनु पर्ने अन्यथा आफूलाई पाप लाग्ने शास्त्रीय मान्यता छ । कुनै पनि कन्याको विवाहपूर्व उनका पिता, माता र दाजुले रजस्वला भएको हेर्नु परेमा ती तीनै जनाले नरक भोग गर्नु पर्ने स्मृतिमा उल्लेख छ ।[१३४] यसले मानिसलाई आफ्नो छोरीको विवाह उसको पहिलो रजस्वला हुनु भन्दा अगाडि गरी दिनु पर्ने बाध्यात्मक अवस्था सृजना



गरी दिएको छ । त्यस्तो परिस्थितिबाट मुक्त हुन नेवार समाजले इही प्रथाको विकास गरेको देखिन्छ । इही एकप्रकारको विवाह हो । त्यसमा कन्यालाई विधि विधानपूर्वक पूजापाठलगायत होमसमेत गरी भगवान विष्णुको प्रतीक सुवर्ण कुमार (काँचो सुन) सित विवाह गरी दिएर कन्यादान दिन्छ । त्यसकारण नेवार समुदायमा इहीको बेला बालिकालाई लगाई दिएको सिमन्त (सिउँदो) को सिंन्दूर कहिले पनि मेट्दैन भन्ने मान्यता छ ।[१३५] यस समुदायमा यो प्रथा कहिले प्रारम्भ भयो यकीन साथ भन्न सक्ने अवस्था छैन । यद्यपि डि. आर. रेग्मीले इशाको अठारौं शताब्दीदेखि मात्र चलन चल्तीमा आएको भनेका छन् ।[१३६] जहिले देखि यो प्रथा प्रारम्भ भएको भए पनि यसले इही संस्कार पूराभई सकेकी कन्याको चाँडै विबाह गरी दिनुपर्ने बाध्यता भएन । वास्तवमा पूर्ण शारीरिक विकास भई सकेपछि मात्र बिवाह गरी दिनु आधुनिक दृष्टिकोणबाट राम्रो मानिन्छ । त्यसकारणले पनि नेवारहरूमा इही प्रथाले महत्व पाउँदै आएको थाहा हुन्छ ।

यस समुदायमा मध्यकालमा पनि इही प्रथा प्रचलित थियो । यसलाई तत्कालीन समाजले ठूलो महत्वका साथ अवलम्वन गरेको उदाहरण पाइन्छ । कान्तिपुरका शासक भाष्करमल्लकी परतलाई ने. सं. ८३२ (१७११ ई.) मा इही गरेको कुरा ऐतिहासिक घटनावलीमा टिपोट गरिएको छ । यस्तैगरी ने. सं. ८५५ (१७३४ ई.) को एउटा अभिलेखमा तत्कालीन एक राजकुमारीको इही गरेको घटना उल्लेख भएको छ ।[१३७] केवल शासकवर्गमा मात्र होइन जनसाधारणवर्गमा समेत यो संस्कार पूरा गर्ने चलन थियो ।[१३८] हेमिल्टनले हिन्दू नेवार समाजमा प्रचलित इही संस्कारबारे उल्लेख गरेका छन् ।[१३९] हिजोआज यस संस्कारलाई सम्पन्न गर्दा त्यसको खुशियालीमा नाताकुटुम्ब, आफन्त, इष्टमित्र सबैलाई बोलाई भोज खुवाउने परम्परा विकास भएको छ ।

### उपनयन

शास्त्रगत आधारमा प्रत्येक द्विजले आफ्नो बालकलाई अध्ययनको निमित्त गुरुकूलमा पठाउनु पर्दछ । बालकको अध्ययन प्रारम्भ गराउन पहिलो पटक गुरु कहाँ पठाउँदा पिता वा संरक्षकले लिएर जाने शास्त्रीय मान्यता हो । त्यसरी लैजाँदा उपनयन संस्कार पूरा गर्नु पर्दछ । यो संस्कार एउटा निश्चित अवधिभित्र पूरा गरी सक्नु पर्ने प्रावधान रहिआएको छ । त्यो उमेर वर्णअनुसार फरक फरक तोकिएको पाइन्छ । जसअनुसार

ब्राह्मण पुत्रले आठ बर्षमा, क्षेत्री पुत्रले एघार बर्षमा र वैश्य पुत्रले बाह्र बर्षमा सम्पन्न गरी सक्नु पर्दछ ।[१४०] उल्लिखित उमेरमा पूरा गर्न नसकिनेले ब्राह्मण, क्षेत्री र वैश्यले क्रमश: सोह्र, बाईस र चौविसवर्षको उमेरसम्ममा सम्पन्न गरी सक्नु पर्ने शास्त्रीय मान्यता छ ।[१४१] त्यसवेला सम्म पनि उपनयन नगरिएको व्यक्तिलाई "ब्रात्य" भनिन्छ ।[१४२] त्यसको अर्थ पतित व्यक्ति भन्ने बुझिन्छ । समाजमा "ब्रात्य" को कुनै स्थान रहदैन । सामाजिक तथा सांस्कृतिक हरेक कार्यवाट बहिस्कार गरिन्छ ।[१४३] त्यसकारण सबैले आफ्नो बालकलाई समाजको सदस्य बनाई सामाजिक अधिकार दिलाउन यो संस्कार पूरा गर्नु अतिआवश्यक मानिन्छ ।

परम्पराअनुसार अध्ययन अवधिभर सबै छात्रले आफ्नो घरलाई छोडेर गुरुकूलमा वस्न जानु पर्दथ्यो । वर्णअनुसार संस्कार पूरा गर्नु पर्ने उमेर फरक हुनुको कारण पनि यही थियो । ब्राह्मण पुत्रलाई आफ्नो घर छोड्नु पर्ने अवस्था थिएन । किनभने उसको लागि आफनै घरमा पिता, बाजे बा अरू कोही गुरु हुन सक्थ्यो । त्यसैले ब्राह्मण पुत्रलाई आठवर्षको सानो उमेरमा नै उपनयन संस्कार पूरा गर्न सक्ने भएको हुँदा सोही परम्परा बसालेको पाइन्छ । तर क्षेत्री र वैश्यले सानो उमेरमा आफ्नो माता पिता तथा घर छोड्न धेरै गाह्रो हुन्थ्यो । तसर्थ तिनीहरूको उमेर केही पाको होस भन्ने उद्देश्यले उपनयन गर्ने उमेर बढी राखिएको भन्ने भनाइ पाइन्छ ।[१४४]

शास्त्रीय कथनअनुसार यो संस्कार मनाउँदा नान्दीश्राद्ध गरी बालकको केश खौरेर विधिपूर्वक होम तथा अन्य पाठपूजा समेत संचालन गर्नु पर्दछ । यस संस्कारको प्रमुख उद्देश्य यज्ञोपवीत धारण तथा मेखला बन्धन गराउनु पनि हो । त्यसैवेला गुरुले शिष्यलाई विधिपूर्वक सावित्री मन्त्र सुनाउँछ ।[१४५]

मध्यकालीन दशकर्म पद्धतिसम्बन्धी हस्तलिखितग्रन्थ तथा थ्यासफुहरूमा उपनयन संस्कारबारे चर्चा गरिएको छ ।[१४६] त्यस क्रममा उपनयनलाई वटुकर्म्म भनिएको छ ।[१४७] त्यसबाहेक वटुकरण, जातवंध, व्रतबन्ध, कयताविगु (मेखलाबन्ध) पनि भनिन्छ ।[१४८] धर्ममल्लदेवलाई ने. सं. ४९७ (१३७६ ई.) मा वटुकरण विधान पूरा गरेको कुरा वंशावलीमा उल्लेख छ ।[१४९] उपनयन गर्ने बालकलाई वटुक भनिन्छ । वटुकलाई यज्ञोपवीत तथा मेखला दिई अध्ययनार्थ गुरुकूलमा पठाउने परम्परा भएको हुँदा यस संस्कारलाई वटुकरण भनिएको थाहा हुन्छ । जातवन्ध पनि उपनयनको



सन्दर्भमा प्रयोग भएका शब्द हुन् । जयराजदेवका प्रथमपुत्र श्रीजयार्ज्जुनदेवको ने. सं. ४५८ (१३३७ ई.) को शुभ साईतमा जातवंध गरिएको थियो ।[१५०] उपनयन संस्कार पूरा गरी सकेका प्रत्येक व्यक्ति सामाजिक रीतिरिवाजअनुसार चल्नु पर्दछ । पहिले जस्तै सामाजिक परिधिवाट स्वतन्त्र हुन पाईदैन । आफ्नो वर्ण तथा जातअनुसारको सामाजिक व्यवहार तथा कर्तव्यवाट बन्धित हुने हुँदा यो संस्कारलाई जातवन्ध भन्ने गरेको देखिन्छ ।

उपनयन संस्कारलाई व्रतवन्ध पनि भनिन्छ । यो चलन पहिलेदेखि चल्दैआएको हो । दशकर्म पद्धतिको तत्कालीन हस्तलिखितग्रन्थमा स्पष्टरूपले यस संस्कारलाई व्रतवन्ध भनिएको छ ।[१५१] भक्तपुरका राजा जितामित्र मल्लका पुत्र भूपतिन्द्र मल्लको ने. सं. ८०६ (१६८५ ई.) मा व्रतवन्ध भएको कुरा धरपौ:मा टिपोट छ ।[१५२] वास्तवमा व्रतवन्ध शब्द आफैले उपनयन संस्कारलाई ईङ्गित गर्दछ । व्रतको अर्थ प्रण अथवा प्रतिज्ञा गर्नु र वन्धको अर्थ बन्धन भन्ने जनाउँछ । तसर्थ व्रतवन्ध भनेको द्विजातिहरूमा बालकले अध्ययनार्थ वा ज्ञान सम्पादनार्थ गुरुकुलमा रहेर सर्वप्रथम ब्रह्मचर्यको नियम पालन गरी त्यसमा बाँधिएर रहनु पर्ने कुरालाई जनाउँछ ।[१५३]

नेवारभाषामा व्रतवन्धलाई "कयताविगु" भनिन्छ ।[१५४] उपनयन संस्कारको प्रमुख विशेषता छोरालाई धार्मिक विधि पूरा गरेर मेखला (लँगौटी) बन्ध गराई जनै (यज्ञोपवीत) प्रदान गरी गायत्रीमन्त्रसमेत श्रवण गराएर ब्रम्हचार्य ज्ञान र सामाजिक नीतिनियम पालना गर्ने उत्तरदायित्व दिनु हो । त्यसकारण यो संस्कारको उद्देश्य वटुकलाई शिक्षा दिलाउन गुरु कहां लग्नु बाहेक सामाजिक तथा व्यावहारिक नीति नियमसम्वन्धी ज्ञान दिनु पनि हो भन्ने बुझिन्छ । बालकको उमेर बढ्दै गएपछि आफैमा यौन अङ्गको विषयमा अनुभव (ज्ञान) ग्रहण गरी लाजको अनुभव गर्ने अवस्था हुन्छ । त्यसैले आफ्नो यौन अङ्गलाई छोपेर राख्नु (आवश्यक) स्वाभाविक हो ।[१५५] सोही अनुरूप यस संस्कारमा विधिपूर्वक मेखला (लँगौटी) लगाई ब्रह्मचार्यसम्वन्धी ज्ञान दिने गर्दैआएको पाइन्छ । यसप्रकार उपनयन संस्कारमा छोरालाई विविध विषयमा पालन गर्नु पर्ने ज्ञान दिने परम्परा छ । नेवारभाषामा छोरालाई "काय" र दिनुलाई "विगु" भनिन्छ । संस्कारको माध्यमद्वारा छोरालाई सामाजिक अधिकार तथा परम्परागत व्यावहारिक ज्ञान दिने हुँदा यसलाई "कायत विगु" भन्ने गर्दै आएको देखिन्छ । तसर्थ "कायत विगु" उपनयन संस्कारको पर्यायवाची शब्द

हो भन्न सकिन्छ । समयको अन्तरालसंगै यस शब्दमा अपभ्रम्स भई "कयता बिगु" भन्न थालिएको देखिन्छ ।

यो संस्कार मनाउँदा वटुकलाई नुहाई धुवाई गरी शुद्ध पारेर शुभ साईतमा पूरा गरिन्छ । त्यस अबसरमा श्राद्ध गर्नु पर्दछ ।[१५६] उपनयन संस्कारको पूजापाठ तथा सांस्कृतिक कार्य सबै गुरुले संचालन गर्दछ । यस क्रममा "क्वोः" (भुटेका विभिन्न अन्नहरू मिसाएर अनुहारमा लगाउन तयार पारेको धुलो पदार्थ), "चिकं (तोरीको तेल) को प्रयोग गर्ने परम्परा छ । विधि विधानअनुसार पूजा कार्य पूरा गरी पुरोहितले मेखला (लँगौटी) बन्धन तथा जनै (यज्ञोपवीत) धारण गराउन दिइन्छ । यी दुबै कार्य पूरा गरी पुनः विधिपूर्वक पूजा प्रक्रिया सम्पन्न गरी गायत्री मन्त्र श्रवण गराउने परम्पराबारे तत्कालीन हस्तलिखितग्रन्थमा उल्लेख भएको छ ।[१५७] बटुकको केश खौरी, मेखला बन्धन गराई, यज्ञोपवीत धारण गराएर, पिताम्वरको धोती लगाई मृग छाला र दण्डा दिएर ब्रह्मचार्य बनाई गुरुकूलमा पठाउनु उपनयन संस्कारको विशेषता हो । संस्कार मनाउने क्रममा गृह त्याग गर्नुअघि वटुकलाई घरपरिवारलगायत आफन्त सबैसित "भिक्षां मे देहि" भन्न लगाएर भिक्षा मगाउने चलन छ । भिक्षा मगाउँदा भिक्षादाता सामुन्ने वटुकले संबोधन गरिने स्तुति पनि वर्णअनुसार फरक छ । जसअनुसार ब्राह्मण वर्णका वटुकले "ॐ भवति । भिक्षां मे देहि", क्षेत्रिय वर्णका वटुकले "ॐ भिक्षां भवति मे देहि" र वैश्य वर्णका वटुकले "ॐ भिक्षां मे देहि भवति" भन्नु पर्ने बताइएको छ ।[१५८] मेखला बन्धनले वटुकलाई यौवना अवस्थामा प्रवेश गरेको सङ्केत गर्नु साथै यौन अङ्गको गोपनियताबारे ज्ञान प्रदान गर्दछ । त्यसकारण ब्रतबन्धलाई बालकमा पूर्ण बयस्कता प्राप्त गरी वैधानिक रूपले समाजमा प्रवेश गरेको सङ्केत गर्दछ ।[१५९] साथै यज्ञोपवीतको धारणले वटुकलाई सामाजिक नियम तथा मर्यादाको बन्धनमा रहन निर्देशन दिन्छ । यज्ञोपवीतलाई प्रत्येक धार्मिक, सांस्कृतिक तथा सामाजिक कार्यमा विधिपूर्वक प्रयोग गर्नु पर्ने परम्परा रहिआएको छ ।

नेवार ब्राह्मण समुदायको उपनयन संस्कार मनाउँदा अन्य वर्णको भन्दा केही भिन्न रहेको पाइन्छ । बालक आठ बर्षको भएपछि उनलाई डेढ महिनासम्म ब्रह्मचार्य धर्ममा अलगै राख्नु पर्दछ । साईत हेरी शुभ लगनमा ब्रह्मचार्य धर्ममा राखिन्छ । तर सो अवधिभित्र जनैपूर्णिमा पर्नु आवश्यक छ । साईतको दिन विहानै नाऊबाट नङ्ग काट्न लगाएर नित्यस्नान गरी पहेंलो वस्त्र धारण गर्न लगाईछ । तत्पश्चात् उनलाई



पूजास्थलमा आशण ग्रहण गर्न दिन्छ । त्यहाँ पूरोहितबाट विधिपूर्वक पूजा, पाठ र होमसमेत गरी घरमूलीको मुखारबिन्दूबाट गायत्रीमन्त्र श्रवण गराउने र जनै दिने परम्परा छ । यसै क्रममा दिनको दुईपल्ट होम गरी दिनको एक छाकमात्र शाकाहारी भोजन गर्न दिन्छ । जनैपूर्णिमाको दिन कसैले नछुने गरी नदी किनारमा गई सम्पूर्ण शरीर स्नान गरी तपर्ण गर्नु पर्दछ । घर फर्केर सोही समय श्रावणी कर्म अर्थात् पूजा र होम गर्नु पर्दछ । ब्रह्मचार्य धर्म पूरा भएपछि साईत हेरी विधिपूर्वक बालकलाई निकालिन्छ । ब्राह्मण वर्गमा गरिने ब्रतबन्धसम्बन्धी यस कार्यलाई "बुन्हां तयगु" अर्थात् बुन्हां राख्ने भनिन्छ ।[१६०] यो कार्य पूर्ण भएपछि मात्र ब्राह्मण वर्गले जजमानी र अन्य पाठपूजा गर्न ग्राह्य मानिन्छ ।

समाजको सामाजिक तथा सांस्कृतिक जीवनवारे अध्ययन गर्ने एउटा महत्वपूर्ण विषयवस्तु धर्मशास्त्र हो । धर्मशास्त्रले समाजमा शूद्रवर्णलाई अध्ययनको अवसरबाट वन्चित गरिएको छ । त्यसकारण यस वर्णका मानिसहरूमा उपनयन संस्कार मनाउने परम्परा थिएन । तथापि तिनीहरूमा कलश स्थापना गरी मेखला (लँगौटी) दिने विधि भने थियो ।[१६१] त्यो प्रचलन अहिले पनि रहिआएको छ । मानिस जुनसुकै बर्ण वा जातिका होस प्राकृतिक नियमले भेदभाव गर्दैन । शूद्र जातिका व्यक्ति पनि यौवना अवस्थामा पुगेपछि प्राकृतिक रूपले यौनजन्य व्यवहारको विकास हुन थाल्दछ । त्यसैले शूद्रवर्णका मानिसहरूले पनि सामाजिक नियमलाई अनिवार्य रूपमा पालन गर्नु पर्दछ र आफ्नो गुप्ताङ्गलाई अनिवार्य लुकाउनु पर्दछ । तसर्थ नेवार समाजको शूद्र जातिमा पनि मेखलाबन्धको परम्परा विकास भएको स्पष्ट हुन्छ ।

परम्परागत मान्यताअनुसार बालकलाई निश्चित उमेरभित्र उपनयन संस्कार पूरा गर्नु पर्दछ । यो एउटा व्यक्तिलाई सामाजिकीकरण गर्ने एउटा महत्वपूर्ण प्रक्रिया हो । यस भन्दा अगाडि बालकलाई गुप्ताङ्ग, यज्ञोपवीत तथा यसको उपयोगिता र अध्ययनको विषयमा ज्ञान दिएको हुँदैन । त्यसैले उपनयन नगरिएका बालक सामाजिक नियमको बन्धनबाट साधारणतया मुक्त हुन्छन् । तिनीहरूको गल्तीलाई क्षम्य मान्ने परम्परा छ । स्मृतिमा बालकले जबसम्म जनै धारण गर्दैनन् उसको भक्ष्य, अभक्ष्य, पेय, अपेय, योग्य वचन, अयोग्य वचन, सत्य र झुठको दोष हुँदैन भनिएको छ ।[१६२] तर सधैं स्वतन्त्र रूपमा राख्न सकिदैन । उमेर बढ्दै गएपछि तिनीहरूलाई समाजको सक्षम र योग्य नागरिक बनाउनु सबैको कर्तव्य हो । यही तथ्यलाई दृष्टिगत गरी बालकलाई उपनयन संस्कारको माध्यमद्वारा शास्त्रीय

ज्ञान दिलाई सामाजिक नीतिनियममा समर्पित गराउन गुरुकूलमा पठाउने परम्परा विकास भएको हो भन्न सकिन्छ । यद्यपि बर्तमान समाजमा अलग्गै उपनयन संस्कार मात्र मनाइने चलन रहेको देखिँदैन । किनकी प्राचीनकालमा जस्तै अध्ययनको निमित्त गुरुकूल अर्थात् सन्यासीको कुटीमा जानु पर्ने अवस्था अहिले छैन । अर्कोतिर समाजमा आधुनिक शिक्षाको व्यापक प्रचार प्रसार हुँदैआएको छ । शास्त्रीय शिक्षा हासिल गर्न समेत मुलुक भरी पश्चात्य ढाँचामा अध्ययन अध्यापन गराउने प्रचलन विकास भएको छ । यी विविध कारणहरूले गर्दा समाजमा बटुकलाई छुट्टै उपनयन संस्कार मनाइने गरेको पाइँदैन । तर यो संस्कारको अर्को महत्वपूर्ण सांस्कृतिक कार्य मेखला (लँगौटी) बन्धन, यज्ञोपवीत (जनै) धारण र गायत्रीमन्त्र श्रवणको परम्परा पनि हो । त्यो प्रचलन भने अद्यापि छँदैछ । तर त्यसलाई चुडाकरण कै बेला एकै पटक पूरा गर्ने प्रचलन रहिआएको छ ।

## संस्कारहरूको संक्षेपिकरण

परम्परागत संस्कार पद्धतिमा वेदारम्भ र समावर्त्तन पनि प्रमुख अनुष्ठानहरू हुन् । उपनयन संस्कारपछि छात्रले वेदारम्भ संस्कारलाई पूरा गर्नु पर्दछ । शास्त्रीय मान्यताअनुसार यसलाई अरू संस्कार जस्तै शुभ साईतमा होम गरी धार्मिक विधिपूर्वक संचालन गरिन्छ । एवंप्रकार गुरुकूलमा रही अध्ययन पूरा गरेका छात्रले घर फर्कने क्रममा समावर्तन संस्कार पूरा गर्नु पर्ने प्रावधान छ ।[१६३] मध्यकालीन संस्कार पद्धतिसम्बन्धी हस्तलिखितग्रन्थमा यी दुवै संस्कारको उल्लेख भएका छन् । वेदारम्भ संस्कारलाई कलश स्थापना र होम गरी पूरा गर्नु पर्दछ । समावर्त्तन संस्कार कार्यन्वयन गर्दा होम गर्ने, सो स्थानमा ब्रह्मा तथा आठ वटा जलपूर्ण कलश स्थापना गर्ने, सो कलशको जलबाट स्नान गर्ने, वस्त्र हस्तान्तरण आदि सबै विधि पूरा गर्नु पर्ने प्रथाबारे तत्कालीन स्रोतमा उल्लेख गरिएको छ ।[१६४] यी ऐतिहासिक स्रोतहरूले हिन्दू नेवार समुदायमा वेदारम्भ र समावर्त्तन संस्कारको परम्परा रहेको थाहा हुन्छ ।

ती संस्कारहरूबारे मध्यकालीन ऐतिहासिक स्रोतहरूमा उल्लेख भए तापनि बर्तमान समयमा यसलाई व्यवहारमा पूरा गरिएको पाइँदैन । शास्त्रीय आधारमा अध्ययन गर्ने कार्य धेरै गाऱ्हो छ । प्रचलित परम्पराअनुसार अध्ययनको सिलसिलामा छात्रले गुरुकूलमा रही धेरै वर्ष बिताउनु पर्दछ । त्यसको लागि बालक शारीरिक तथा मानसिकरूपले सक्षम



हुनु आवश्यक छ । तर सबै व्यक्ति यसका लागि उत्साहित हुन्छ भन्ने छैन । अर्कोतिर अधिकांश मानिसहरू बालककालदेखि आफ्नो परिवारको परम्परागत व्यवसायिक कार्यमा संलग्न हुने गर्छन् । तिनीहरूले शास्त्रीय शिक्षा र उच्च अध्ययनलाई खास प्राथमिकता दिएको हुँदैन । जो व्यक्ति सक्षम भएर अध्ययन गर्ने इच्छा राख्थ तिनीहरू मात्र यतातिर अग्रसर हुने गर्छन् । त्यसले गर्दा वेदारम्भ संस्कारलाई पूरा गर्ने थोरैमात्र हुन्थ्यो । एवंप्रकार समबर्त्तन संस्कार गुरुकूलमा अध्ययन पूरा गरी फर्कने छात्रहरूलाई मनाइने संस्कार हो । त्यसकारण यी संस्कारहरूलाई समाजले ग्रहण गरिएको भए तापनि सबैका लागि अनिवार्य थिएन भन्ने बुझिन्छ । यद्यपि अन्य संस्कारसँगै यसलाई पनि सँगै मनाउने गर्दै आएका छन् । कसैले चूडाकरण संस्कारलाई छुट्टै मनाइएको छैन भने चूडाकरण संस्कारलगायत उपनयन, वेदारम्भ तथा समावर्त्तनलाई समेत एकैपटक समेटेर ब्रतबन्ध संस्कार मनाइने परम्परा चल्दैआएको छ । यस क्रममा केश खौरिने, यज्ञोपवीत धारण, मेखला बन्धन, पिताम्बर धोती लगाई मृग छाला र दण्डा दिएर ब्रह्मचार्य बनाई यस अनुष्ठान पूरा गर्ने सिलसिलामा उपस्थित परिवारका सदस्य तथा आफन्त सबैसित भिक्षा माग्न लगाई गुरुकूलमा गएको भावार्थ स्थानीय गणेशस्थानमा पुऱ्याउने र गुरुकूलबाट फिर्ता आएको अर्थमा समावर्त्तन सम्झेर घर भित्र्याउने सबै सांस्कृतिक कार्यहरू एकैपटक व्रतबन्धमा पूरा गर्ने परम्परा छ । यसले समाजमा संस्कार र यसका अनुष्ठानहरू पूरा गर्दा समय परिस्थिति र आवश्यकता अनुकूल यसलाई पहिलेदेखि संक्षेपीकरण गर्दै ल्याएको देखिन्छ । यस्तो परम्परा मध्यकालमा पनि प्रचलित रहेको बुझिन्छ । भक्तपुरका युवराज भूपतिन्द्र मल्ललाई ने. सं. ८०६ (१६८५ ई.) मा ब्रतबन्ध गरिएको थियो । त्यसरी ब्रतबन्ध गर्दा धरपरिवारलगायत आफन्तहरूको घरघरबाट बेटाली, कपडा र अन्य सामग्रीहरूसहित "बाधान छुय" (उपहार) दिने चलन थियो ।[१६५] त्यो परम्परा अहिले पनि व्यवहारमा प्रचलित हुँदैआएको छ ।

## बा:रा संस्कार

प्राचीनकाल र मध्यकालमा महिलालाई औपचारिक शिक्षा लिने चलन थिएन । साथै तिनीहरूले दीक्षा लिने, दागबत्ती दिने, मातापिताको मृत्यु हुँदा क्रिया बस्ने जस्ता कुनै बिधि व्यवहार पूरा गर्नु पर्दैन थियो । त्यसकारण छोरीबेटीलाई उपनयन संस्कार मनाउने प्रावधान थिएन ।

त्यही परम्परा अहिले सम्म चल्दै आएको छ । शास्त्रले केटी मान्छेलाई उपनयन संस्कार मनाइने प्रावधान नराखिए तापनि नेवार समाजमा भने सोही प्रकृतिको छुट्टै संस्कार मनाउने चलन छ । कन्या केटीलाई मनाइने त्यस किसिमको संस्कारलाई "बा:रा:" (गुफा) भनिन्छ । हुनत "बा:रा:" को शाब्दिक अर्थ के हो स्पष्ट रूपमा थाहा पाउन सकिएको छैन । यद्यपि यसलाई कन्याको पहिलो पटक रजस्वला हुंदा पूरा गर्ने परम्परा छ । वास्तवमा "बा:रा:" स्वत: बस्ने प्रक्रिया हो । किनभने कन्याको पहिलो पटक रजस्वला भएको थाहा पाउने बितिकै उनलाई अंध्यारो कोठामा थुन्ने प्रचलन छ । तर यस समाजमा साधारणतया रजस्वला हुनु अगाडि नै ज्योतिषी देखाई शुभसाईतमा "बा:रा:" राख्ने चलन व्यापक रूपमा चल्दै आएको छ । त्यसरी साईत हेरी "बा:रा:" राख्दा साधारणतया बिजोर उमेरमा पार्ने परम्परा छ । "बा:रा:" बस्ने कन्यालाई अँध्यारो कोठामा थुन्नुभन्दा अगाडि घरमूली महिलाले "बा:रा:" अवधिभर कन्यालाई कुनै शारीरिक समस्या भोग्न नपरोस भन्ने कामनासहित फुल, माछा र मासु राखी सगुण दिन्छ । पहिलो रजस्वला भएर वा त्यसभन्दा अगाडि नै उपयुक्त समयमा ज्योतिष देखाएर राखिएको होस कुनै तरीकाबाट "बा:रा:" बसेको भएपनि सो सम्बन्धी सांस्कृतिक तथा व्यवहारिक कार्यहरू एकै प्रकारका हुन्छन् । कुनै पुरुषले पनि नदेख्ने र सूर्यको प्रकाश समेत नछिर्ने गरी लामो समयसम्म कोठामा थुनिएर बस्नु पर्ने हुँदा "बा:रा:" राखेकी कन्यालाई सहयोग गर्ने गरी एक जना अर्को कन्यालाई साथी राख्ने चलन छ । उनलाई "बा:रा:" पासा ("बा:रा:" की साथी) भनिन्छ ।

मध्यकालीन नेवार समाजमा कन्यालाई "बा:रा:" राखेका विभिन्न उदाहरणहरू तत्कालीन ऐतिहासिक स्रोतहरूको अध्ययनबाट थाहा पाउन सकिन्छ । भक्तपुर दरबारमा भानुमती देवी "बा:रा:" बसेको कुरा थरपौ: (लगत) मा टिपोट गरिएको छ ।[166] साथै कान्तिपुरका शासक जयप्रकाश मल्लका रानीलाई पनि यसरी नै "बा:रा:" राखिएको थियो ।[167] यसबाट वर्तमान नेवार समाजमा प्रचलित "बा:रा:" राख्ने प्रथा मध्यकालदेखि क्रमिक रूपमा विकास हुँदैआएको भन्ने कुरा थाहा हुन्छ ।

प्रचलित परम्पराअनुसार "बा:रा:" बसेकी कन्यालाई एघार रात पूरा थुनी बाह्रौं दिनमा विधि विधान पूर्वक निकालिन्छ । तर ब्राह्मण जातिमा आठ दिनमात्र "बा:रा:" राख्ने गर्दै आएका छन् । यस जातिमा पुरुषको उपनयन संस्कार पूरा गर्ने क्रममा ब्रह्मचार्य धर्ममा बस्दा चार



दिन सूर्य दर्शन नगरी गुप्तवास बस्ने परम्परा छ । यसरी पुरुषले चार दिन गुप्त रूपमा बसी सक्ने हुंदा कन्याले आठ दिनमात्र गुफा बस्ने गरेको भनाई पाइन्छ ।[168]

"बा:रा:" बसेकी कन्यालाई सुरुका चार दिनसम्म नुन खान दिंदैन । साथै शिरमा तेल लगाउने, कपाल कोर्ने, टिका लगाउने जस्ता श्रृङ्गारका कुनै पनि कार्य नगरी सादा जीवन बिताउनु पर्दछ । चारौं दिनमा "बा:रा:" कन्यालाई बिहान सबेरै स्नान गराई "बा:रा:" राखेको कोठामा "बा:रा: ख्या" (कपासको ख्याक) स्थापना गरी घरको महिला मूलीले सगुन दिई नुन र श्रृङ्गार फुकाउने कार्य हुन्छ । त्यसको लगतै "क्वों चिकं" लगाउन दिन्छ । यस विधिलाई "क्वों चिकं सायकेगु" भनिन्छ । उल्लेखित सांस्कृतिक कार्यहरू "बा:रा:" संस्कारको महत्वपूर्ण विधि हो । "क्वों चिकं" को विषयमा माथि उल्लेख भई सकेको छ । मध्यकालमा "बा:रा:" राखेकी कन्यालाई "क्वों चिकं सायकेगु" गर्न दिएको कुरा थ्यासफुमा उल्लेख भएको छ ।[169] यो प्रथा कन्यालाई श्रृङ्गार गर्न दिएको स्विकृति हो । नेवार समाजमा अनुहार र हात खुट्टालाई मुलायम बनाउन क्वो: चिकं लगाउने चलन छ ।

"बा:रा:" कन्यालाई अनुभवी महिलाहरूले समय समयमा त्यहां आई रजस्वलालगायत महिलाको शारीरिक, मानसिक तथा व्यावहारिक ज्ञानसम्बन्धी शिक्षा दिने गर्छन् । त्यस्तो शिक्षाले कन्याको मनोबल बढाउन धेरै सहयोग पुऱ्याउंछ । यसैक्रममा आफ्ना सहयोगी र भेटघाट गर्न आउने अन्य इष्टमित्र तथा साथीहरूसित मिलेर श्रृङ्गारपट्टार गरी लुगा लगाएर सजिनु, गीत गाउनु, नाच्नु, पुतली खेल्नु, गट्टा खेल्नु, गफ गर्नु आदि "बा:रा:" कन्याको "बा:रा:" अवधिभरको दिनचर्या हो । हिजोआज रेडियो, टिभीलगायत अन्य संचार माध्यमका धेरै प्रविधिहरू सरल तरिकाबाट उपलब्ध हुने हुंदा "बा:रा:" कन्याले यसलाई पनि उपयोग गर्ने गरेको पाइन्छ ।

"बा:रा:" बसेकी कन्यालाई घर परिवार तथा कन्याकी मामा घर को अलावा नजिकका आफन्तहरू सबैले "नसा नकेगु" भनेर भुटेको विभिन्न किसिमका गेडागुडी खुवाउन लाने चलन रहिआएको छ । त्यस्तो गेडागुडी विशेष प्रकारको भाँडोमा राखिन्छ । धेरै दिनदेखि कोठामा थुनिएर बसेकी कन्यालाई नियास्रो हटाउन त्यसरी नसा खुवाउने चलन विकास भएको देखिन्छ ।

वा:रा बसेपछि सो अवधि भर आफ्नो घर परिवारलगायत पिताको नजिकका नाता कुटुम्ब सबैले सूतक बार्नु पर्दछ । सो अवधिमा कसैले पनि धार्मिक तथा संस्कारसम्वन्धी कार्य गर्दैनन् । रजस्वला भनेको शरीरमा भएको विकारयुक्त रक्त निक्लनु हो । त्यस्तो रक्तलाई दुषित मानिन्छ । पहिला रक्तश्रावको समय सुरक्षाको लागि आधुनिक साधनहरू प्रयोग गर्ने व्यवस्था नभएको र त्यसबारे व्यवहारिक ज्ञानको समेत अभाव थियो । यताउता हिड्न दिएमा छ्यासमिस हुनुका साथै खराव रक्तले विभिन्न ठाउँलाई विटुलो बनाउन सक्थ्यो । त्यसकारण "वा:रा:" अवधिभर शुद्धिकार्य नभएसम्म सूतक वार्ने गरेको थाहा हुन्छ ।

"वा:रा:" राखेको बाऱ्हौं दिनमा कन्यालाई विधि पूर्वक बाहिर निकालिन्छ । त्यसभन्दा अगाडि विहान कन्यालगायत घरपरिवारका सबै सदस्यहरूले नाऊद्वारा नङ्ग काट्न लगाएर स्नान गरी चोखो पार्छन् । त्यसको लगतै ब्राह्मणले कलशस्थापना गरी पूजा कार्य प्रारम्भ गर्छ । "वारा" कन्यालाई नयाँ दुलहीलाई जस्तै श्रृङ्गार गराई घरमूलीले भोटे तालाको साँचो समाउन लगाई करुवावाट जलधारा बहाई पूजा स्थलसम्म ल्याई पुऱ्याउँछ । कन्याको आँखामा प्रकाश नपरोस भन्ने आशयले उनको टाउकोमा खास्टोले छोपेर ल्याउने चलन छ । ब्राह्मणले मन्त्र वाचनसहित कन्याको टाउकोबाट खास्टो हटाएर सूई दर्शन गर्न अनुमति दिन्छ । तर उनलाई एकै पटक सूर्य हेर्न दिँदैन । सुरुमा एउटा बाटामा पानी राखी त्यसमा सूर्य दर्शन गराउँछ । त्यसपछि मात्र सिधा सूर्यलाई हेर्न दिन्छ । एघार दिनसम्म सूर्यको प्रकाश समेत नहेरी कोठामा थुनिएर बसेकी व्यक्तिलाई बाऱ्हौं दिनमा एकै पटक सूर्य देखाउँदा आँखामा असर पर्न सक्छ । त्यसकारण "बा:रा:" निकालेको समयमा पहिला पानीमा सूर्य हेराएर मात्र पछि सूर्य दर्शन गराउने परम्परा विकास भएको हो भन्न सकिन्छ । सूर्य दर्शन गरेको लगतै पूजास्थलमा आशण ग्रहण गर्न लगाई कन्यालाई लक्षित गरी पुन: पूजा कार्य प्रारम्भ गर्छन् । यसैक्रममा पुरुष घरमूलीले "ज्वलान्हायकं" (नेवार समाजमा प्रचलित धातुद्वारा निर्मित एक सांस्कृतिक ऐना) देखाउने र महिला घरमूलीले "सिन्ह:मू" (ज्वलान्हायकं संगै रहने सांस्कृतिक सिन्दूरदानी) को सिन्दूर निकालेर "बा:रा:" को सिउँदोमा लगाई दिन्छ । पूजाको अन्तमा उनलाई "भाय्भु न्हयोच्याकेगु" (विशेष प्रकारको भोज) खवाउने परम्परा छ ।



## बा:रा र उपनयन एउटै प्रकृतिको संस्कार

उपनयन संस्कार पुरुषलाई र बा:रा संस्कार स्त्रीलाई पूरा गर्ने भिन्नाभिन्नै संस्कारहरू हुन् । तापनि यी दुई एउटै प्रकृतिका संस्कार हुन् । "बा:रा:" राख्ने प्रथा बालिकाको निमित्त उपनयन संस्कारको विकल्पको रूपमा विकास भएको देखिन्छ । यी दुवै संस्कारहरू पुरुष र स्त्रीलाई किशोर अवस्थामा प्रवेश गर्ने समयमा पूरा गरिन्छ । मानिसलाई युवा अवस्थादेखि श्रृङ्गारको आवश्यकता हुन थाल्दछ । औपचारिक रूपमा यसको जानकारी उपनयन र बा:रा संस्कारले दिएको पाइन्छ । यस समुदायमा श्रृङ्गारको लागि प्रयोग हुने साधनहरूमध्ये "क्वो:चिकं" पनि हो । यसको प्रयोग उपनयन र बा:रा दुवै संस्कारमा गर्ने परम्परा छ ।

उपनयन केटा मान्छेलाई आफ्नो चरित्र निमार्ण गर्न अनुशासनलगायत नीतिशास्त्र सम्बन्धी ज्ञान दिलाउने संस्कार हो । यसमा बटुकलाई जनै प्रदान गरिन्छ । जनै धारण गर्नु सामाजिक नीतिनियममा रहनु पर्ने एक किसिमको बन्धन हो । यसको धारणपछि बटुकले पूरा गर्नु पर्ने प्रत्येक नियमहरूको बारेमा ज्ञान दिइन्छ । साथै गुरुकूलमा जानु अगाडि लँगौटी लगाई यौन अङ्गलाई सदा गोप्य राख्न सल्लाह दिएर ब्रह्चार्यसम्वन्धी ज्ञान दिइन्छ ।[७०] यस्तै किसिमको अनुशासन र चरित्र निमार्णसम्वन्धी ज्ञान कन्यालाई पनि आवश्यक पर्दछ । बा:रा भनेको कन्यामा आएको परिपक्वताको सङ्केत हो । किनभने रजस्वलाभई सकेकी कन्याले गर्भधारण गरी आमा बन्न सक्ने खुबी ग्रहण गरेको हुन्छ । यस्तो अवस्थामा त्यस किसिमको ज्ञानको आवश्यकता पर्दछ । अरिस्टोटलले कन्यामा देखापर्ने स्तनको विकास र स्वरको अनौठो परिवर्तन उसको पहिलो रजस्वलाको सङ्केत हुन् भनेका छन् । साथै त्यस्तो उमेरमा उनको व्यवहारमा रिसाउने, आवेशमा आउने, व्यग्रता देखिनुको साथै यौन उत्तेजना पनि हुनसक्छ । तसर्थ मातापिता वा संरक्षकबाट निरन्तर हेरचाह पुऱ्याउनु पर्ने भनाई पाइन्छ ।[७१] त्यसैले ब ा:रा बसेकी कन्यालाई यससम्बन्धी अनुभवी महिलाहरूले बा:रा अवधिभर समय समयमा रजस्वलाको अर्थ, यसको आवश्यकता, रजस्वलापछि पुऱ्याउनु पर्ने विचार, यौन अङ्गलाई गोप्य राख्नु पर्ने लगायत अन्य व्यावहारिक ज्ञान प्रदान गर्ने परम्परा अद्यापि छ । यी तथ्यहरूबाट बा:रा संस्कार कन्यालाई छुट्टै रूपमा पूरा गर्ने भए तापनि यसले उपनयन संस्कारको प्रकृतिसित सामिप्यता राख्दछ ।

समाजमा प्रत्येक द्विजका पुरुषले आफ्नो वर्णअनुसारको सामाजिक अधिकार उपनयन संस्कार पछि मात्र प्राप्त गर्दछ । यो संस्कार पूरा नगरेका ब्राह्मण, क्षेत्री र वैश्य कुनै पनि वर्णका व्यक्तिले आफ्नो वर्णअनुसार प्राप्त हुने विशेषाधिकार हनन् हुने कुरा माथि उल्लेख भई सकेको छ । यस्तैगरी प्रत्येक द्विजका कन्याले आफ्नो वर्णअनुसारको अधिकार बा:रा संस्कार पूरा भए पछि मात्र प्राप्त गर्दछ । त्यसकारण उपनयन पूरा नगरेका छोराको मृत्यु भएमा बान्ह दिनको जुठो र एकवर्षको बर्खी बार्नु पर्दैन । एवंप्रकार बा:रा नराखेकी छोरीको मृत्यु भएमा पनि उनको पूरा काजक्रिया गर्ने चलन पाइदैन । यस किसिमको सामाजिक व्यवहारले यी दुवै संस्कार एकै प्रकृतिको देखिन्छ ।

**विवाह संस्कार**

मानव जीवनको अर्को महत्वपूर्ण संस्कार विवाह हो । पुरुष र स्त्रीबीच नयाँ सम्बन्ध स्थापना गरी पतिपत्नीको रूपमा स्थापित गर्नुलाई विवाह भनिन्छ । मानिसको जीवनमा विवाहको ठूलो महत्व छ । मनुस्मृतिमा स्त्री विनाको एक्लो पुरुष जीवनलाई अर्थहिन मानिएको छ ।[१७२] यस्तैगरी ई. ओ. जेम्सले विवाहको परिभाषा दिंदै यसलाई मानव समाजको सर्वप्रचलित प्रथा भनेका छन् । विवाहले व्यक्तिको यौन सम्बन्ध, गृहप्रबन्ध, प्रेम तथा मानवीय स्तरमा व्यक्तित्वको जैवीक, मनोवैज्ञानिक, नैतिक र आध्यात्मिक विकासको आवश्यकता पूरा गर्दछ ।[१७३] हिन्दू परम्परामा विवाह गर्नुको तीनवटा उद्देश्यहरू बताईछ । धार्मिक कार्यलाई सफलिभूत बनाउनु पहिलो उद्देश्य हो भने संन्तान प्राप्ती तथा रतीक्रियालाई क्रमश: दोस्रो, र तेस्रो उद्देश्य मानिएको छ ।[१७४] मानव समाजको प्रारम्भिक कालमा संस्कार मनाउने परम्परा विकास भएको देखिन्दैन । त्यसकारण तत्कालीन मानिसहरू यौन आकर्षणका बेला पशुपंक्षीको जस्तो व्यवहार देखाउँथे । त्यस्तो पशुतुल्य यौनजन्य मानविक व्यवहारलाई परिस्कृत र व्यवस्थित गर्दै लाखौं बर्षपछि मानिसले विवाह संस्थाको आविष्कार गऱ्यो ।[१७५] त्यसै अनुरूप समाजमा व्यवस्थित ढाँचाबाट विवाह गर्ने परम्पराको थालनी भएको हो ।

व्यक्तिको इच्छा र स्वभावअनुसार वैवाहिक सम्बन्ध स्थापना हुन्छ । त्यही भिन्न प्रकृतिको आधारमा विवाहलाई आठ प्रकृतिहरूमा विभाजन गरिएको छ । ती विभाजित विवाहका प्रकृतिहरू ब्राहृम, दैव, आर्ष, प्राजापत्य, आसुर, गान्धर्व, राक्षस र पैशाच हुन् ।[१७६] कन्याका पिताले वेदका सदाचारी र योग्य पुरुषलाई आमन्त्रण गरी आफ्नो छोरीकी पतिको रूपमा पूजा र सत्कार गरेर कन्यादान गरी दिनुलाई ब्राहृम विवाह भनिन्छ । दैव विवाह भनेको कन्याका पिताले यज्ञ विधि राम्ररी पूरा गर्न सक्ने र ब्रम्हचार्य धर्मपालन गरेका व्यक्तिलाई वरको रूपमा चयन गरी छोरीको कन्यादान दिनु हो । आर्ष विवाहमा कन्याका पिताले यज्ञ गर्नका निमित्त दुलाहा पक्षवाट गाई र बैलको एक वा दुई जोडा प्राप्त गरी विधिपूर्वक कन्यादान दिन्छ । त्यस्तैगरी वर र वधूलाई संगै राखी "तिमीहरू दुवैले संगै रही धर्मको आचरण गर" भन्ने आशिषसहित कन्यादान दिने विवाहलाई प्राजापत्य विवाह भनिन्छ । कन्याका पिताले वेर वा उनको पक्षवाट आर्थिक लाभप्राप्त गरी छोरीको विवाह गरी दिने परम्परा आसुर विवाह हो । अर्को, गान्धर्व विवाह भनेको केटा र केटी दुवैले मातापिताको प्रभावमा नपरी आपसमा प्रेम तथा शारीरिक सम्बन्ध कायम गर्नु हो । बल र शक्ति प्रयोग गरी कन्याको हरण वा बलात्कार गर्नुलाई राक्षस विवाह भनिन्छ । एवंप्रकार सुतेकी, नशाले मातिएकी र शीलको रक्षा गर्नमा प्रमाद युक्त कन्यासित धोखा र छलद्वारा यौन सम्बन्ध स्थापित गर्नु पैशाच विवाह हो । तर यी उल्लिखित अष्टप्रकृतिका विवाहहरू सबै वर्ण वा जातिका निमित्त वैध मानिएको पाईदैन । स्मृतिमा प्रत्येक वर्णको निमित्त उपयुक्त विवाहवारे चर्चा गरिएको छ । ब्राहृमणको लागि ब्राहृम, दैव, आर्ष, प्राजापत्य, आसुर र गान्धर्व गरी ६ प्रकारका बिवाहहरू वैध मानिएको छ । क्षेत्रीको लागि आसुर, गान्धर्व, पैशाच र राक्षस यी चारप्रकारका विवाहहरू स्वीकार योग्य मानिएको छ । एवंप्रकार वैश्य र शूद्रको लागि आसुर, गान्धर्व र पैशाच विवाहको विधान छ ।[१७७] यद्यपि अन्तरजातिय विवाह, अनमेल विवाह र सगोत्रिय विवाहलाई हिन्दू समाजमा वर्जित मानिएको छ । यस्तो विवाहबाट आफ्नो कूल तथा समाजमा नै विकृति उत्पन्न हुन जान्छ । तसर्थ राम्रो कूलको आफ्नो परम्परा र संस्कारसित मिल्ने परिवारका सन्तानसितको वैवाहिक सम्बन्ध नै आदर्श सम्बन्ध मानिन्छ ।[१७८]

नेवार समाजभित्र स्मृतिमा उल्लेख गरिए जस्तै आठै प्रकारका विवाह प्रचलित भएको देखिन्दैन । समाजमा प्रचलित व्यावहारिक क्रियाकलापलाई दृष्टिगत गर्दा ब्राहृम विवाह, दैव विवाह र आर्ष विवाह उत्तम प्रथा मानिए पनि त्यसको प्रचलन अति प्राचीनकालको हुन सक्दथ्यो । नेवार समुदायमा परम्परादेखि "मागी विवाह" चल्दैआएको छ । कन्यापक्ष आफै सक्रियभई

दुलाहा खोज्ने कार्यलाई राम्रो मानिन्दैन । यद्यपि यस विषयमा थप अध्ययन र अनुसन्धान हुन वाकी छ । मागी विवाहमा वर र बधुलाईसंगै राखी विधी विधानपूर्वक धार्मिक तथा सांस्कृतिक कार्य सम्पन्न गरी आशिषसहित कन्यादान दिने गर्दै आएको पाइन्छ । त्यसकारण यो प्रथालाई प्राजापात्य विवाहको रूपमा लिन सकिन्छ । यद्यपि यदाकदा आसुर विवाहको बारेमा सुन्न पाइन्छ । हुनत यो विवाहलाई राम्रो मानिन्दैन । यसमा विवाहको प्रमुख तत्व धन भएको हुँदा यसलाई एकप्रकारको कन्या विक्रि मान्न सकिन्छ । त्यसैले असुर विवाहवाट जन्मिएको पुत्रलाई पिण्ड दिने अधिकार समेत हुँदैन ।[१७९] यद्यपि नेवार समुदायमा यदाकदा आर्थिक अवस्था कमजोर भएका र धनको लोभमा परेका मातापिताले पुरुषको परिवारसित धन लिएर आफ्नो छोरीको विवाह गरी दिने गरेको सुन्न पाइन्छ । त्यस प्रथालाई "लाखा" लिएर गरिएको विवाह भनिन्छ । यस्तो परम्परा भएपनि तत्कालीन स्रोतको अभावमा यहाँ धेरै चर्चा गर्न सकिएको छैन । अर्कोतिर विवाह गर्ने पुरुषको तर्फबाट धन लिई विवाह गर्न हिजोआज कानूनी रूपमा वर्जित गरिएको छ ।[१८०]

गान्धर्व विवाह पुरुष र स्त्री दुवैको बढ्दो जोवनको प्रतीक मान्न सकिन्छ । युवा अवस्थामा प्रवेश गरी सकेपछि यी दुवै एक अर्काप्रति आकर्षित हुनु स्वाभाविक हो । समाजमा छोराछोरीको विवाह मातापिताको इच्छाअनुसार हुने परम्परा भए तापनि आफ्ना मान्यजनको कुनै परवाह नगरी पुरुष र स्त्री दुवैले आपसमा विवाह गर्ने प्रचलन धेरै पहिलेदेखि चल्दै आएको छ । नेवार समाजमा छोरी स्वयम् पोईल जाने प्रथालाई "पयनं वन" वा "मेले वन" (पोईल गयो) भनिन्छ । यस्तो भनाइ परम्परादेखि चल्दैआएको हुँदा नेवार समुदायमा गान्धर्व विवाह प्रथा पहिलेदेखि रहिआएको बुझिन्छ ।

राक्षस विवाह यसको नाम आफैवाट नराम्रो प्रथा हो भन्ने बुझिन्छ । नेवार समाजमा यस्तो विवाह गर्ने परम्परा रहेको देखिन्दैन । हुनत प्राचीनकालमा मानदेव र मध्यकालमा यक्षमल्लले नेपालमण्डलको राज्य विस्तार गरेका घटना इतिहासमा अध्ययन गर्न पाइन्छ । यद्यपि स्थानीय क्षेत्रमा त्यस्तो महिला माथि अव्यवहार गरेको कुनै स्रोतले पुष्टि गरेको छैन । उत्तरमध्यकालमा यहाँको राजनैतिक अवस्था सुदृढ नभएको हुँदा बाह्य राज्यहरूमा आक्रमण गर्ने तर्फ ध्यान दिन सकेको थिएन । इशाको पन्धौं शताब्दीमा नेपाल उपत्यका कान्तिपुर, ललितपुर र भक्तपुर



तीनबटा स्वतन्त्र राज्यहरूमा विभाजित भयो । हुनत ती राज्यहरूबीच राजनैतिक मेल थिएन । आपसमा हमेशा युद्ध गरिरहन्थे । त्यस्तो अवस्था विद्यमान रहेर पनि राक्षस विवाहको प्रथा रहेको कुनै गुन्जायस देखिन्दैन । ती राज्यहरू राजनैतिक दृष्टिकोणबाट बिभाजित भए तापनि सामाजिक जीवनमा कुनै भिन्नता थिएन । सबै राज्यका शासकहरू मल्लवंशका भएको हुँदा आपसमा रक्तको नाता थियो । त्यसकारण एउटा राज्यका शासक वा उनको परिवारमा संस्कारसम्बन्धी महत्वपूर्ण कार्य हुँदा अर्को राज्यका शासक र उनका परिवार सहभागी हुने गर्दथे ।[१८१] त्यसैले तत्कालीन समयमा राक्षस स्वभाव देखाएर विवाह गर्न सक्ने अवस्था थिएन । आधुनिककालमा त्यस्तो बिवाहलाई नियमत पूर्ण रूपमा गैरकानूनी मानिन्छ । त्यसकारण समाजमा यसको प्रचलन हुने कुरै भएन ।

विवेकहिन मानिसले जस्तोसुकै काम गर्न पनि पछि पर्दैन । प्रत्येक समाजमा केही त्यस्तो व्यक्ति हुनु कुनै नौलो कुरा होइन । जसलाई अपपादको रूपमा लिन सकिन्छ । तिनीहरूले विवेक हिनताको कारण धोखा र छलद्वारा कन्यासित यौन सम्बन्ध स्थापित गर्न सक्छ । यस किसिमको विवाह शोभनिय होइन । तरपनि बुद्धि र बिवेक हिनताको उपजवाट हुने त्यस्तो विवाह नेवार समाजमा पनि यदाकदा हुनसक्ने कुरालाई नकार्न सकिदैन ।

## विवाहको स्वरूप

नेवारमा समाजमा निम्न चार प्रकारका विवाह प्रचलित भएको देखिन्छ ।

एकविवाह
बहुविवाह
बालविवाह
विधवा विवाह

## एकविवाह

पुरुषले आफ्नो जीवनकालमा एउटै मात्र पत्नी विवाह गर्नु एकविवाह प्रथा हो । याज्ञवल्क्यस्मृतिमा एकविवाहलाई जोड दिएको पाइन्छ । आज्ञाकारी, दक्ष, पुत्रवती र शुशिल पत्नीले स्वधर्म निर्वाह गरी रहेको अवस्थामा पुरुषले अर्को पत्नी विवाह गर्नु हुँदैन । मानिसको सम्पूर्ण जीवन

एउटै पत्नीबाट निर्वाह हुन्छ । त्यस्तो पत्नी छँदै अर्को पत्नी ल्याउने पुरुषलाई दण्ड सजाय पाउने बताइएको छ ।[१८२] नेपालमा लिच्छविकालदेखि एकपत्नी विवाह गर्ने चलनले महत्व पाएको देखिन्छ । मध्यकालीन नेपाल उपत्यकाको समाजमा पनि एकविवाह मात्र भएका धेरै उदाहरणहरू पाइन्छन् । तत्कालीन शासक जयरूद्रमल्लदेव (१३११-१३२६ ई.,) का छोरी नायक देवीको विवाह हरिचन्द्रसित भएको थियो । एवंप्रकार ने.सं. ४५० (१३२९ ई.) मा हरिचन्द्रका भाई गोपालचन्ददेवसित कामादेवीको विवाह गरी दिए ।[१८३] ती दुवैले अर्को विवाह गरेका थिएनन् । राजा जयस्थिति मल्लको ने. सं. ४७४ (१३५३ ई.) मा राजल्लदेवीसित विवाह भएको थियो ।[१८४] यी दुईबीच पती पत्नीको हैसियतले लगभग ३४ बर्षसम्म हसयात्रा गरे । उनले अर्को विवाह गरेको देखिन्दैन । कान्तिपुरका अन्तिममल्ल राजा जयप्रकाश मल्लका रानी दयावती थिईन । उनले पनि एक पत्नीमात्र विवाह गरेको देखिन्छ । शासकवर्गमा मात्र होईन साधारणवर्गमा समेत एकल विवाहको प्रचलन थियो भन्ने कुरा तत्कालीन अभिलेखहरूबाट थाहा हुन्छ । मध्यकालमा स्थापना गरिएका विभिन्न अभिलेखहरूमा केवल पतिपत्नी दुई व्यक्तिको नाममात्र उल्लेख भएका छन् ।[१८५] ती वर्णनहरूले पहिलेदेखि नेवार समाजमा एकविवाह प्रथा रहेको बुझिन्छ । वास्तवमा एक पत्नी विवाह उचित र आदर्श प्रथा हो । विवाहको उद्देश्य पूरा गर्न एकपत्नी पर्याप्त हुनुका साथै यसले पती र पत्नीबीच अगाढ माया र विश्वास जगाउँछ । वर्तमान समाजमा खासगरी एकविवाह प्रथा व्यापक रूपमा चल्दै आएको छ । अर्कोतिर कानूनले पनि एकविवाह प्रथालाई जोड दिएको हुँदा यस प्रथाले ठूलो स्थान पाएको हो ।

### बहुविवाह

एकपत्नी प्रथा आदर्श विवाह भए तापनि समाजमा बहुपत्नीको परम्परा पनि चलेका उदाहरणहरू पाइन्छन् । हुनत स्मृतिमा बहुविवाहलाई खास महत्व दिएको पाइदैन । कामवासनाको चाहना अधिक हुने पुरुषलाई भने बहुविवाह गर्न छुट दिइएको छ ।[१८६] हुनत नेपालमा बहुविवाहको प्रचलन प्राचीनकालदेखि चल्दैआएको छ । लिच्छवि शासक मानदेवका क्षेमकुमारी, गुणवती र भोगिनी नामका तीन पत्नीहरू थिए । ती मध्ये भोगिनी पट्रानी थिईन् ।[१८७] यद्यपि त्यतिबेला बहुविवाहले खास महत्व पाएको देखिन्दैन । राजा मानदेवले बाहेक अरू शासकहरूले बहुविवाह



गरेको खासै उदाहरण देखिन्दैन । तर मध्यकालमा यो प्रथा धेरै चल्न थाल्यो । तत्कालीन शासकहरूले बहुपत्नी राखेका उदाहरणहरू पाइन्छन् । कान्तिपुरका शासक प्रताप मल्लका रूपमती र राजमती नामका दुई रानीहरू थिईन् ।[१८८] उनैका समकालीन ललितपुर राज्यका शासक श्रीनिवास मल्लका भृगावती, षन्तोषा तथा मणिकर्णि नामका तीनजना रानीहरू रहेको उनैका अभिलेखबाट थाहा हुन्छ ।[१८९] एवंप्रकार कान्तिपुरका राजा भुपालेन्द्र मल्लको पनि छुट्टाछुट्टै समयमा दुई कन्याहरूसित विवाह भएको थियो ।[१९०] हुनत तत्कालीन समय शासकवर्गमा मात्र त्यस्तो बहुविवाहको प्रचलन व्यापक रूपमा चलेको थियो भनिन्छ ।[१९१] यद्यपि जनसमुदायमा पनि यसका उदाहरणहरू पाइन्छन् । ललितपुरस्थित श्रीखद्रवर्शुर्ण महाविहारका यज्ञ गरी स्थापना गरेको ने. सं. ८१६ (१६९५ ई.) को अभिलेखमा शाक्यमुनि बुधमतार नामका व्यक्तिको दुई पत्नीहरू क्रमशः सुमन र द्वितीय पत्नी (नाम खुईली सकेको) को नाम उल्लेख भएका छन् ।[१९२] यस्तै गरी ने. सं. ८१९ (१६९८ ई.) को अर्को अभिलेखमा शाक्यवंशको वाहार नामका व्यक्तिको प्रतिसरा र पिंगरा नामका दुई पत्नीहरू थिए भन्ने कुरा उल्लेख गरिएको छ ।[१९३] यसले समाजमा उच्चवर्गका मानिसहरूमा पनि बहुविवाहको प्रचलन रहेको बुझिन्छ । तर जनसाधारण वर्गमा यो प्रथा कमै मात्र थियो ।

समाजमा परम्परादेखि छोरालाई महत्व दिँदैआएको हुनाले पनि बहुविवाहको प्रचलन रहेको हो । छोरा विनाको जीवन निरर्थक मानिन्थ्यो । आफ्नो मृत्युपछि छोराले नै स्वर्गको द्वार खोली दिन्छ भन्ने धारणा प्रचलित रहिआएको छ ।[१९४] साथै छोराको खातिर बहुविवाह गर्न सक्ने मनुस्मृतिमा उल्लेख छ । स्त्री वन्ध्या (बाँझी) भएका पतिले आठबर्षमा, सन्तान सबै मरेका पतिले दशबर्षमा र छोरीमात्र जन्माउने भए एघारौं वर्षमा दोस्रो विवाह गर्न सकिन्छ ।[१९५] छोरी जति भए पनि त्यसको कुनै अर्थ हुदैन । एउटा पत्नीबाट छोरा नभए दोस्रो, दोस्रोबाट पनि नभए तेस्रो विवाह गर्ने प्रावधान राखिएको छ । यसरी छोराको चाहनाले पनि मानिसलाई बहुविवाह गर्न उत्प्रेरित गरेको हो ।

अर्कोतिर कामवासनाको तृष्णा बढी भएका कतिपय मानिसले स्त्रीको धेरै चाहना गर्छन् । अधिक कामवासनाको चाहनाले बहुविवाह गर्न सक्ने कुरा माथि उल्लेख भई सकेको छ । त्यस्तो व्यक्तिले धेरै पत्नी राख्नु स्वाभाविक हो । त्यसकारणले पनि मानिसहरूमा बहुविवाह गर्ने परम्पराको विकास भएको देखिन्छ ।

बहुविवाह धेरै जसो समाजका प्रतिष्ठित र धनीवर्गमा प्रचलित थियो । तत्कालीन राजकुल, सामन्त तथा धनी परिवारमा बहुविवाह हुने गर्थ्यो । तिनीहरूको सामाजिक र आर्थिक स्तर उच्च हुने भएकोले आफ्नो बडापन देखाउन पनि धेरै पत्नी राख्ने गरेको बुझिन्छ । तर साधारणवर्गका मानिसहरूको आर्थिक अवस्था सामान्य हुने हुँदा तिनीहरूले यस प्रथालाई खास महत्व दिएको देखिन्दैन । कामवासना र सन्तानको लिप्सा भएकाहरूले बाहेक अरूले बहुविवाह कमै मात्र गरेको देखिन्छ ।

हिजोआज कानूनी रूपमा बहुविवाह अवैध मानिन्छ । कसैले पनि पहिलो श्रीमती छँदै दोस्रो श्रीमती विवाह गर्नु हुँदैन । कथंकदाचित श्रीमती शारीरिक तथा मानसिक रूपले ठूलो विरामी भएमा वा सन्तान प्राप्त नहुने भएमा वा श्रीमानसित अंशलिई छुट्टै बसेको अवस्थामा बाहेक दोस्रो विवाह गरेमा दण्ड सजाय दिइने प्रावधान मुलुकी ऐनमा गरिएको छ ।[१९६] त्यसकारणले समाजमा बहुविवाहको प्रथा हटेको हो । तर पनि यदाकदा लुकिछिपी दुईटा श्रीमती राख्ने गरेको देख्न पाइन्छ ।

## बाल विवाह

नेवार समाजमा बालविवाहको प्रचलन धेरै पहिलेदेखि चल्दै आएको छ । यस परम्परालाई नीतिशास्त्रले समेत महत्व दिएको छ । बाह्र बर्षको उमेरसम्म पनि कन्याको विवाह गरी नदिए अभिभावकले पाप भोग्नुपर्ने कुरा माथि उल्लेख भई सकेको छ । त्यसबाट मानिसमा पाप र सामाजिक डर सृजना हुन्थ्यो । कोही पनि मानिस आफ्नो जीवनमा पापको कलङ्क बोकन चाहँदैन । शास्त्रले प्रत्येक कन्या बालिका अवस्थामा हुँदा नै विवाह गर्नु पर्ने बाध्य पारी दिएको हुँदा समाजमा बालविवाहलाई यथेष्ट बल पुग्न गयो । मध्यकालीन नेवार समाजमा सानो उमेरमा विवाह गरेका धेरै उदाहरणहरू पाइन्छन् । नायकदेवी र उनका पति जगतसिंहको तर्फबाट जन्मेकी राजल्लदेवीको आठवर्षको उमेर हुँदा जयस्थिति मल्लसित ने. सं. ४७४ (१३५३ ई.) मा विवाह गरी दिएको थियो ।[१९७] यतिवेला जयस्थिति मल्ल पनि केवल दशबर्षको मात्र थिए । कान्तिपुरका शासक भुपालेन्द्र मल्लको विवाह पनि सानै उमेरमा भएको थियो । उनी त्यतिवेला १० बर्षका मात्र थिए ।[१९८] यसरी तत्कालीन समय बालविवाह भएका उदारहणहरू धेरै पाइन्छन् । भक्तपुरका राजा भूपतिन्द्रमल्लको तेऱ्हबर्षकै उमेरमा विवाह भएको थियो । यी उल्लिखित ऐतिहासिक तथ्यहरूले मध्यकालमा बालविवाहको



धेरै प्रचलन थियो भन्ने कुरा पुष्टि हुन्छ । यो परम्पराको विकास हुनुको कारण भारतमा मुसलमानको बढ्दो प्रभावलाई लिइन्छ । तिनीहरूको आक्रमणबाट आफ्नो छोरीलाई बचाउन सानै उमेरमा विवाह गरी दिने गर्दथे । त्यसैको प्रभाव नेपालमा पनि परेको थियो । तर त्यति मात्र पर्याप्त कारण होईन । किनभने भारतमा बालविवाहको प्रचलन मुसलमानको आगमन पहिलेदेखि नै थियो ।[१९९] वास्तवमा यो प्रचलनलाई शास्त्रीय कथनले प्रोत्साहित गरेको हो । अर्कोतिर पहिलेका मानिसहरू आफ्नो छोरीबेटीलाई यौवना अवस्थासम्म पनि विवाह गरी नदिए बिग्रन सक्ने महसूस गर्दथे । त्यसबाट वच्नको निमित्त पनि सानै उमेरमा विवाह गर्न उपयुक्त सम्झेको थियो ।[२००] हुनत नेवार समाजमा प्रचलित "इही" र "बा:रा:" प्रथाले बालविवाहलाई नियन्त्रण गर्न मद्दत पुऱ्याउन सक्दयो । तर पनि मातापिताले आफ्नो जिम्मेवारी चाँडैपूरा गर्न त्यस्तो विवाहलाई महत्व दिएको देखिन्छ । यसरी सानै उमेरमा केटा केटीको विवाह गरी दिने चलन केही दशक अगाडि सम्म पनि प्रचलित थियो । राणा शासनकालअन्तर्गत वि. सं. १९९० सालसम्म पनि कानूनी रूपमा नै नाबालक बालिकाको विवाहलाई मान्यता दिइएको थियो । तत्कालीन मुलुकी ऐनले ६ बर्ष नाघेकी बालिकाको विवाह गर्न सक्ने अनुमती दिइएको थियो । यद्यपि वि. सं. १९९० सालपश्चात् विवाह योग्य महिलाको उमेर बढाएर ब्राह्मण कन्या भए १० बर्ष लागेपछि र अन्यको हकमा १६ बर्ष लागेको हुनु पर्ने कानूनी व्यवस्था भयो । यो व्यवस्था वि.सं. २०२० सम्म कायम रह्यो ।[२०१] समय, काल र परिस्थिति अनुसार बालविवाहलाई हतोत्साहित बनाउन सरकारले विद्यमान कानूनलाई संशोधन गर्दै ल्याएको छ । सोही अनुरूप वर्तमान कानूनी व्यवस्थाअनुसार केटा र केटीको उमेर २० बर्ष पूरा भएपछि गरिएको विवाहलाई मात्र कानूनी मान्यता दिएको छ । तथापि संरक्षकको अनुमती भएमा केटा र केटीको उमेर १८ बर्षमात्र पूरा गरी भएको विवाहलाई पनि वैध मानिन्छ ।[२०२] सामाजिक परम्पराअनुसार गरिने विवाहलाई केटा र केटीको माथि उल्लेखित उमेरलाई कानूनी मान्यता प्रदान गरिए तापनि सरकारी रूपमा विवाह गर्न चाहनेहरूको उमेर अझ त्यो भन्दा वढी हुनु पर्ने प्रावधान छ । विवाह दर्ता ऐनले विवाह हुन सक्ने अवस्थामा अन्तर्गत पुरुषको उमेर बाईस बर्ष र स्त्रीको उमेर अठार बर्ष भई सकेको हुनु पर्ने स्पष्ट किटान छ ।[२०३] कानूनी रूपमा समेत यसरी प्रतिवन्ध लगाइएको हुँदा हिजोआज नेवार समाजमा बालविवाहको परम्परा पाईदैन ।

## विधवा विवाह

आफ्नो लोग्नेको मृत्युपश्चात् अर्को पुरुषसित पुन: विवाह गर्नु विधवा विवाह हो । यस समाजमा विधवा विवाहको प्रचलन पहिलेदेखि रहिआएको छ । नेपालमण्डलमा शासक रुद्रमल्लकी छोरी नायकदेवीको विवाह ने. सं. ४५० (१३२९ ई.) मा हरिचन्द्रदेवसित भएको थियो । विवाह भएको केही समयपछि भारदारी षडयन्त्रमा हरिचन्द्रको मृत्यु भएको हुँदा नायक देवी विधवा भईन् । ती विधवा नायकदेवीको दरवारमा शरण लिएर बसेकी देवलदेवीको छोरा जगतसिंहसित सम्वन्ध बढ्न गई अन्तमा यसले विवाहको रूप लियो । तिनीहरूको तर्फबाट राजल्लदेवीको जन्म भयो । देवलदेवीले उनको विवाह जयस्थिति मल्लसित गरी दिए । यिनले राजल्लदेवीका पतिको हैसियतले देशमा शासन चलाए ।[२०४] विधवा विवाहवाट जन्मिएको छोरीलाई समेत वैध मानिएको थियो । त्यसकारण समाजमा विधवा विवाहले मान्यता पाएको थाहा हुन्छ ।

विधवाले आफ्नो बाकी जीवन पतिको सम्झनामा एक्लै विताउन भन्ने सबैले चाहेको हुन्थ्यो । याज्ञवल्क्यस्मृतिमा जुन स्त्री पति जिवित छँदै अथवा मृत्यु भई सके पछि पनि परपुरुषसित सम्वन्ध राख्दैन, त्यस्तो स्त्रीले यस लोकमा कीर्तिप्राप्त गर्दछ र मृत्युपछि देवीसित क्रिडा (आनन्द) प्राप्त गर्दछ भनिएको छ ।[२०५] यसले विधवालाई सधैं पतिव्रता धर्ममा रहन उत्प्रेरित गरेको स्पष्ट हुन्छ । यद्यपि तत्कालीन नेवार समाजमा विधवा विवाह प्रचलित थियो । तर त्यस्तो विवाह सर्वमान्य नभई छिटपुट रूपमा मात्र हुने गरेको देखिन्छ । किनकी यस्तो विवाहलाई समाजमा राम्रो मानिन्दैन । भारतीय समाजमा पनि मध्यकाल र त्यस भन्दा अगाडि विधवा विवाहलाई राम्रो मानिन्दैन थियो । नाबालक अवस्थामा नै विधवा भएको भए तापनि त्यहाँको समाजले यस्तो विवाहलाई मान्यता दिएको थिएन ।[२०६] तर पनि यदाकदा त्यस्तो विवाहको प्रचलन रहेको पाइन्छ ।

विधवा विवाह प्रचलित हुनुको कारण समाजले पुत्रलाई महत्व दिनु हो । छोराको पिण्ड विना मोक्षप्राप्त हुँदैन भन्ने मान्यता प्रचलित हुँदै आएको हुँदा पुत्र रहित विधवाले पुत्र प्राप्ती हेतु आफ्नो देवर अथवा अन्य सपिण्ड पुरुषसित गमन गरी मनोवाञ्छित सन्तान उत्पन्न गर्नसक्ने प्रावधान छ ।[२०७] त्यस्तो विशेष परिस्थितिलाई आपतकाल भनिन्छ । यस किसिमको व्यवस्था गर्नुको तात्पर्य विधवालाई विवाह गरी दाम्पत्य जीवन बिताउनका



लागि नभई केवल पुत्र प्राप्तीको लागि मात्र हो । त्यस्तो अवस्थामा पुत्र उत्पन्न गर्नको निमित्त पनि ससुरा वा अरू ठूलावडा आफन्तको आज्ञा लिनु आवश्यक छ ।[२०८] कौटिल्यले विधवा विवाहप्रति उदारनीति अपनाएको पाइन्छ । विवाहित महिला ऋतुकालमा पुरुषसित सहवास नगर्नु धर्मको नाश गर्नु बरावर मानिएको छ । त्यसकारण विधवा महिलाले जम्मा सात पटकको मासिक धर्मसम्म मात्र अर्को विवाह नगरी बस्नु, त्यसपछि आफ्नो इच्छाअनुसार गर्नु भनिएको छ ।[२०९] अर्कोतिर पराशरस्मृतिमा विशेष अवस्था श्रृजना हुँदा विधवालाई दोस्रो विवाह गर्न अनुमति दिएको छ । विदेश गएका पतिको केही खवर छैन वा त्यस्तो अवस्थामा मरेको, सन्यास भएको, नपुंसक अथवा पतित भएको छ भने यी पांच आपत्तीहरूमा स्त्रीले अर्को पति लिन सक्छन् ।[२१०] यसरी पुत्र प्राप्तीको निमित्त विधवाले परपुरुषसित गमन गर्न सक्ने अवस्था सृजना गरी दिएको हुँदा विधवा महिलाले पुन: विवाह गर्ने चलन चलेको देखिन्छ । अर्कोतिर नेवार समाजमा महिलालाई आफ्नो पतिको मृत्यु पश्चात् पनि विधवा मानिन्दैन । यस समुदायमा कन्यालाई पहिलो रजस्वला हुनु भन्दा अगाडि "इही" संस्कार पूरा गर्ने परम्परावारे माथि उल्लेख भई सकेको छ । इही संस्कारमा सबै कन्याको भगवान विष्णुरूपी सुवर्ण कुमारसित विवाह भई सक्ने हुँदा उनको जीवनमा वास्तविक पतिको मृत्यु भएपनि विधवा नमान्ने जनविश्वास रहिआएको छ ।[२११] अर्कोतिर विवाहित महिलालाई आफ्नो पति मन नपरेमा वा शारिरीक अस्वस्थता रहेमा विवाहमा आफूलाई दिए जस्तै १० वटा सुपारी पतिलाई फिर्ता दिएर तत्काल सम्वन्ध विच्छेद गरी छुटकारा पाउन सक्ने परम्परा पनि रहँदै आएको छ ।[२१२] त्यस्तो अवस्थामा सम्वन्ध विच्छेद गरी सकेकी महिलाको पति मृत्यु भए पनि उनलाई विधवा मानिन्दैन । यी कारणहरूले गर्दा नेवार समाजमा विधवा विवाहले मान्यता पाएको देखिन्छ । वर्तमान समाजमा पनि विधवाको पुन: विवाह भएका घटना छिटपुट देख्न पाइन्छ । तर त्यस्तो विवाह कुनै सांस्कृतिक विधि पूरा गरी सम्पन्न गरिन्दैन । खासगरी यस्तो विवाह पुरुष र महिलाको इच्छाअनुसार हुने गर्दछ । वर्तमानमा विधवा विवाहलाई कानूनले समेत मान्यता दिएको देखिन्छ । विधवा महिलालाई कसैले झुक्याएर कन्याकेटी भनि भनी विवाह गरी दिएको अवस्थामा पनि विवाह गर्ने पुरुषले मंजुर नगरेसम्म त्यस्तो विवाह बदर नहुने कुरा मुलुकी (छैठौं संसोधन) ऐन, महल १७, विहावरी, नम्बर ८ मा उल्लेख गरिएको छ ।[२१३]

## विवाहको सांस्कृतिक पक्ष

विवाह पुरुष र स्त्री दुवैको निमित्त जीवनको महत्वपूर्ण मोड हो । विवाह भनेको यी दुईबीच शारीरिक तथा आत्मियरूपले जीवनको अन्तिम घडिसम्म अझ मृत्यु पर्यन्त परलोकमा समेत संगै रहने वाचासहितको पवित्र बन्धन हो ।[२४] त्यसकारण यो संस्कार कार्यन्वयन गर्दा विभिन्न धार्मिक तथा सांस्कृतिक विधिहरू पूरा गर्ने परम्परा छ । विवाहको प्रारम्भिक कार्य कुमार केटाको निमित्त उपयुक्त कन्याको खोजी गर्नु हो । केटा र केटीको निमित्त उपयुक्त जोडी मिलेपछि विवाहको कार्यक्रमबारे दुवै पक्षबीच अनौपचारिक रूपमा पटक पटक कुराकानी हुन्छ । अन्तिमपटकको कुराकानी विवाह पक्कासम्बन्धी हुन्छ । त्यसलाई विवाहको कुरा छिन्ने भनिन्छ । यसक्रममा केटाका बुवा, बाजे, काका, मामालगायत अन्य मान्यजनसहित लमीलाई साथमा राखी केटी पक्षको घरमा गई त्यहाँ उपस्थित केटीका बुवा, बाजे, काका, मामा, मान्यजनहरूसंगै बसी आपसी वार्तालापबाट विवाह गर्ने दिन र विवाहमा पूरा गर्नु पर्ने प्रक्रियाबारे तय गरिन्छ । सोही आधारमा विवाहको सबै सांस्कृतिक कार्यलाई अगाडि बढाउँछ ।

विबाहको पहिलो सांस्कृतिक कार्य केटा पक्षले केटीको घरमा सुपारी पठाउनु हो । यसलाई "ग्वयँ छोयगु" भनिन्छ । यसमा "क्वतपूजा" (नेवार समाजमा प्रचलित विशेष पूजाहरूमा प्रयोग गरिने एकप्रकारको पूजा थाली), र "सुकुण्डा" (दियो) को साथमा विशेष तरिकाले सजाइएको दशवटा सुपारसहित मिठाई रोटीका विभिन्न परिकार, दुलही हुनेलाई कपडा, श्रृङ्गारका समाग्रीहरू र गहनासमेत पठाउनु पर्दछ । सुपारी पठाउँदा आफन्त तथा लमी पनि संगै जाने चलन छ । त्यसरी पठाएको सुपारी केटीको घरमा पुगेपछि त्यसलाई एउटा कोठामा सजाई विवाह गर्ने केटीलाई अगाडि राखी "सुकुण्डा" बालेर केटीको घरमूली महिलाले "क्वत" मा रहेको पूजा सामग्रीबाट टीका र फूल लगाई केटा पक्षको घरबाट पठाएको सुपारी हातमा राखी दिन्छ । यस सांस्कृतिक कार्यको आशय सम्बन्धित केटा र केटीबीच विवाह बन्धन गर्ने पक्का गरी दुई परिवार बीच नाता सम्बन्ध प्रारम्भ भएको वास्तविकतालाई औपाचारिकता प्रदान गरिएको हो ।

विवाह कार्य शुभसाईतमा पूरा गरिन्छ । साईतको महत्वपूर्ण कार्य प्रारम्भ गर्नु भन्दा पहिला पितृलाई आह्वान गरी नान्दीमुखी श्राद्ध गर्ने



परम्परा छ ।[२५] श्राद्धको कार्य विवाह गर्ने कन्या र केटा दुवैको घरमा पूरा गर्नु पर्दछ । त्यसपछि मात्र विवाहसम्बन्धी मूल कार्य प्रारम्भ हुन्छ । केटी पक्षको घरमा विवाहको मूल कार्य अर्थात् स्वयंवरभन्दा केही अगाडि नै आफ्ना नाताकुटुम्ब, आफन्त, ईष्टमित्र सबैलाई भोज बोलाई नजिकका नातेदारहरूलाई सुपारीसमेत दिएर आशिष तथा बिदा लिन्छन् । साथै भोज आएका सबैले विवाह गर्ने कन्यालाई आफ्नो गच्छेअनुसार भौतिक वा आर्थिक उपहार (दाईजो) दिने चलन छ ।

विवाहको महत्वपूर्ण सांस्कृतिक कार्य स्वयंवर हो । त्यस दिन दुलाहा पक्षका नाताकुटुम्ब, ईष्टमित्र, आफन्त र छरछिमेकसहित बाजागाजासाथ आफ्नो घरआगनमा जम्मा भई विवाहको निमित्त ज्योतिषीले दिइएको साईतलाई भ्याइने गरी "क्वतपूजा" र एक जोडा "सुकुण्डा" (दियो बाल्ने सुकुण्डाकै स्वरूपको ठूलो बत्ती) बालेर दुलहीको घरमा जन्ती जान्छन् । हिजोआज "सुकुण्डा" लगायत ठूलठूलो मैनबती पनि बालेर लाने चलन छ । जन्तीमा सहभागी सबैलाई केटा र केटी अर्थात् दुलाहा र दुलही दुवै तर्फबाट पान र मसला (काजु, पेप्टा, बदम, ओखर, नरिवल, मिश्री, चकलेट, सुपारी, ल्वाङ, सुकमेल, अलैची आदि परिकार रहेको) पोको दिने चलन छ । जन्ती दुलहीको घरमा पुगेपछि दुलाहालाई केटीका मातापिताले सुकुण्डा बाली टीका र फूल लगाई दिएर स्वागत गरी भित्र्याउँछ । पुरोहितले दुलाहा र दुलही दुवैलाई एकै ठाउँमा राखी टीकाटालो र पूजासहित विधिविधान पूर्वक साईतको समयमा स्वयंवर गरी दिन्छन् । त्यसै समय कन्याले आफ्ना मातापितालगायत आफन्त सबैलाई सुपारी दिने र कन्यादानसम्बन्धी धार्मिक तथा सांस्कृतिक कार्य पनि हुन्छ । हुनत पहिला नेवार समुदायमा अहिले जस्तो जन्तीसित दुलाहा संगै जाने चलन थिएन । दुलाहाका पिता, आफन्त तथा इष्टमित्र मात्र जाने गर्दथे । त्यस्तो प्रथा तत्कालीन नेवार समुदायको आफ्नो विशेषता हो ।[२६] तर हिजोआज दुलाहासहित जन्ति जाने र त्यहाँ विवाहसम्बन्धी सबै किसिमका सांस्कृतिक विधि पूरा गरी दुलहीलाई संगै लिएर जन्तीसित फर्किने परम्परा छ । जन्ती फर्किने क्रममा दुलहीको घर नजिकै गणेश मन्दिर वा चारदोबाटोमा दुवै पक्षका सम्धिहरू आमुने सामुने उभिएर पुरोहितसमेत संगै राखी आपसमा नवदुलहीलाई दुलाहा पक्षले विशेष ध्यान दिनु पर्ने विषयमा वार्तालाप हुन्छ । त्यस्तो वार्तालापलाई "विचा:खँ ल्हायगु" (दुलहीलाई दुलाहा पक्षबाट

आफ्नो घरमा हेरचाह र स्याहार गर्नु पर्नेबारेको कुराकानी) भनिन्छ ।[२१७] यसक्रममा दुलहीका पिता वा संरक्षकले दुलाहा पिता वा संरक्षकलाई आफ्नो छोरी तपाईको घरमा पठाएको छु, राम्रो हेरचाह गरी उचित प्रशिक्षणसमेत दिनु होला भन्ने अनुरोध गर्छन् । दुलाहा पिता वा संरक्षकले त्यस अनुरोधलाई पूरा गर्ने प्रतिवद्धता जनाउँछन् ।

वर्तमान परम्पराअनुसार स्वयंवरपश्चात् दुलाहा दुलही जन्तीसंगै मोटरकारमा वसेर फर्किन्छन् । मोटरमा दुवै जना बसी सकेपछि मोटर का माथिबाट "दुर्फागा" (जरी जडित विशेषप्रकारको रातो खास्टो) अनिवार्य ओढाउनु पर्दछ । यसले नवविवाहित दुलही अरूको कुदृष्टिबाट सुरक्षित रहने विश्वास गरिन्छ । हिजोआज विवाहको क्रममा दुलाहा दुलही मोटरकारमा बसी जाने आउने भए तापनि पहिला त्यस्तो चलन थिएन । दुलाहीलाई विवाह गरी ल्याउँदा पालकी वा डोलीमा राखी बोकाएर ल्याइन्थ्यो । त्यसको निमित्त जन्ती जानु एक दिन अगाडि नै दुलहीको घरमा डोली पुऱ्याउने चलन थियो । तर त्यस्तो चलन अहिले देखिन्दैन ।

दुलहीको घरमा धार्मिक तथा सांस्कृतिकसम्बन्धी सबै विधि पूरा गरी दुलही लिएर जन्ती आफ्नो घरमा फर्किन्छ । दुलाहाको घरमा पनि केही सांस्कृतिक कार्य पूरा गर्नु पर्दछ । घरको मूलढोकामा दायाँबायाँ कलश राखी द्वार सामुन्ने "पोताय" (चामलको पिठोमा वेसार मिलाई बनाएको मिश्रण) ले अस्त्रयन्त्र र अस्त्रसिंहको चित्र लेखी त्यसको माथि लावा र अविर छर्केर तयार पारेको मण्डलमा दुलहीले टेक्न लगाई उनलाई घरकी महिलामूलिले भोटेतालाको साँचो समाउन लगाई माथि लैजान्छन् ।[२१८] तत्पश्चात् विवाहसम्वन्धी विधि प्रारम्भ हुन्छ । नवदुलहीबाट दुलाहाको घर मा सासु, ससुरा, धर परिवारका अन्य सदस्यलगायत नाताकुटुम्व सवैलाई "ग्वय् सायकेगु" (सुपारी दिने) कार्य त्यही वेला हुन्छ ।[२१९] विवाहको अर्को महत्वपूर्ण विधि "ह्वोकेगु" (दुलाहा र दुलहीबीच मेल गराउनु) हो । विवाहको समापनमा दुलाहा दुलही दुवैलाई सहभोजन गराउने परम्परा छ । त्यसलाई "थायभु नके" (फणिनि नयके) भनिन्छ ।[२२०]

नेवार समाजमा सुपारीको ठूलो महत्व छ । खासगरी विवाहको समयमा पतिपत्नी तथा अन्य नाता कुटुम्बबीच सम्बन्ध जोड्न र त्यसलाई त्याग्न सुपारी लिने र दिने गर्दै आएका छन् । पुरुष र कन्यावीच विवाह गर्न १० वटा सुपारी दिने परम्परा छ । विवाह गरी गएपछि नवदुलहीले पतीको घरमा सासु ससुरालगायत घरपरिवारका सवै सदस्य तथा अन्य



नाताकुटुम्लाई सुपारी दिन्छन् । त्यो परम्परा आपसमा नाता सम्वन्ध कायम गर्न विकास गरिएको हो । विवाह पश्चात् दुलहीले पतिको जात, थर, गोत्र प्राप्त गर्छन् । यसरी नजिकको नाता सम्वन्ध स्थापना गर्नमा सुपारीको महत्व रहेको पाइन्छ । एवंप्रकार दुलहीले विवाह गरी आफ्नो घर छोड्नु भन्दा अगाडि पनि आफ्नो माईती पक्षका सबैलाई सुपारी दिने परम्परा छ । प्रत्येक व्यक्तिले वंशानुगत आधारमा परिचय स्थापित गर्दछ । आफ्नो पिता जुन वर्ण, जात, थर वा गोत्रका हुन् उनका छोरा छोरी पनि सोहीअनुसार हुन्छन् । प्रत्येक कन्याले विवाहमा मातापिता लगायत नविकका सबै नातेदारलाई सुपारी दिएर आफ्नो जन्म सिद्ध जात, थर, गोत्र सबै त्यागी पतिको घरमा पुगेर त्यहाँ पनि सबैलाई सुपारी दिई आफ्नो लोग्नेको जात, थर र गोत्र प्राप्त गर्दछ । यसरी नेवार समाजमा सम्वन्ध जोड्न र त्याग्न सुपारी लिने दिने गर्दै आएको छ ।

विवाहको अर्को सांस्कृतिक कार्य केश वन्धन हो । विवाह भएको भोली पल्ट यसलाई पूरा गर्ने चलन छ । जसलाई स्थानीय भाषामा "संप्याकेगु" भनिन्छ । यसको लागि आवश्यक सामग्रीहरू दुलहीको माइतवाट पठाउँछ । यस परम्पराअनुसार दुलाहाले आफ्नो दुलहीलाई विधिपूर्वक केश बाँटी जुरो पार्ने, सिन्दूर छाउने, टीका तथा गाजल लगाई श्रृङ्गार गराउनु पर्दछ ।[२२१] खासगरी यो परम्परा ब्राह्मण, स्योस्यो (श्रेष्ठ), वज्राचार्य, शाक्य, तुलाधर जातिमा प्रचलित रहेको पाइन्छ । ज्यापू, नापित, चित्रकार जातिमा यस्तो परम्परा नभए पनि यस्तै स्वरूपको "वंजला वने" भनि देवीदेवताको मन्दिरमा लगि दुलाहाले दुलहीको सिउँदोमा सिन्दूरदान गर्ने चलन छ । मध्यकालीन समाजमा आमा बाबुको इच्छाअनुसार विवाह हुने गर्दथ्यो । त्यस्तो अवस्थामा विवाह पश्चात् पनि तिनीहरू दुवै एकअर्कासित अपरिचित जस्तै हुन्थ्यो । त्यसकारण यस परम्पराले नवदम्पतीमा रहेको लाजलाई अन्त्य गरी आपसी माया र प्रेम जगाउने उद्देश्यले यो परम्परा वसालेको देखिन्छ । त्यही परम्परा निरन्तर चल्दै आएको छ ।

विवाह भएको चार दिनमा केटीको घरवाट बुवा, बाजे, काका, मामालगायत आफन्तहरू जम्मा भई विवाह गरी पठाएको घरमा बेलुका छोरीलाई भेट्न जाने चलन छ । त्यो परम्परालाई "ख्वा:स्व वनेगु" (विहे गरी पठाएकी छोरीको मुख हेर्न जाने) भनिन्छ । दुलाहाको घरमा दुवै पक्षवीच भलाकुसारी गरी त्यस घरकी दुलहीलाई एउटा कोठामा बसाली

घरमूलीले सुकुण्डा बालेर फूल र टीका लगाई दिएपश्चात् मुख हेर्न गएका सबैले भेट्ने र गहना वा नगद उपहार दिने गर्छन् । त्यहाँको सबै कार्य पूरा गरी दुलाहा र दुलही दुवैलाई संगै लिएर फर्किन्छ । घरमा पुगेर दुलाहाले ससुराली खलकका सबैलाई सुपारी दिएर औपचारिक नाता सम्बन्ध स्थापित गर्छन् । त्यसको लगतै दुलाहा र दुलही दुवैलाई फिर्ता पुऱ्याई दिने चलन छ ।

**ज्या:थ जंक्व**

नेवार समुदायमा मनाइने संस्कारका विभिन्न अनुष्ठानहरूमध्ये "ज्याथजंक्व" पनि एउटा हो । मानिस बृद्धा अवस्थामा प्रवेश गरी निश्चित उमेरमा पुगे पछि यो संस्कार मनाईछ । "ज्याथजंक्व" नेपालभाषावाट आएको शब्द हो । यस भाषामा वुढोलाई "ज्या:थ" र पाऱ्नीलाई "जंक्व" भनिन्छ । "जंक्व" शब्द "जमराज" (यमराज) लाई "क्वत्यला" (दवाएर) मनाइने संस्कार भन्ने अर्थबाट सृजना भएको तर्क पनि पाइन्छ ।[२२२] यसर्थ क्रमिक रूपले बृद्धा अवस्थामा प्रवेश गरी धेरै वर्ष बाच्नु भनेको यमराजलाइ दवाएर जीवनमाथि विजय प्राप्त गर्नु भन्ने अर्थ लगाइएको छ । त्यसैले यो संस्कारलाई "ज्याथजंक्व" भनिएको हो । हुनत यसबारे संस्कार पद्धतिको कुनै नीतिशास्त्रमा उल्लेख भएको पाईदैन । त्यतिमात्र होईन मध्यकालीन दशकर्म पद्धतिका हस्तलिखितग्रन्थ र थ्यासफूहरूमा पनि केही उत्थान गरि एको छैन । तर यो संस्कार नेवार समुदायमा प्राचीनकालदेखि व्यवहारमा उत्तादैं आएको छ ।[२२३] संस्कार सम्बन्धी ग्रन्थहरूमा यसबारे केही लेखिएको नभए पनि मध्यकालीन छुट्टै हस्तलिखितग्रन्थहरूमा भने उल्लेख भएका छन् ।

मानिस बृद्धा अवस्थामा प्रवेश गरी उसको उमेर बढ्दै गएपछि यो संस्कारलाई विभिन्न चरणमा पूरा गरिन्छ । यस क्रममा व्यक्तिको उमेर ७७ वर्ष ७ महिना ७ दिन, घडी र ७ पलावाट यो संस्कार मनाउन प्रारम्भ भएर १०० वर्षभन्दा बढी बाच्न सकिएमा पाँच पटकसम्म मनाइने परम्परा छ । प्रत्येक पटक मनाइने यस संस्कारका अनुष्ठानहरूको नाम पनि फरक फरक छन् । वैदिक प्रतिष्ठान, काठमाडौंवाट प्रकाशित संस्कार सम्बन्धी पुस्तकमा ज्या:थजंक्वका प्रत्येक अनुष्ठानहरू निम्नअनुसार हुने उल्लेख गरिएको छ ।[२२४]



| | भीमरथारोहण | सहस्रचन्द्र | महारथ | दिव्यरथ | महादिव्यरथ |
|---|---|---|---|---|---|
| वर्ष | ७७ | ८३ | ८८ | ९९ | १०८ |
| महिना | ७ | ४ | ८ | ९ | ८ |
| दिन | ७ | ४ | ८ | ९ | ८ |

यसरी पाँच पटकसम्म मनाइने जंक्वका अनुष्ठानहरूको नाम र संस्कार पूरा गरिने समयबारे भने एक रूपता पाईदैन । संस्कृतिविद् सत्यमोहन जोशीले निम्न उल्लेखित नामबाट निम्न उमेरमा ज्या:थजंक्व मनाइने कुरालाई अगाडि सारेका छन् ।[२२५]

| | भीमरथ | सहस्रचन्द्रदर्शन | महारथ | देवयरथ | महादेवरथ |
|---|---|---|---|---|---|
| वर्ष | ७७ | ८३ | ८८ | ९९ | १०० |
| महिना | ७ | ४ | ८ | ९ | १० |
| दिन | ७ | ४ | ८ | ९ | १० |

ज्या:थजंक्व संस्कार नेवार समाजमा धेरै पहिलेदेखि चलन चल्तिमा रहँदै आएको कुरा माथि उल्लेख भई सकेको छ । यस संस्कारबारे मध्यकालीन विभिन्न हस्तलिखितग्रन्थहरूमा उल्लेख भएका छन् । ने. सं. ८१५ (१६९४ ई.) मा रचना गरिएको भीमरथारोहणसम्वन्धी हस्तलिखितग्रन्थमा यस संस्कारका अनुष्ठानहरूको नाम र संस्कार पूरा गरिने उमेरलाई निम्नअनुसार उत्किर्ण गरिएको छ ।[२२६]

| | भीमरथी | चन्द्रसहस | महारथ | देवरथ | राज्ञादेवरथ |
|---|---|---|---|---|---|
| वर्ष | ७७ | ८३ | ८८ | ९९ | १०० |
| महिना | ७ | ४ | ८ | ९ | १० |
| दिन | ७ | ४ | ८ | ९ | १० |

यस्तैगरी अर्को हस्तलिखितग्रन्थमा उल्लेखित ज्या:थजंक्व संस्कार पनि यहाँ उल्लेखनीय छ । नेपाल संवत ८२४ मा लेखिएको भीमरथारोहण यज्ञ विधि नाम ऐतिहासिक स्रोतमा यस संस्कारका अनुष्ठानहरूलाई निम्नअनुसार नामकरण गरी अनुष्ठानहरू मनाउने उमेरबारे पनि प्रकाश पारिएको छ ।[२२७]

| | भीमरथ | सहस्रचन्द | महारथ | देवरथ | महादेवरथ |
|---|---|---|---|---|---|
| वर्ष | ७७ | ८३ | ८८ | ९० | १०० |
| मास | ७ | ४ | ८ | ९ | १० |
| दिन | ७ | ४ | ८ | ९ | १० |

माथि उल्लेखित ग्रन्थहरूको अध्ययनबाट "ज्याथजंक्व" मनाइने अनुष्ठानको नाम र त्यसलाई पूरा गरिने व्यक्तिको उमेरमा केही भिन्नता रहेको छ । खासगरी अन्तिम पटकका दुईवटा चारौं र पांचौं पटकका अनुष्ठानहरूबारे मत एकता देखिन्दैन । यसको खासकारण यी दुईटा अनुष्ठानहरू धेरै कम प्रचलित हुनु हो । समाजमा पहिलो, दोस्रो र तेस्रो पटकसम्म जंक्व मनाएका मानिसहरू देखिन्छन् । तर चौथो र पांचौ पटक मनाइएका दुर्लभ मानिन्छ । मानिस १०० बर्षसम्म कमै मात्र जिवित र हन्छन् । तसर्थ अन्तिम दुई पटकको जंक्व गर्ने समयमा एकरूपता नदेखिएको भन्न सकिन्छ ।

"ज्याथजंक्व" संस्कारको प्रचलित नाम भीमरथारोहण पनि हो । विभिन्न चरणहरूमा मनाइने यस उत्सवमा पहिलो अनुष्ठान पूरा गर्दा जंक्व गरिने व्यक्तिलाई "भीमरथ" नामको रथमा आरोहण गराउने हुंदा यस उत्सवलाई भीमरथारोहण भनिएको हो । "ज्याथजंक्व" सम्बन्धी मध्यकालीन हस्तलिखित ग्रन्थहरूको नाम नै "भीमरथारोहण विधि" रहेको छ ।[२२८] यसै सन्दर्भको एउटा संस्कृत श्लोकमा पनि "भीमरथी" उल्लेख भएको छ ।[२२९] त्यसकारण यस संस्कारलाई मनाउंदा अहिले पनि भीमरथारोहण भन्ने गरिन्छ ।

यस संस्कारलाई "उष्णीष विजयोत्सव" पनि भनिन्छ । "उष्णीष" को अर्थ बेटाली (पगरी) र "विजयोत्सव" को अर्थ उपलब्धिको समारोह हो । यस संस्कारमा पूरा गरिने सांस्कृतिक कार्यहरू मध्ये जंक्व गर्ने व्यक्तिको शिरमा बेटाली (पगरी) पहिराउनु एउटा प्रमुख कार्य हो । संस्कार पूरा गर्ने क्रममा जंक्व गर्ने व्यक्तिले धेरै वर्षसम्म जिउन सकेर विधिविधान पूर्वक बेटाली प्राप्त गर्ने हुंदा यसलाई "उष्णीष विजयोत्सव" भन्ने गरेको ज्ञात हुन्छ । यसको प्रचलन पहिलेदेखि चल्दै आएको छ । मध्यकालीन ऐतिहासिक स्रोतमा पनि यो नाम उल्लेख भएको छ ।[२३०]

"ज्याथजंक्व" एउटा उत्सवको रूपमा मनाइने संस्कार हो । वृद्ध व्यक्ति धेरै वर्ष सम्म जिवित रहन सकेको उपलक्षमा त्यसको सम्मान स्वरूप यो संस्कार मनाउने गरेको माथि ठाउं ठाउंमा उल्लेख भई सकेको छ ।



पहिला मानिसहरू धेरै बर्षसम्म बाच्न गाह्रो थियो । औषधि विज्ञान र चिकित्साशास्त्रको विकास भएको थिएन । अर्कोतिर उपचार विधि परम्परागत थियो । सबैजसो उपचार आयुर्वेदिक र झारफुकमा भर पर्नु पर्दथ्यो । सरसफाइको वातावरणप्रति मानिसहरूको खासै चासो थिएन । यसले गर्दा मानिस धेरै बाच्न सक्दैन थिए । त्यस्तो अवस्थामा ७७ - ७८ बर्ष बाच्नु भनेको धेरै ठूलो कुरा हो । अर्कोतिर ज्योतिषिय दृष्टिकोणबाट मानिसको निश्चित उमेरलाई ग्रह-दशालगायत शारीरिक समस्या उत्पन्न हुन सक्ने खतरा महशुस गरिन्छ । नेवार समुदायभित्र मानिसको उमेरमा ८ (आठ) को अङ्क जोडिएको ८, १८, २८ जस्ता बर्षहरूलाई ग्रहदशाको दृष्टिकोणले राम्रो मानिन्दैन । त्यस्तो बर्षहरूमा ग्रहदशा राम्रो नहुने र शारीरिक समस्याहरू आई पर्ने जनविश्वास रहिआएको छ । त्यस्तो बर्षलाई "च्याह दशा" भनिन्छ । मानिसको उमेर ७७ बर्ष पूरा हुने बितिकै ७८ बर्षमा प्रवेश गर्दछ । परम्परागत धारणाअनुसार उसको लागि त्यो बर्ष "च्याह दशा" हुन जान्छ । त्यस्तैगरी एउटा संस्कृत श्लोकमा पनि ७७ बर्ष ७ महिनाको ७ औं रात निकै खतरापूर्ण हुन्छ भनिएको छ । हुनत त्यस्तो ८ र सो अङ्क जोडिएको उमेर यस भन्दा अगाडि पनि प्रत्येक १० बर्षमा आइरहन्छ । त्यतिबेला पनि यस्तै समस्याहरू आई पर्ने विश्वास गरिन्छ । तर ७८ बर्षमा प्रवेश गर्दा मानिस धेरै बृद्ध भएर शारीरिक रूपले अति कमजोर भई सकेका हुन्छन् । यद्यपि थोरै मानिस जो शारीरिक रूपले सबल हुन्थ्यो तिनीहरू धेरै बर्षसम्म बाच्न सक्दथ्यो । जसले ७७ बर्ष, ७ महिना, ७ दिन, ७ घडी र ७ पला पार गर्न सक्यो त्यस्तो व्यक्तिलाई जीवनमाथि विजय प्राप्त गरेको सम्झिने गरिन्थ्यो । एवंप्रकार ८३ बर्ष, ८८ बर्ष, ९९ बर्ष वा १०० बर्षभन्दा बढी बाच्न सकियो भने त त्यसले जीवनबाट ठूलै उपलब्धि हासिल गरेको मान्नु स्वाभाविक हो । त्यसैले यस समाजमा लामो समयसम्म जीवित रहने व्यक्तिले देवत्व प्राप्त गर्छ भन्ने विश्वास रहँदै आएको छ ।[२३१] त्यही देवत्वमाथि विजय प्राप्त गरेको उपलक्षमा मनाइने संस्कार भएको हुँदा यसलाई उत्सवको रूपमा लिइन्छ । त्यो परम्परा नेवार समाजमा निरन्तर चल्दै आएको छ ।

यो संस्कार मनाउँदा वृद्ध पतिपत्नी दुबैलाई संगै राखी मनाइंछ । वृद्ध पतिको निश्चित उमेर पुगेर जंक्व मनाउंदा उनकी पत्नीको उमेर नपुगेकोसित कुनै अर्थ राख्दैन । उनलाई पनि संगै राखी यो संस्कार पूरा गरिन्छ । यसरी दुबैलाई संगै राखी संस्कार पूरा गर्नुको आफ्नै अर्थ

रहेको पाइन्छ । हिन्दू समाजमा पुरुषले गर्ने कुनै पनि ठूला धार्मिक अनुष्ठानहरूमा पत्नीलाई पनि त्यसको अधिकारी मानिन्छ । त्यस्तो धार्मिक अनुष्ठानहरू पूरा गर्दा पत्नी पनि संगै हुनु पर्ने शास्त्रीय माध्यता रहिआएको छ । एक्लो पुरुष यज्ञको लागि योग्य मानिन्दैन ।[२३२] पत्नीको उपस्थिति विना धार्मिक कार्य संचालन गरेमा कार्य सिद्ध हुँदैन भन्ने परम्परा रहिआएको छ । त्यसकारण अथर्ववेदमा महिलालाई यज्ञको अधिकारी मानिएको छ ।[२३३] नेवार समाजमा यो परम्परा पहिलेदेखि चल्दै आएको छ । काठमाडौं उपत्यकाका मल्लशासकहरूले कोटिहोम गर्दा शास्त्रीय कथन अनुरूप पतिपत्नी संगै बसेर पूरा गरेका उदाहरणहरू पाइन्छन् । भक्तपुरका अन्तिम मल्ल राजा रणजित मल्लले आफ्ना इष्टदेवतालाई प्रशन्न पार्न ने.सं. ८७४ (१७५३ ई.) मा कोट्याहुती यज्ञ गर्दा उनकी रानी जयलक्ष्मीसहित भएर पूरा गरेका थिए ।[२३४] एवंप्रकार ललितपुरका शासक सिद्धिनरसिंह मल्लले २१ वटा गजुर भएको कृष्णमन्दिर निर्माण गरी स्थापनाको दिन कोट्याहुति यज्ञका बेला आफनी धर्मपत्नीसहित भएर संचालन गरेको उल्लेख पाइन्छ ।[२३५] कान्तिपुरका शासक प्रताप मल्लले पनि पशुपति क्षेत्रमा मन्दिर माथि गजुर चढाई सुवर्ण शालिक स्थापना गर्दा आफ्ना दुबै पत्नीहरूसहित भएर सो धार्मिककार्य पूरा गरेको देउपात्तन पशुपतिक्याम्प भित्रको ने. सं. ७७५ (१६५४ ई.) को शिलालेखमा वर्णन गरिएको छ ।[२३६] नेपालको इतिहासमा यस्ता धेरै उदाहरणहरू पाइन्छन् । जंक्व संस्कारको कार्यविधिले पनि धार्मिक दृष्टिकोणवाट ठूलो महत्व राख्दछ । यो स्वएं एउटा शुभ लक्षणको उत्सव हो । यस कुरालाई जंक्व संस्कारमा थप गरिने अरू संस्कारका अनुष्ठानहरूले पुष्टि गर्दछ । कुनै पनि शुभ कार्य गर्न ज्योतिषिद्वारा साईत हेराई उनले दिएको समयमा कार्य प्रारम्भ गर्ने चलन रही आएको छ । तर जंक्व संस्कार मनाइएको वेला अरू शुभ काम गर्नका लागि छुट्टै साईत हेर्नु पर्दैन । त्यसैले जंक्व उत्सव भएको ठाउंमा मानिसहरू ईही (वेल विवाह) र ब्रतवन्ध संस्कार पूरा गर्ने चलन छ । साथै कतिपयले देव देवीका नयाँ मूर्तिहरू ल्याई त्यसमा जीवदान गराउन जंक्व होममा राख्ने गर्दछन् । यसबाट जंक्व उत्सवको धार्मिक र आध्यात्मिक महत्वलाई दर्शाउछ । त्यसकारण यस अनुष्ठानमा पनि पतिपत्नी संगै राखेर पूरा गर्ने प्रचलन रहेको थाहा हुन्छ ।

मानव जीवनमा पूरा गरिने संस्कारका विभिन्न अनुष्ठानहरू मध्ये "ज्याथजंक्व" बाहेक अरू सबै अनुष्ठानहरू छोराछोरीको निमित्त उनका



मातापिताले पूरा गरिन्छ । तर "ज्याथजंक्व" संस्कार मातापिताले पूरा गर्ने नभई तिनीहरूको निमित्त उनका छोरा बुहारीले पूरा गर्छन् । बृद्धबृद्धाले आफ्नो लामो जीवन परिवारका लागि संघर्षमा बिताएको हुन्छ । त्यसरी जीवन व्यथित गरेका व्यक्ति बृद्ध भएपछि उसका सन्तानले आदर र सम्मान गर्नु मानबिय कर्तव्य हुन्छ । यहि भावनावाट प्रेरित भएका नेवार समुदायले आफूलाई जन्म दिई सुख शान्ति, सुरक्षालगायत समृद्ध बनाउन जीवन अर्पण गरेका आफना बृद्ध बाबु आमालाई निश्चित उमेर पुगे पछि देवत्व भावना राखि पूजा आराधना गर्ने परम्परा छ । त्यसकारण जंक्व संस्कारका प्रत्येक अनुष्ठानहरूमा छोरा बुहारीको प्रमुख भूमिका रहने गरेको हो ।

## सांस्कृतिक पक्ष

"ज्या:थ जंक्व" संस्कारको महत्वपूर्ण पक्ष पूजा विधि हो । यसलाई ब्राम्हणले संचालन गर्दछ । यस कार्यलाई पूरा गर्ने दायित्व जंक्व गर्ने व्यक्तिको जेठो छोरा र बुहारीको हो । पूजाको सिलसिलामा आवश्यक सामग्रीहरू व्यवस्थित गरी कलश स्थापना गरिन्छ । त्यसको छेउमा पातका टुक्राहरू आशनको रूपमा राखी त्यस माथि चिउरा वा चामल राख्छन् । साथै अर्को एउटा धानको थुप्रो, नाङ्लो, कुचो, सिन्हमू (सिन्दूरदानी) ज्वलान्हयाकं (आर्पी) र जंक्व गर्ने व्यक्तिको चिनासमेत पूजा स्थानमा राखी कलश र पातका टुक्राहरूमा राखिएको चामलमा विभिन्न देवी देवताको आह्वान गरी पूजा प्रारम्भ गर्छन् । "ज्या:थ जंक्व" को मूलकार्य मध्ये र थयात्रा एउटा हो । त्यसकारण जंक्व पूरा गर्ने व्यक्तिलाई रथारोहण गराउन पूजास्थलमा एउटा रथ पनि राखिन्छ ।

पूजा प्रारम्भ भएपछि जंक्व गर्ने व्यक्तिलाई उनका जेठो छोरा र बुहारीले संयूक्तरूपमा भोटेतालाको सांचो समाउन लगाई जलधारा बहाएर पूजा स्थानमा ल्याई आशन ग्रहण गर्न लगाउंछ । ब्राम्हणद्वारा पूजा कार्यलाई अगाडि बढाई सो कार्य सकिए पछि जंक्व गर्ने व्यक्तिलाई टिका लगाई लुगा र पून्नेचा (जंक्व गर्ने व्यक्तिलाई कानमा लगाई दिने विशेष प्रकारको गहना) दिई श्रृगार गर्न दिन्छन् । यसैक्रममा पुरुषलाई वेताली र महिलालाई लूँची (सुनको टिका) लगाई दिनु पर्दछ । सो कार्य पूरा गरी सिङ्गो सुपारी, ल्वाङ्ग र पैसा राखेको सातवटा पानका पातहरूमा जंक्व गर्ने व्यक्तिलाई टेकाउन लगाएर रथमा बसाउने काम हुन्छ । त्यसको लगत्तै

रथमा पूजा गरी योमरी (चाकू र पिंढेको तिलको मिश्रणलाई भित्र राखी अण्डाकार बनाएर पकाएको विशेष प्रकारको नेवारी रोटी), तौला (चाकू र तिलको लड्डु) तथा फलफूलका टुक्रासमेत राखिएको काठको पाथीले रथको शिरमा तीन पटक खन्याएर अभिषेक गर्ने परम्परा छ । त्यस रथको अगाडि एउटा दीयो चढाउनु पर्दछ । त्यहां उपस्थिति सबैले रथमा सिन्दूर र ताय् (लावा) छर्केर अभिषेक गर्छन् । यस पछि रथयात्रा सुरु हुन्छ । रथलाई छोरा, नाति, पनाती, नाताकुटुम्ब सबैले तानेर स्थानीय गणेश मन्दिर परिक्रमा गराई फर्काएर पुन: पहिलेकै स्थानमा विश्राम (या: न्यायेका) गराउंछ । तत्पश्चात् "कोला" (तामाको भांडो) मा "सिंपौ" (काठको सानो पिर्का) र कपडा एक टुक्रा राखी त्यसको माथि "जंक्व" गरेका व्यक्तिको खुट्टा बिसाउन लगाएर सबैले ती भाग्यशाली व्यक्तिको पाउ स्नान गराई त्यसको जलबाट आफ्नो शरीर सिंचन गरी दक्षिणा राखेर आशिष लिने काम गर्दछन् । यसै उपलक्षमा सबैले उनलाई कपडा, फलफूल, दक्षिणा आदि उपहार दिने चलन छ । सो कार्य पूरा गरी जंक्व गर्ने व्यक्तिको ईच्छानुसार ब्राम्हणलाई दान दिने काम हुन्छ । जेठो छोराले त्यहां पुन: देवी देवताको पूजा गरी उपस्थित सबैलाई टिका लगाई दक्षिणा दिन्छन् । धार्मिक तथा सांस्कृतिक सबै कार्य सम्पन्न गरी ब्राहमणद्वारा कलशको पानीले सबैलाई अभिषेक गराएर पछि "ज्या:थ ,जंक्व" संस्कारको कार्य पूरा हुन्छ ।

बृद्ध व्यक्तिको उमेरअनुसार पांच पटकसम्म मनाइने "ज्याथजंक्व" को पूजा र सांस्कृतिक विधि एकै प्रकारको छ । यद्यपि तेस्रो पटकको अनुष्ठानमा जंक्व गरिएका व्यक्तिलाई रथयात्रा गरी गणेश मन्दिर परिक्रमा गराएर फर्काएपछि उनलाई झ्यालबाट भित्र्याउने चलन छ । एवंप्रकार पांचौं पटकमा जंक्व गरिएका व्यक्तिलाई ध्यांपोभित्र राखि त्यस ध्यांपोलाई फुटाएर निकाल्ने चलन छ । यस परम्परालाई पूर्नजन्मको प्रतिक मानिन्छ । "ज्या:थ जंक्व" गर्ने समयमा लोग्ने स्वास्नी दुवै जीवित छन् र लोग्नेको उमेर जंक्व गर्ने समयमा पुगेको छ भने स्वास्नीको उमेर कम भए पनि दुवैलाई संगै जंक्व गर्ने परम्परा छ । यस्तैगरी कुनै व्यक्तिको परिवारमा पतिको भन्दा पत्नीको उमेर बढी छ र पत्नीको उमेर जंक्व गर्ने समय पुगेको भए पतिको उमेर नपुगेको भए पनि पत्नी संगै राखी यो संस्कार मनाउने चलन रही आएको छ ।[२३७] यस अवसरमा नाता कुटुम्ब,



आफन्तलगायत इष्टमित्र सबैलाई बोलाएर भोज खुवाईछ । यस अवसरको भोजमा मासुको कुनै परिकार हुंदैन ।

### अन्त्येष्टि संस्कार

मानिसको मृत्युपछि उनको पार्थिव शरीरलाई उचित तरीकाबाट विधि पुऱ्याई तह लगाउने र मृत्युबाट लागेको आशौचलाई शुद्धीकरण गर्ने प्रक्रियालाई अन्त्येष्टि संस्कार भनिन्छ । यो मानव जीवनको अन्तिम संस्कार हो । मानबलाई पूरा गरिने संस्कारका अन्य अनुष्ठानहरू अन्त्येष्टि संस्कार को पनि ठूलो महत्व छ । मानव जीवनको यस लोकको यात्रा सफल या असफल हुनमा जन्म साईतको भूमिका भए जस्तै परलोकको यात्रा सुखमय वा दुखमय बनाउनमा पनि अन्त्येष्टि संस्कारको पनि विशेष महत्व हुन्छ भन्ने मान्यता रहिआएको छ ।[२३८] यस अन्तर्गत पूरा गर्नु पर्ने विभिन्न प्रक्रियाहरू छन् । त्यस मध्ये पहिलो कार्य अर्द्धजलमा राख्नु हो । घरमै मृत्यु भएको घटनाबाहेक जीवनको अन्तिम घडीमा पुगेको व्यक्तिलाई मृत्युवरण पूर्व घाटमा लगी प्राण त्याग गर्ने अवस्थामा पुगेपछि ब्रम्हनालमा राख्ने परम्परा छ । शिरानीमा नारायणको मूर्ति कुंडिएको चेप्टो र मानिस सुताउन पुग्ने गरी भिरालो पारेर नदीको किनार घाटमा डुबाई राखेको ढुङ्गालाई ब्रम्हनाल भनिन्छ । प्राण त्याग गर्न लागेको व्यक्तिलाई ब्रहमनालमा राखी कम्मर भन्दा मुनीको भाग पानीमा डुबाएर राख्छन् । यस्तो परम्परालाई अर्द्धजलमा राख्ने भनिन्छ । मानिसको शरीरमा नौवटा द्वारहरू हुन्छन् । नाक, कान, आंखा र मुखसमेत गरी जम्मा सातवटा द्वारहरू शिर भागमा र बाकी दुई बटा मलद्वार र मुत्रद्वार नाभी भन्दा मुनी हुन्छन् । ती नौ द्वारमध्ये मानिसको प्राण कुनै द्वारबाट पनि त्याग हुन सक्छ भन्ने धारणा रहिआएको छ । नाभी भन्दा माथिको सबै द्वारलाई शुद्ध र तलको द्वारलाई अशुद्ध मानिन्छ ।[२३९] अशुद्ध द्वारबाट प्राणवायु त्याग भएमा उसको नराम्रो ठाउंमा पुनर्जन्म लिन्छ भन्ने मान्यता छ । त्यसकारण मृत्युगमन गर्न लागेको व्यक्तिको प्राणवायु अशुद्ध द्वारबाट त्याग नहोस भन्ने उद्देश्यले उनको शरीरको तल्लो भागलाई पानीमा डुबाएर अर्द्धजलमा राख्ने गरेको थाहा हुन्छ ।

हिन्दू नेवार समाजमा प्रचलित यो परम्परा धेरै पहिलेदेखि चल्दै आएको हो । मध्यकालीन समाजमा मृत्युको समिपमा पुगेका व्यक्तिलाई ब्रम्हनाल अर्थात् अर्द्धजलमा राखेका धेरै उदाहरणहरू पाइन्छन् । बलभद्र

नामका व्यक्ति ने. सं. ८०४ (१६८३ ई.) मा मृत्यु हुँदा पशुपति अर्द्धजलमा राखेको घटनालाई यहाँ उदाहरणको रूपमा लिन सकिन्छ ।[२४०] ब्रहमनालमा राखी प्राण त्याग गर्न लाग्दा आफन्त सबैले तुल्सीको पात हातमा राखी पानी खुवाउने परम्परा छ । अर्द्धजलको परम्परा भारतको बंगाली समाजमा पनि प्रचलित रहँदै आएको छ । त्यस समाजमा यस परम्परालाई "अन्तर्जली" भनिन्छ ।[२४१]

## मृत्यु पर्यन्तको क्रिया

घरमै मृत्युवरण गरेको अवस्थामा घर वा आगनमा गोवरले लिपपोत गरी कुश छर्केर त्यसको माथि मृतकको पार्थिव शरीरलाई उत्तर तिर शिरानी वनाएर उतानो पारी सुताई माथिबाट एउटा सेतो कपडाले छोपी राख्छन् । त्यसवाहेक "सलिं" (माटोको प्याला) मा तेल राखी शिरानी र पाइतानिर एक-एक वटा दीयो बाली दिन्छ । साथै मृतको मुखमा स्वर्ण धातु र शिरानीमा एउटा सानो चक्कु वा हतियार राख्ने चलन छ । मृतकको पार्थिव शरीरमा कहीं कतै भड्की राखेको हंस र नराम्रो तत्व प्रवेश गर्न नपाउन् भन्ने आशयले यस्तो परम्परा प्रचलनमा रहेको विश्वास गरिन्छ ।

नेवार समुदायमा धार्मिक, सामाजिक, सांस्कृतिक आदि कार्यहरू गर्नको निमित्त गुथि (गुठी) को व्यवस्था गरी राखेको हुन्छ । उल्लेखित कार्यहरू सामूहिक सहयोगको प्रयासबाट पूरा गर्नको लागि गुथिको व्यवस्था गरिएको हो । त्यस्तैगरी कसैको मृत्यु हुँदा आपसी सहयोगद्वारा त्यसको दाहसंस्कारको निमित्त "सीगुथि" (मृतकको दाह संस्कार आवश्यक सहयोगसम्वन्धी कार्य गर्ने) र "सनागुथि" (मृतकको साथमा मलामी जाने) छुट्टै गुथिको गठन गरी राखेको हुन्छ । यो प्रथा नेवार समुदायको आफनो विशेषता हो । गुथिका कुनै सदस्य परिवारको घरमा मृत्यु हुँदा त्यसको खवर पाउने बितिकै सबै सदस्य परिवारको घरवाट एक-एक जना उपस्थित भई मृतकको घर र दीपमा समेत सहयोग पुऱ्याउन जान्छन् । हिजोआज नेवार समुदायमा पनि आधुनिकतासँगै गुथिको प्रचलन विस्तारै लोप हुन थालेको छ ।

मृत्यु पर्यन्त शवलाई विधिपूर्वक दाह संस्कार गर्न गुठियारहरू जम्मा भई सबै मिलेर आवश्यक कार्यलाई अगाडि बढाउने परम्परा रहिआएको छ ।[२४२] मृतकको घर परिवार गुथिको सदस्य भइरहेको छ भने मृत्युको जानकारी सम्वन्धित गुठियार मार्फत् सबै गुठियार कहाँ



पठाउँछ । गुथि भए गुठियार जम्मा भएर र गुथि नभए आफन्त-छरछिमेक मिलेर दाहसंस्कारको निमित्त लाश उठाउने कार्य गर्छन् । घाटमा लान नपाउँदै घरमै मृत्यु भएमा निश्चित प्रक्रिया पूरा गर्नु पर्दछ । अन्त्येष्टिको निमित्त शवयात्रामा लानु भन्दा अगाडि पार्थिव शरीरलाई पूर्ण रूपमा प्राण त्याग गरी सकेको हो भन्ने थाहा पाउन "म्ह ग्येले" (पार्थिव शरीर माड्ने) प्रचलन छ । विभिन्न प्रक्रियाद्वारा मृत्यु भई सकेको हो भन्ने कुरा पुष्टि भई सकेपछि मृतकको शवलाई दाह संस्कारको निमित्त दीपमा लैजान्छ । यसलाई "सीथं यनेगु" (सी थना यनेगु) भन्दछ । शवयात्रामा लानु अगाडि "पाखा कुं थने" (हाँडीमा भुस, गुँइठा र काठका केही टुक्राहरू भरी आगो बनाउने) गर्नु पर्दछ । त्यही हाँडीमा बालेको आगोवाट चितामा दागवती दिने चलन छ । हाँडीमा आगो बाली सकेपछि दागवत्तीको कार्य पूरा नभएसम्म त्यसलाई निभ्न दिनु हुँदैन र निभेमा अशुभ हुन्छ भन्ने मान्यता छ । यो परम्परा तत्कालीन परिस्थितिको उपज मान्न सकिन्छ । पहिलेको समाजमा आजको जस्तो सजिलो तरीकावाट मसानमा आगो उपलव्ध हुँदैन थियो । त्यसको निमित्त घरवाट नै आगो व्यवस्था गरी लान पर्दथ्यो । बीचवाटोमा आगो निभे दागवतीलाई आगोको समस्या हुनसक्थ्यो । त्यसकारण बीचमा आगो निभ्न नदिने तर्फ सावधानी जगाउन "अनर्थ" हुने धारणा विकास गरिएको देखिन्छ । त्यो प्रक्रिया कालान्तरमा गएर परम्परागत विधि बन्न पुग्यो ।

## दाह संस्कार

अन्त्येष्टि संस्कारको एउटा महत्वपूर्ण पक्ष शवयात्रा हो । नेवार समाजमा शवलाई दीपमा पुऱ्याउँदा कसाही (नेवार समुदायको एउटा जाती विशेषको) बाजा बजाएर लाने चलन थियो । शवयात्रामा मृतकका छोरा, नाताकुटुम्ब, छिमेकीलगायत गुठियारहरूसमेत मलामी जानु पर्दछ । चितामा दागवती दिनु भन्दा अगाडि केही सांस्कृतिक कार्यहरू पूरा गर्नु पर्दछ । मृतकको लाशलाई अर्द्धजलमा राखी आफन्तहरू सबैले एक अञ्जुली पानी मुखमा चढाउँछन् । त्यसरी पानी चढाउँदा मृतकको सबै पाप नाश होस भन्ने कामनासहित गंगा, यमुना, सरस्वती तथा विभिन्न तीर्थस्थलको नाम उच्चारण गर्ने भनिएको छ ।[२४३] दागवत्ती दिने व्यक्तिले लाशको पाईतालानिर भा: (कारन्जितरका जातिले) अर्थात् महाब्राह्मण जातीले "च्वोका वजी" (निफनेर आएको धुलो चिउरा) वाट श्राद्ध गराउनु पर्दछ ।

मृतकको आत्माले राम्रो ठाउँमा बास लिन जाने मार्गमा कुतत्वको प्रभाव रहेको भए त्यसलाई पन्छाउन "च्वोका बजी" बाट श्राद्ध गर्ने गरेको मानिन्छ । पार्थिव शरीरलाई दाह संस्कार गर्दा मृतकका सन्तानले अग्नी दिन्छन् । लाश जलाउनका निमित्त पिताको मृत्युमा जेठो छोरा र माताको मृत्युमा कान्छो छोराले अग्नी दिने चलन छ । सन्तान नभएकाहरूको मृत्यु हुँदा नजिकको आफन्त वा अन्य व्यक्तिबाट अग्नी दिन लगाउँछ । यो परम्परा पहिलेदेखि चल्दै आएको हो । मध्यकालमा भक्तपुरका शासक जितामित्र मल्लको ने. सं. ८२९ (१७०८ ई.) मा मृत्यु हुँदा उनका छोरा भूपतिन्द्र मल्लले दागवत्ती दिएको उदाहरण पाइन्छ ।[२४४] अन्त्येष्टि क्रियामा मृतकको अग्नी संस्कारलाई एउटा महान यज्ञ सम्झिने परम्परा छ । एउटा हस्तलिखितग्रन्थमा दागवत्ती दिंदा आहुति स्वरूप धेरै श्लोकहरू बाचन गर्नु पर्ने उल्लेख छ ।[२४५] मृतकको लोभ मोह अन्त गरी दिव्यलोक प्राप्तीको कामनार्थ त्यसरी होम गरिन्छ । जीवन दर्शनअनुसार हिन्दू समाजमा मृत्युलाई मुक्ति मानिएको छ । मृत्यु भनेको आत्मालाई परब्रह्म परमात्मामा मिलन गराउनु हो । मानव जीवनलाई चेतनशिल शरीर मानिन्छ । समाजमा यसलाई ८४ लाख अन्य जन्मपछि मात्र प्राप्त हुने विश्वास रहिआएको छ । सोही चेतन शरीरको माध्यमद्वारा मानिसले सत्कर्म गरी जीवनलाई मुक्ति दिलाउने प्रयास गर्नु पर्दछ । तर सो जीवलाई आफ्नो शरीरप्रति अत्यन्त आसक्त बनाई दिन्छ । त्यसले मृत्युपश्चात् आत्मालाई परब्रह्म परमात्मामा लीन गराउन गाह्रो हुन्छ । मानिसलाई मृत्युपछि अग्नि संस्कार गरेर शरीरलाई भष्म गराएपछि जीवको शरीरप्रतिको आसक्तता नाश भएर जाने विश्वास गरिएको छ । त्यसकारण जीवले शरीर छोडेर गएपश्चात् शरीरलाई पंचतत्वमा मिलान गराउन अग्नी संस्कार गर्ने विधान बनाइएको हो ।[२४६]

लाशलाई पूर्णरूपमा जलाई भष्म पारेपछि त्यसको खरानीबाट मृतकको सम्झनामा आकृति बनाई पुन: एकपटक चिउराको धुलो सामग्रीबाट श्राद्ध गर्ने र सो कार्य पूरा गरी खरानीलाई जम्मा पारेर नदीमा बगाई दिन्छ ।[२४७]

अन्त्येष्टि कार्य आफन्त तथा गुठियारहरू सबैको आपसी सहयोगबाट सम्पन्न गर्ने भए तापनि त्यो कार्य द्विजहरूबीच मात्र सीमित थियो । किनभने यस्तो कार्यमा शूद्रले स्पर्श गर्नु हुँदैन भन्ने मान्यता प्रचलित हुँदै



आएको छ । मनुस्मृतिमा ब्राह्मण र अरूको शव शूद्रले छुन र त्यससम्बन्धी अरू कार्य गर्न दिनु हुँदैन । यदि त्यसो गर्न दिएमा मृतकले स्वर्गप्राप्त गर्नमा बाधक हुन्छ भनिएको छ ।[२४८] वास्तवमा शूद्र स्वयम् अशुद्ध वा बाधक होइन । उसले लाशलाई स्पर्श गर्दैमा कुनै अनर्थ हुने पनि देखिन्दैन । तर तत्कालीन समाजले शूद्र वर्णलाई नीच काममात्र जिम्मा दिएको हुँदा तिनीहरू फोहरी र अशुद्ध देखिएको हो ।

### शवलाई विसर्जन गर्ने तरीका

नेवार समाजमा पार्थिव शरीरलाई अग्नीमा दाह गर्ने र जमीनमा गाड्ने यी दुवै परम्परा प्रचलित छ । सामान्यतया शवलाई अग्नीमा दाह गरिन्छ । तर विशेष परिस्थितिमा भने जमीनमा गाड्ने चलन छ । "बा:रा:" (गुफा) राखेकी कन्या कथंकदाचित "बा:रा:" अवधिमा मृत्यु भएमा त्यसलाई बाहिर ल्याउनु हुँदैन भन्ने मान्यता समाजमा प्रचलित हुँदैआएको छ । त्यसकारण मृतक "बा:रा:" कन्याको शवलाई सबै महिलाहरू मिलेर "बा:रा:" राखेको घरको जमीनमा गाड्छ । एवंप्रकार दूधे बालकको मृत्यु भएमा त्यसको शवलाई पनि गाड्ने परम्परा छ । स्मृतिमा दुईवर्ष भन्दा कम उमेरका शिशु मृत्यु हुँदा त्यसको शवलाई बस्ती बाहिरको पवित्र भूमिमा गाड्नु भनिएको छ । एवंप्रकार कपाली थरका समाजमा पनि मृतकको लाशलाई जमिनमा गाड्ने परम्परा छ ।

माथि उल्लिखित विशेष परिस्थितिमा बाहेक सामान्य अवस्थामा सबैको लाशलाई जलाउने चलन छ । यस विधिलाई सबभन्दा राम्रो र उपयुक्त मानिन्छ । मानिसको मृत्यु अन्य कारणहरू बाहेक रोगव्याधिबाट पनि हुन सक्दछ । त्यसरी मृत्यु भएका व्यक्तिको लाश पशुपंक्षीलाई खुवाउने वा जमीनमा गाड्दा त्यसको रोगका किटाणुबाट वातावरण संक्रमित हुने डर हुन्छ । अर्कोतिर मृतकको लाशलाई गाड्दै जाँदा पछि गएर जमीनको समस्या हुन सक्दछ । तर दाहक्रियामा त्यस्तो कुनै समस्या उत्पन्न हुँदैन । रोग लागेका मानिसको लाशमा रहेका रोगका जिवाणुसमेत जलेर नष्ट हुन्छ । साथै ठाउँको पनि समस्या पर्दैन । रोगको संक्रमण र जमीनको समस्या केही नहुने हुँदा अग्नीदाह क्रिया निकै व्यावहारिक छ ।

अग्नीदाह कार्य पूरा गरी मृतकका छोराहरूले नदीमा नुहाई धोती लगाउँछन् । मलामीमा सहभागीहरूले पनि नुहाउने वा हात, गोडा र मुख धोई नदीको पानीले शरीर सिंचन गरी आगो र फलामको समेत स्पर्श

गर्दै शुद्ध पार्दछन् । साथै दागबती दिएका र दिपमा लाश दाहसंस्कार गरेर आएका सबै आफन्त तथा नजिकका नातेदारहरूलाई घरभित्र प्रवेश गर्नु अघि चोखो पानीले आचमन गराउन लगाई सर्स्यू र तोरी आगोमा पोली त्यसको धुँवा ग्रहण गरेर नून र अदुवा मुखमा राखेपछि मात्र शुद्ध भएको मानि घरभित्र प्रवेश गर्न दिन्छ । यो प्रक्रियालाई स्थानीय भाषामा "बलिं पिइगु" भनिन्छ ।[२४९] मशानमा विभिन्न अशुभ तत्वहरू हुनसक्छन् । त्यस्तो तत्व दागबती दिएका वा मलामीमा गएका व्यक्तिहरूको शरीरमा पसेर घर भित्र छिर्न नसकुन भन्ने उद्देश्यले यस्तो विधिलाई अवलम्बन गरेको हो ।

## आशौचको परम्परा

घरपरिवारमा कसैको मृत्यु हुँदा परिवारका सदस्यहरूलगायत आफन्तले समेत आशौच मान्ने परम्परा छ । आशौचमा निश्चित अवधिसम्म धार्मिक तथा सांस्कृतिक कुनै पनि कार्य नगरी अलग रहनु पर्दछ । निर्धारित अवधि भुक्तान गरी शुद्धिकरणपश्चात् विभिन्न प्रक्रिया पूरा गरी आशौच मुक्त हुन्छ । मनुस्मृतिमा रक्त सम्बन्ध भएका व्यक्तिको मृत्यु हुँदा आफन्त सबैलाई दश दिनसम्म आशौच लाग्दछ भनिएको छ ।[२५०] याज्ञवल्क्यस्मृतिमा अलि फरक व्यवस्था गरिएको छ । जसअनुसार क्षेत्रिले बाह्र दिन, वैश्यले पन्ध्र दिन, शूद्रले तीस दिन र धर्मात्मा शूद्र भए पन्ध्र दिनमात्र आशौच बार्नु भनिएको छ ।[२५१] यसबाट धर्मलाई बढी महत्व दिएको बुझिन्छ । ब्राह्मण जाति धार्मिक र जजमानी कार्यमा संलग्न हुने हुंदा तिनीहरूले दश दिनमात्र आशौच बार्नु पर्ने प्रावधान राखिएको देखिन्छ । तर मध्यकालमा सबै द्विज नेवारले १० दिनमात्र आशौच बार्ने गरेको पाइन्छ । ब्राह्मण वर्णका एक व्यक्तिको ने. सं. ८०२ (१६८१ ई.) मा मृत्यु हुँदा उनका परिवार १० दिन आशौचमा बसेका थिए ।[२५२] अन्य वर्णमा पनि यही परम्परा थियो । ललितपुर हतिगलको जोशी थरका एक व्यक्तिको ने. सं. ७९३ (१६७२ ई.) मा मृत्यु भयो । त्यसमा उनको परिवारका सदस्यहरू दश दिनमात्र आशौच बसेको देखिन्छ ।[२५३] आशौच बसेकाले दशौं दिनमा आआफ्नो परम्पराअनुसार पुरुषहरू बिहान खोलामा गई नाऊद्वारा कपाल खौरी, नङ्ग काटेर पूर्ण शरीर स्नान गरी शुद्ध भई आआफ्नो घर फर्किने र महिलाहरू घरमा नाऊबाट नङ्ग काट्न लगाएर शुद्धी कार्य गर्छन् । यसलाई "दुव्यंके" (सुद्धिकार्य) भनिन्छ ।



शुद्धीकरणको कार्य पूरा भएपनि अन्य धार्मिक तथा सांस्कृतिक कार्य चलाउन उपयुक्त मानिन्दैन । यसको लागि "लत्या" अर्थात् पैतालीस दिन भुक्तान गरी विधि विधान पूर्वक विभिन्न सांस्कृतिक कार्य पूरा गर्नु पर्दछ । त्यसपछि मात्र पूर्णरूपले शुद्ध भएको मानिन्छ । पैतालीस दिनको विधि पूरा नगरी मृतकको परिवारका सदस्यहरूले देवीदेवताको पूजा तथा अन्य पितृ कार्य संचालन गर्नु हुँदैन । सो दिन गृहशुद्ध पारी पुरोहितद्वारा पितृलाई लौकिक पिण्ड दिई (श्राद्ध गरी) कलशार्चन पूजा पश्चात् मात्र परिवार तथा आफन्त सबै पूर्ण शुद्ध भएको मानिन्छ । मध्यकालीन एउटा ऐतिहासिक घटनावलीमा ४५ दिनको शुद्धिकार्य पूरा नभएको हुँदा दशैं तथा तिहारका सबै धार्मिक र सांस्कृतिक कार्य रोकिएको कुरा टिपोट गरिएको छ । हुनत लामो समयसम्म आशौच मान्ने परम्पराले घरपरिवार तथा आफन्तहरूको सामाजिक व्यवहारमा बाधा पुग्न सक्दछ । अर्कोतिर नेवार समुदायमा हरेक महिना जसो चाडपर्व, सांस्कृतिक उत्सव र समय समयमा पुरा गर्नु पर्ने संस्कारहरू अगाडि आइरहन्छ । एउटा घरमा हुने मृत्युको घटनाले उसको आफन्त सबै कहाँ संचालन हुने धार्मिक तथा सांस्कृतिक कार्य रोकिन जान्छ । त्यस्तो बाधा अड्चन फुकाउन ४५ (पैतालिस) दिनको आशौचको कार्यलाई १३ (तेन्ह) दिनमा नै पूरा गरी चोख्याउने परम्परा पनि चलाउँदै आएका छन् । त्यस्तो परम्परा मध्यकालमा पनि थियो । कान्तिपुरका राजा नृपेन्द्र मल्लकी रानी जयलक्ष्मी देवीको ने. सं. ८६३ (१७४२ ई.) मा मृत्यु हुँदा १३ औं दिनमा सम्पूर्ण शुद्धिकार्य पूरा गरी तलेजुको पूजासमेत चलाइएको थियो ।[२५४] यसले पैतालिस दिन आशौच बार्ने परम्परा रहे तापनि सामाजिक तथा धार्मिक जीवनलाई सरलीकरण गर्न तेन्ह दिनमा पूर्ण शुद्धीकरण गर्ने चलन रहेको थाहा हुन्छ ।

अन्त्येष्टि संस्कारमा व्यक्तिको मृत्यु भएको दिनदेखि आशौच लाग्दछ । दश दिनसम्म जुठो बारी सोही दिन विधिपूर्वक जुठो फुकाई, एघारौं दिनमा एकादशको श्राद्ध, बान्हौं दिनमा घरसु (घसु), र पैतालीस दिनमा "लत्या" को कार्य पूरा गर्ने परम्परा नेवार समाजको सामाजिक मान्यता बनेको छ । तर कहिले काँही परिस्थितिवस बाधा अड्चन फुकाउन परेमा ती विधिहरू निश्चित अवधि भन्दा अगाडि नै पूरा गर्ने चलन छ । यस्तो चलन अहिले मात्र रहेको होईन, मध्यकालमा पनि बाधा अड्चन फुकाउने परम्परा थियो । कान्तिपुरका एक जना राजकुमारको ने. सं. ८३२ (१७११ ई.) मा मृत्यु हुँदा विधिपूर्वक आशौच पूरा गरेको

थिएन । त्यसवेला ४ दिनमात्र जुठो बारी पाँचौं दिनमा एकादश, छैठौं दिनमा घसु र सातौं दिनमा नै लत्याको विधि पूरा गरेका उदाहरण पाइन्छ ।[२५५] तर सबै आशौचमा त्यो विधि लागु हुदैछ । परिस्थितिवस वाधा उत्पन्न भएमा मात्र त्यसरी चाँडै आशौच पूरा गर्ने गरेको बुझिन्छ । किनभने उल्लिखित तरीकावाट चाँडै विधि पूरा गरेको घटना २५ वर्ष यता पहिलो भएको कुरा सोही घटना टिपोट गरिएको थ्यासफुमा उल्लेख छ ।

संस्कार पूरा नभएका बालबालिकाको मृत्यु भएमा पनि माथि उल्लेख गरिएको अवधिसम्म पूरा आशौच मान्नु पर्दैन । नीतिशास्त्रले समेत त्यस्तो बताइएको छ । मनुस्मृतिमा चूडाकरण संस्कार नभएका बालकको एकदिन र चूडाकरणभई सकेमा तीनदिन मात्र आशौच बार्नु भन्ने उल्लेख छ ।[२५६] शास्त्रगत आधारमा कन्यालाई अन्नप्राशनपछि अर्को संस्कार पूरा गर्ने परम्परा छैन । तिनीहरूलाई एकैपटक विवाह संस्कारमा सम्मिलित गराउनु भनिएको छ । त्यसकारण विवाह नभएकी कन्याको मृत्यु हुँदा दाँत उम्रिन्दै गरेका बालकको मृत्यु हुँदा सरह एक दिनमात्र आशौच बार्ने भनिएको हुनसक्दछ । तर नेवार समाजमा त्यस्तो कन्याको फरक ढङ्गले आशौच बार्ने गरेको पाइन्छ । मध्यकालीन नेवार समाजमा आठ महिनाको कन्या मृत्यु हुंदा पनि चारदिन आशौच बारेको उदाहरण पाइन्छ ।[२५७] तसर्थ नेवार समुदायले शास्त्रीय नीतिनियमको प्रचलन आफ्नो ठाउँमा रहे तापनि आफ्नो अनुकूलता, समय र परिस्थितिलाई पनि महत्व दिएको पाइन्छ । तर आशौच अनिवार्य रूपमा पूरा गर्नु पर्ने विधि हो । आफ्ना आमा बाबु वा हाड नाताका जो कोही मृत्यु हुँदा पनि सम्बन्धित सबैले आशौच बार्नु पर्दछ । यो अनिवार्य सामाजिक मान्यता हो । त्यसकारण नेपाल सरकारले यसलाई कानूनी रूपमै बाध्य पारिएको उदाहरण पाइन्छ । जङ्गबहादुरको पालामा तयार भएको नेपालको पहिलो मुलुकी ऐनमा आफूलाई जन्माउने बाबु आमाको मृत्यु हुँदा कसैले आशौच बारेको छैन भने त्यस्तो छोरालाई २० रुपैंञा दण्ड जरिवाना गरी काजक्रिया गर्न लगाउने र जुठो बार्नु पर्ने हाडनाताका मानिस मर्दा कसैले आशौच नबारिएमा त्यस्तोलाई ५ रुपैंञा जरिवाना गर्ने कानूनी व्यवस्था गरिएको थियो ।[२५८]



## पादटिप्पणी

१) राजवली पाण्डेय, *हिन्दू संस्कार,* वाराणसी: चौखम्बा विद्याभवन, १९९५ ई., पृ. १९ ।

२) *कौटलीय अर्थशास्त्र* ४.३.७८.५१, उदयवीर शास्त्री, (अनुवादक), लाहौर: मेहरचन्द्र लक्ष्मण दास, १९२५ ई., (प्रथमावृत्ति) ।

*"रक्षोभये रक्षोघान्यथर्ववेदविदो मायायोगविदो वा कर्माणि कूर्यः ॥"*

३) जयशङ्कर मिश्र, *प्राचीन भारतका सामाजिक इतिहास,* पटना: विहार हिंदी ग्रंथ अकादमी, १९८६ ई., पृ. २८५ ।

४) नारायण प्रसाद अधिकारी, *हाम्रा सोह्र संस्कार,* प्रकाशन स्थान छैन: सुशिल कुमार गोशली, वि.सं. २०६३, पृ. २ ।

५) पाण्डेय, *पूर्ववत,* पादटिप्पणी संख्या १, पृ. १-५ सम्म ।

६) *ऐजन,* पृ. २२ मा उल्लेखित ।

७) *ऐजन,* पृ. २१ र २२ मा उल्लेखित ।

८) *धर्मशास्त्र संग्रह,* श्रीबाबु साधुचरणप्रसादजी (सं.), बम्बई: खेमराज श्रीकृष्णदास प्रकाशन, १९५५ ई, पृ. १३३ मा उदृत ।

९) *ऐजन,* पृ. १३१ मा उदृत ।

१०) हस्तलिखितग्रन्थ, *संस्कार पद्धति,* राष्ट्रिय अभिलेखालयमा रहेको माईक्रोफिल्म नं. बी ३६।१४ ।

११) विनोदमान राजभण्डारी, *जन्मदेखि मरणोपरान्त सम्मका संस्कार,* काठमाडौं: गीता राजभण्डारी, ने.सं. ११२८ (वि.सं. २०६५), पृ. ६ ।

१२) हस्तलिखितग्रन्थ, *शूद्रसंस्कार पद्धति,* राष्ट्रिय अभिलेखालयमा रहेको माईक्रोफिल्म नं. बी ४४७।१४, फोलियो संख्या ३६ ।

*"पुष्पभाजन याय थंकादिन ब्राहूमणन कलशार्च्चन विध्यंयाय"* ।

१३) पद्म श्रेष्ठ, *नेवार,* काठमाडौं: स्यस्यः समाज, वि.सं. २०६२, पृ. ४७ ।

१४) हस्तलिखितग्रन्थ, *दशकर्म पद्धति,* राष्ट्रिय अभिलेखालयमा रहेको माईक्रोफिल्म नं. बी ३६८।१८, फो सं. ८ ।

*"स्वस्तिक सबं सोचकंते ॥ उपतनयाचके लुसिंपाचके ॥ मोडल्हूयके ... ॥"*

१५) हस्तलिखितग्रन्थ, *दशकर्म पद्धति,* राष्ट्रिय अभिलेखालयमा रहेको माईक्रोफिल्म नं. बी ३६८।१९, फो सं. ३० ।

१६) हस्तलिखितग्रन्थ, *पूर्ववत्,* पादटिप्पणी संख्या १४, फो. सं. १५ ।

१७) *याज्ञवल्क्यस्मृति,* १.११, श्रीमिहिरचन्द्रवीरचिता, मुंबई: कल्याण, वि.सं. १९८० (१९२३ ई.) ।

१८) हस्तलिखितग्रन्थ, *दशकर्म पद्धति*, राष्ट्रिय अभिलेखालयमा रहेको माईक्रोफिल्म नं. बी. ३६।७, फो. संख्या २२ ।

१९) धनवज्र वज्राचार्य, *पूर्वमध्यकालका अभिलेख*, काठमाडौं: ने.ए.अ.केन्द्र, कीर्तिपुर, वि.सं. २०६८, पृ. २८५ ।

२०) कमल प्रकाश मल्ल (सं.), *ए डिक्शनरी अफ क्लासिकल नेवारी*, काठमाडौं: नेपालभाषा डिक्शनरी कमिटी, २००० ई, पृ. ४८५ ।

*"शरीलस दतनांओ सूया मचा धाय"* र

*"धनम्ली पार्वत्याम् गंगायाम् शरीलस दतम्"* ।

२१) याज्ञवल्क्यस्मृति १.७९, *पूर्ववत*, पादटिप्पणी संख्या १७ ।

*"षेडशर्तुर्निशा: स्त्रीणं तासु युग्मासु संविशेत् ।*

*... पर्वाण्याद्याश्च वर्जयेत्"* ।

२२) हस्तलिखितग्रन्थ, *पूर्ववत*, पादटिप्पणी संख्या १०, फो.सं. २ ।

*"अथ गर्भाधान विधि: ॥ रजस्वला जुकोंङु स्नान*

*याचकं विधान थोते ॥ अष्टम दिन प्रभात स्नान"* ।

२३) *गोभिलीयगृह्यकर्मप्रकाशिका*, शुकदेववर्म्म (भाषा अनुवादक), १९३२ ई., पृ. १८२ ।

२४) हस्तलिखितग्रन्थ, *पूर्ववत*, पादटिप्पणी संख्या १४, फो. सं. ३० ।

२५) कृष्णप्रसाद भट्टराई, *संस्कारपद्धति*, काठमाडौं: प्रमुख संवाद सचिवालय राजदरवार, वि.सं. २०४६ (१९८९ ई.), पृ. ११२, विवाहपद्धति ।

२६) हस्तलिखितग्रन्थ, *पूर्ववत*, पादटिप्पणी संख्या १४, फो. सं. २९ ।

*"ॐ ततो गर्भाधान विधि: नारी प्रथम रजस्वला दृष्ठ ।*

*स्नान याचके, दुवने ।"*

२७) *ऐजन*, फो. सं. ३१ ।

२८) ललितपुर उपमहानगरपालिका गावहाल निवासी बर्ष ६५ को पुरोहित श्री कोमलेश्वर राजोपाध्यायको भनाइअनुसार ।

२९) अधिकारी, *पूर्ववत्*, पादटिप्पणी संख्या ४, पृ. ७ ।

३०) एस.पी. "आसा" (श्रीप्रसाद उपाध्याय घिमिरे), *हिन्दू संस्कृतिका ब्यावहारिक र मनोवैज्ञानिक पक्ष*, काठमाडौं: सुरेशप्रसाद पराजुली, वि. सं. २०५८, पृ. २४ ।

३१) मिश्र, *पूर्ववत*, पादटिप्पणी संख्या ३, पृ. २९० मा उल्लेखित ।

*"पुंसवनमिति कर्मनामधेयं येन कर्मणाा निमित्तेन*

*गर्भिणी पुमासमेव सुते सत्पुंसवनम्"*

आश्वलायन गृह्यसूत्र, १४.९



३२) साधुचरणप्रसादजी (सं.), *पूर्ववत*, पादटिप्पणी संख्या ८, पृ. १३१ मा उल्लेखित ।

*"गर्भाधानं तु प्रथमस्तृतीय मासि पुंसव: ।"*

व्यासस्मृति १.१६,

३३) याज्ञवल्क्यस्मृति १.११, *पूर्ववत*, पादटिप्पणी संख्या १७ ।

*"गर्भाधानमृतौ पुंस: सवनं स्पन्दनात्पुरा ।"*

३४) साधुचरणप्रसादजी (सं.), *पूर्ववत*, पादटिप्पणी संख्या ८, पृ. १३४ मा उल्लेखित ।

*"पुष्यादित्याश्विनीहस्तविधिमूलोत्तरा मृग: ।*

*हरिपूषानुराधाश्व शस्तं पुंसवनादिकम् ॥"*

लघ्वाश्वलायनस्मृति ४.२

३५) हस्तलिखितग्रन्थ, *पूर्ववत*, पादटिप्पणी संख्या १५, फो. सं. ९ ।

*"ॐ अथ पुंशवन कर्म कूर्यात ॥ शुभ दिवसे षष्टि मास कृत्वा"* ।

३६) हस्तलिखितग्रन्थ, *पूर्ववत*, पादटिप्पणी संख्या १०, फो. सं. ७ ।

*"पुत्र कामार्थी पूजयेत्"* ।

३७) हस्तलिखितग्रन्थ, *पूर्ववत्*, पादटिप्पणी संख्या १४, फो. सं. ३२ ।

३८) *वाराही (वृहत्) संहिता*, अध्याय ७६ श्लोक १, सुखानन्दमिश्रात्मज, बलदेवप्रसादजी मिश्रकृत (हिन्दू अनुवाद), बम्बई: खेमराज श्रीकृष्णदास प्रकाशन, सन् २००० ई., ।

*"रक्ताधिके स्त्री पुरुषस्तु शुक्रे नपुंसकं शोणितशुक्रसाम्ये ।*

*यस्मादत: शुक्रविवृद्धिदानि निषेवितव्यानि रसायनानि ॥"*

३९) *पारस्कर गृह्यसूत्र*, १.१४.३, गोपालशास्त्रि (टिप्पणीकार), बनारस: चौखम्बा संस्कृत सीरीज अफिस, १९२५ ई., ।

४०) हस्तलिखितग्रन्थ, *पूर्ववत्*, पादटिप्पणी संख्या १४, फो. सं. ३२ र ३५ ।

*"ओषधी पूजा ... शेष ओषधी ्पोसचूये ्थंसोस्य ्तोडते"* ।

४१) साधुचरणप्रसादजी, *पूर्ववत्*, पादटिप्पणी संख्या ८, पृ. २२३ मा उल्लेखित ।

*"जायमानो वै ब्राह्मणस्त्रिभिर्ऋणी जायते ब्रम्हचर्येणर्षिभ्यो*

*यज्ञेन देवेभ्य: प्रजया पितृभ्य इति ॥"*

बौधायनस्मृति २.९.९।

४२) भट्टराई, पूर्ववत्, *पूर्ववत्*, पादटिप्पणी संख्या २५, पृ. १३९ विवाहपद्धति ।

४३) याज्ञबल्क्यस्मृति १.११, *पूर्ववत*, पादटिप्पणी संख्या १७ ।

*"षष्ठेऽष्टमे वा सिमंतो ...॥"*

४४) साधुचरणप्रसादजी, *पूर्ववत्,* पादटिप्पणी संख्या ८, पृ. १३४ मा उल्लेखित ।

"सीमन्तोन्नयनं चैव चतुर्थे मासि तद्भवेत् ॥"

लध्वाश्वलायतस्मृति, ४.१

४५) पारस्कर गृह्यसूत्र १.१४.२, *पूर्ववत्,* पादटिप्पणी संख्या ३९ ।

४६) साधुचरणप्रसादजी, पूर्ववत्, पादटिप्पणी संख्या ८, पृ. १३५ मा उल्लेखित ।

*"पतिपुत्रवती नारी गर्भिणीमुपदेशयेत् ।*
*मा कुरु क्लेशदं कर्म गर्भसंरक्षणं कुरु ॥"*

लध्वाश्वलायतस्मृति, ४.१४

४७) रत्नकाजी वज्राचार्य, *नेवाः संस्कार संस्कृतिया ताःचा,* यें (काठमाडौं): वज्राचार्य प्रकाशन, १९८९ ई, पृ. ५४ देखि ६५ सम्म ।

४८) शङ्करमान राजवंशी, "यक्षमल्लको समयका निश्चित संवत् र तिथिमितिहरु", *पूर्णिमा,* पूर्णाङ्क १०, काठमाडौं: भोलानाथ पौडेल (संशोधन मण्डल), वि.सं. २०२३ (१९६६ ई.), पृ. २० र २१ ।

४९) हस्तलिखितग्रन्थ, *पूर्ववत्,* पादटिप्पणी संख्या १४, फो. सं. ३५ ।

*"अथ सिमन्तोनयन विधि ॥ अष्टमेमासे, शुभ दिवसे कर्तव्य"* ।

५०) *ऐजन,* फो. सं. ३६ र ३७ ।

*"सगोन, अष्टमंगल बस्त्र, संप्या, यज्ञनापं पूजा याय्"* ।

५१) हस्तलिखितग्रन्थ, *बौद्ध कर्मकाण्ड,* राष्ट्रिय अभिलेखालयमा रहेको माईक्रोफिल्म नं. बी १०५।१४, फो. सं. ७ ।

५२) हस्तलिखितग्रन्थ, *पूर्ववत्,* पादटिप्पणी संख्या १४, फो. सं. ३७ ।

*"ॐ श्रीश्वते लक्ष्मी ॥ अञ्जन ॥ ॐ तच्चक्षुर्देव ॥*
*उडुम्बर समिध युग्मं ॥ ॐ शिवोनामासि ॥ कुश पुष्पत्रीणि ।"*

५३) मिश्र, *पूर्ववत्,* पादटिप्पणी संख्या ३, पृ. २९१ ।

५४) *मनुस्मृति* २.२९, हरगोविन्द शास्त्री (हिन्दी टिकाकार), बाराणसी: चौखम्वा संस्कृत सीरिज अफिस, १९६५ ई. ।

*"प्राङ् नाभिवर्धनात् पुंसो जातकर्म विधीयते ।*
*मन्त्रतः प्राशनञ्चास्य हिरण्यमधुसर्पिषाम् ॥"*

५५) याज्ञबल्क्यस्मृति १.११, *पूर्ववत्,* पादटिप्पणी संख्या १७ ।

*"मास्येते जातकर्म च ॥"*

५६) मिश्र, *पूर्ववत्,* पादटिप्पणी संख्या ३, पृ. २९२ मा उल्लेखित ।

*"जातं कुमारं स्वं दृष्ट्वा स्नात्वाककनीय गुरुन् पिता ।*
*नान्दीश्राद्धावसाने तु जातकर्म समाचरेत् ॥"*

आश्व.गृहृयसूत्र १.१५.१ देखि ४ सम्म



५७) हस्तलिखितग्रन्थ, *पूर्ववत्,* पादटिप्पणी संख्या १०, फो. सं. १८ ।

*"ब्राह्मण स्वस्तिबाचनं पठेत् ॥ ततो नाभिछ्वेदनं ॥ अभिषेका॥*
*चंदनादि ॥ आर्शिवादं ॥ ॐ प्राणाय स्वाहा ॥ ॐ पा ॥*
*ॐ अपा ॥ ॐ ... ॥ ॐ मनाज्योति प्रतिष्ठा ॥ आरथी ॥*
*पुनः पिता अभिषेकादि कारयत ॥ इति जातकर्म विधि ॥"*

५८) डि.आर.रेग्मी, *मेडिभल नेपाल,* भाग तीन, कलकत्ता: फर्मा के. एल. मुखोपाध्याय, १९६६ ई., पृ. १०४ थ्यासफु भाग ।

५९) हस्तलिखितग्रन्थ, *पूर्ववत्,* पादटिप्पणी संख्या १४, फो. सं. ४२ ।

*"अछिन्नायां, नाभ्यां, बालके ॥ धृत, मधु, सुवर्णातुन्तर्हितया, लवंग,*
*पितुर्हस्तेनामिकाशुष्ट योगेन मेधाजननार्थं प्राशनंचात ॥"*

६०) शङ्करमान राजबंशी, *ऐतिहासिक घटनावली,* काठमाडौं: वीरपुस्तकालय, वि.सं. २०२० (१९६३ ई.), पृ. २ ।

*"ने.सं. ७८७ ...श्री धनचाया काय वुव ... थ्व सोन्हु लिव ...*
*थ्व कुन्हु तोप मछिसे धृतकंवल डायका जुरो ।"*

६१) बलदेव जुजु, *नेवा संस्कार व उकिया विधि,* काठमाडौं: वैद्दिक प्रतिष्ठान, वि. सं. २०५६ (१९९९ ई.), पृ. ५ ।

६२) गोभिलीयगृह्यकर्मप्रकाशिका, *पूर्ववत,* पादटिप्पणी संख्या २३, पृ. १९९ ।

६३) साधुचरणप्रसादजी, *पूर्ववत,* पादटिप्पणी संख्या ८, पृ. ५ मा उल्लेखित ।

*"एवं कूर्यात्सुतस्यैव तुष्णीमेव च योषितः*
*केचिदिच्छन्त्यनादिष्टहोममन्त्रादिना परे ॥"*

लध्वाश्वलायनस्मृति

६४) वज्राचार्य, *पूर्ववत,* पादटिप्पणी संख्या ४७, पृ. ३६ र ४८ ।

६५) *ऐजन,* पृ. ५९, ६९ र ८० ।

६६) देबी प्रसाद लम्साल (सं.), *भाषावंशावली,* भाग २, काठमाडौं: पुरातत्व विभाग, नेपाल राष्ट्रिय पुस्तकालय, बि.सं. २०२३ (१९६६ ई.), पृ. ४१ ।

६७) गोपालसिं नेपाली, *दि नेवार्स,* बम्वई: यूनाइटेड एशिया पब्लिकेशनस्, १९६५ ई., पृ. ९० ।

६८) रेग्मी, *पूर्ववत्,* पादटिप्पणी संख्या ५८, पृ. ८४ थ्यासफु परिशिष्ट ।

*"ने.सं. ७९३ (... ई.) मा श्रीलक्ष्मीरामया म्हयाच वुव सतीकुन्हु*
*पुथिछाये मछिसे पूजा जुड द्वादसीस नाभीछेदन याय वलन्हि*
*त्रयोदशी लंड मचोड ॥ त्रयोदशी पुथिछा बिसर्जन याडा दु ॥"*

